# फलादेश जान्ने नियम

यो 'वृहद् भृगुसंहिता पद्धति' भित्र जन्मकालीन नवग्रहरूको फलादेश, बाऱ्है लग्नहरूको भित्र, प्रत्येक स्थानमा, प्रत्येक ग्रहको फल भिन्न-भिन्न रूपबाट सम्पूर्ण स्थितिहरूमा विस्तारपूर्वक लेखिएको छ। अतः कुनै पनि कुण्डलीको फलादेश हेर्नका लागि पहिले कुण्डलीको जुन लग्न हो, त्यसैमा हेर्नुपर्दछ, त्यसपछि कुण्डली भित्र बसेका नवग्रहलाई यथा स्थानबाट जुन-जुन जहाँ बसेको छ, त्यहाँ-त्यहाँबाट नै स्थानको फलादेश ज्ञान गर्नुपर्दछ; यही फलादेश सम्पूर्ण जीवनमा रहिरहन्छ र सबै लग्नको आरम्भमा जुन सन् र तारीखको फल लेखिएको छ, त्यो भाग्यको राम्रो-नराम्रो समयको ज्ञान गर्नका लागि हो। यसरी भाग्यको सम्पूर्ण स्थितिलाई तपाईं हेर्न-जान्न सक्नुहुन्छ।

यस बाहेक अर्को कुरा यो हो कि जसरी दुइटा पांग्रा नभई गाडी हिंड्न सक्तैन, ठीक त्यसै प्रकार जन्मको समयमा, कुण्डलीभित्र बसेका नवग्रहहरूको फलादेश, जीवनको एकातिर विशेष रूपले बराबर चल्दै रहन्छ र अर्कातिर पञ्चाङ्ग गतिको ग्रह गोचर प्रणाली अनुसार, नवग्रहहरूको सदैव स्थान परिवर्तन गर्दै रहनाले नवीन फल बनेर चल्दै रहन्छ। यतः यस प्रकरणमा जीवनका दुवै किनारा या सदैव कालसम्मको फलादेश चल्दै रहन्छ। अतः यसमा विंशोत्तरी दशाहरूको अलिकति पनि आवश्यकता छैन। अतः विंशोत्तरी दशाहरूको फल सर्वथा निर्मूल र निस्सार छ।

# विचार गर्नुपर्ने कुराहरू

वृहद् भृगुसंहिता पद्धति भित्र सुनौलो समयको ज्ञान प्राप्त गर्नका लागि यो बात विशेष रूपले विचार राख्नु पर्ने छ कि जन्मको समयमा, जुन व्यक्तिको ग्रह व्रत श्रेष्ठ वा बढी नेष्ट हुन्छन्, तिनको श्रेष्ठ वा नेष्ट फल; प्राणीको जीवनमा सदैव प्रबल रूपले नै काम गर्ने गर्दछ र अर्कातिर लग्न गोचरमा चल्ने ग्रहहरू पनि आफ्नू विशेष प्रभाव देखाउँदै रहन्छन् जस्तो कि हामीले दुवै प्रकारको यसमा लेखिदिएका छौं। यसको अतिरिक्त स्त्री र पुरुषहरूको, दुवै कुण्डलीहरूको समय जुन-जुन वर्षहरूमा उत्तम होला, त्यो वर्ष उत्तम नै रहने छ। अनि जुन-जुन वर्षहरूमा नजाति होला, त्यो झन अत्यधिक रहने छ। फेरि जुन-जुन वर्षहरूमा यौटाको जाति र अर्काको नजाति रहला, त्यो वर्ष सामान्य मानिने छ। यसै प्रकार कुनै पनि व्यापारमा, जति जना साझा गरेका हुन्छन्, तिनको लाभ-हानिको लागि पनि यही स्थिति जान्नु पर्दछ अर्थात् सबैको ग्रहयोगको समय राम्रो छ भने अधिक लाभदायक हुनेछ र एउटाको राम्रो र अर्काको नराम्रो छ भने सामान्य फल प्राप्त हुन्छ। अनि दुवैको नराम्रो छ भने हानि-लाभ पनि नराम्रो नै देखापर्दछ। यसै गरी पिता-पुत्रका ग्रहहरूको पनि प्रभाव छासमिसे हुन्छ, तर पुरुषको प्रभाव र स्त्रीको प्रभाव बर्ता रूपले नाफा-नोक्सानमा नै पर्दछ र एकाघरमा सँगै बस्ने सबै प्राणीहरूका ग्रहहरूको असर हानि-लाभमा प्रायः नपरी रहन्न।

# भविष्य जान्नको लागि

प्रत्येक व्यक्तिको जन्म कुण्डली भित्र जुन-जुन वा कुनै पनि ग्रह भाग्यस्थानको, राज्यस्थानको, लाभस्थानको, धनस्थानको तनस्थानको, सप्तम स्थानको र एकादश स्थानको स्वामी हुन्छ, त्यही-त्यही ग्रह, प्रत्येक पुरुषहरूको वा स्त्रीहरूको निम्ति उन्नति प्रदान गर्ने अधिकारी हुन्छ। अनि यी सबै ग्रहहरूको गति र चाला पञ्चाङ्ग भित्र, जब कहिले नवम स्थानमा, दसम स्थानमा एघारौं स्थानमा तथा पहिलो स्थानमा र द्वितीय स्थानमा एवं तृतीय स्थानमा, अनि चौथौ स्थानमा, पाँचौं स्थानमा अनि सातौं स्थानमा जब-जब कहिले आउने छन् तब-तब उन्नतिदायक समय रहने छ, तर यो कुरा ध्यानमा राख्न आवश्यक छ कि त्यस प्रकरणमा कुनै पनि ग्रह, यदि नीच राशिको भयो भने अथवा सूर्यबाट अस्त हुन्छ भने-त्यो ग्रहले आफ्नू उत्तम फल पूरा दिन सक्तैन। त्यसको अतिरिक्त कुनै पनि उत्तम स्थानको स्वामीग्रह जब-जब कहिले लग्नबाट छैठौं स्थानमा, वा आठौं स्थानमा वा बाह्रौं स्थानमा चल्दछन्, तब-तब त्यो समय राम्रो बित्न सक्तैन र मिथुन राशिको राहु तथा धन राशिको केतु-यी दुवैलाई छाडेर, अन्य कुनै पनि स्थानमा कुनै पनि राशिको राहु र केतु जब-जब कहिले आउँछन् तब-तब ती स्थानहरूमा अनेक कष्ट बाधा उत्पन्न अवश्य गर्दछन्। अनि जन्म कुण्डली भित्र, जन्मको समयमा जुन-जुन ग्रह शून्य अंशको बराबर हुन्छ, त्यस ग्रहको फल राम्रो भए पनि विशेष राम्रो प्राप्त हुन सक्तैन।

# शनिको साढेसाती वा नवग्रहहरूको गतिको स्पष्टीकरण

धेरजसो मानिसहरू आफ्नू नामको प्रथम अक्षरको राशिमा अथवा जन्मको राशिमा शनिको साढे साती वा ढय्याको विचार निकै ठूलो गम्भीर रूपले गर्ने गर्दछन्। तर यो काइदा वा नियम एकदमै गलत छ। किन भने प्रत्येक मनुष्य माथि उसको सम्पूर्ण जीवनभरिमा नवग्रहहरूको सामूहिक प्रभाव, फलादेशको रूपमा सदैव प्राप्त भइ नै रहन्छ, अनि इनै नवग्रहहरूको पञ्चाङ्ग गोचरबाट जब-जब कहिले जन्म लग्नमा उत्तम प्रभाव आउँदछ, तब-तब प्रत्येक प्राणीहरूलाई सुख-शान्ति र उन्नति प्राप्त भइरहन्छ। त्यस वेला शनिको साढेसाती होस् अथवा ढय्या होस्-फरक पर्दैन। अनि जब-जब नहग्रहहरूको गति (चाल) पञ्चाङ्ग गोचरबाट, जन्म लग्नमा खराब आउँछ, तब-तब प्रत्येक प्राणीहरूले अनेक कष्ट र हानि सहन गर्नुपर्दछ। यस्तो स्थितिमा जनतासित र ज्योतिषका ज्ञाताहरूसित प्रार्थना छ कि ती यी राशि गोचरको फलादेशलाई पूर्ण मान्यता नठानुन्, बरू लग्न गोचर अनुसार लेखिएको फलादेशको प्रत्यक्ष लाभ प्राप्त गरुन्। यस विषयको स्पष्टीकरण यही पुस्तक 'विशाल भृगु संहिता पद्धतिः' भित्र प्रत्येक लग्नको आरम्भिक आठ पृष्ठमा प्रत्यक्ष लेखिएको छ, यस फलादेशमा, राशि गोचर र विंशोत्तरी दशाहरूलाई कुनै स्थान कत्ति पनि दिइएको छैन।

# ग्रहहरूको आन्तरिक बल ज्ञान

१- जुन ग्रह जन्म कुण्डली भित्र चलित चक्रबाट हिंडेर जुन जुन कोष्ठ (घर) तिर हिंड्दछ भने त्यो ग्रह केही न्यून अंशमा त्यस घरको पनि फल दिंदै रहन्छ।

२- जुन ग्रह कुनै पनि स्थानमा वक्री भएर बसेको हुन्छ, त्यो ग्रह आफ्नू स्थानबाट पहिलो स्थानको उन्नतिको पनि विचार राख्दछ र आफू बस्ने स्थानमा केही कष्ट- बाधाहरू सहित गहीरो उन्नतिको प्रतीक्षा र प्रयत्न गर्दै रहन्छन्।

३- जुन-जुन ग्रह नीच राशिमा बसेका हुन्छन्, ती आफ्नू स्थानमा हानि गर्दछन् तर आफ्नूभन्दा सातौं स्थानमा वृद्धि गर्दछन् र जुन ग्रह उच्च स्थानका हुन्छन् ती आफ्नू स्थानमा वृद्धि गर्दछन् र सातौं स्थानमा हानि गर्दछन्।

४- जुन व्यक्तिहरूको जन्म, यदि कुनै पनि दुइ लग्नको सन्धिमा भएको छ भने, त्यसको कुण्डलीमा यस पुस्तकद्वारा ग्रहहरूको पूरा-पूरा फलादेश राम्ररी प्राप्त हुन सक्तैन। अपितु अलि-अलि फलादेश दुवै लग्नको नै प्राप्त हुँदै रहन्छ।

५- जुन ग्रह २८ अंश भन्दा माथि अथवा दुइ अंशको भित्र छ भने, त्यो ग्रह कुण्डलीमा बलवान् भएर बसेको भए पनि प्रायः सामान्य र/धेरै कम (न्यून) फल दिने हुन्छन्। यस्ता ग्रह बढी निर्बल मानिन्छन्।

६- जुन ग्रह सूर्यबाट अस्त हुन्छन् ती कमजोर फल दिने हुन्छन्।

७- जुन ग्रह दस अंशबाट पचीस अंशसम्मका हुन्छन् ती विशेष शक्तिशाली हुन्छन् र बढी फल दिन्छन्।

८- यदि कुनै मनुष्यको भाग्यमा, कुनै प्रकारको केही न्यूनता यस्तो यस्तो छ, जुन उसलाई कहिले पनि अनुभव नभएको होस् तब पूर्ण फल प्राप्त हुन सक्नैन।

*नोट* - जाती नजाजी समयको ज्ञान गर्नका लागि यसै पुस्तकको प्रत्येक लग्नको प्रथम आठ पृष्ठमा हेर्नुहोस्।

●

## स्त्री-पुरुषको कुण्डलीको रहस्य

यस पुस्तकको फलादेश जसरी पुरुषहरूको कुण्डलीहरूमा प्रयोग हुन्छन्, त्यसै प्रकार स्त्रीहरूको कुण्डलीहरूमा पनि यो फलादेश प्रयोग गरिन्छ, सर फरक केवल यस कुराको हुन्छ कि पुरुषहरूको फलादेशमा जहाँ स्त्रीको सम्बन्धको विषय आएको छ, त्यहाँ स्त्रीहरूको कुण्डलीको विषय पुरुषहरूको निम्ति पनि मानिन्छ, अनि जुन व्यापारको विषय छ, त्यो पनि उसको पतिमाथि नै लागू हुन्छ र स्त्री स्वतन्त्र छ भने उसैमाथि रहिरहन्छ।

●

## राशि र ग्रह हरूको ज्ञान

| | | | |
|---|---|---|---|
| १- मेष | २- वृषभ, | ३- मिथुन | ४- कर्क |
| ५- सिंह | ६- कन्या | ७- तुला | ८- वृश्चिक |
| ९- धन | १०- मकर | ११- कुम्भ | १२- मीन |

## प्रत्येक ग्रह जो जहाँ कुण्डलीमा बसेको रहन्छ, त्यो त्यहाँबाट कुन-कुन स्थानमा दृष्टि पुर्‍याउँछ

सूर्य र चन्द्रमा- सातौंमा। मंगल-सात, चार र आठमा।

बुध- सातौंमा। गुरू- सात, पाँच र नौमा।
शुक्र- सातौंमा। शनि- सात, तीन र दसमा।

## बाह्र राशिहरूका स्वामी कुन-कुन ग्रह हुन् ?

७/८ का मंगल। २/७ का शुक्र। ३/६ का बुध।
४ का चन्द्र। ५ का सूर्य। ९/१२ का गुरू।
१०/११ का शनि।

## कुन-कुन राशिमा कुन-कुन ग्रह उच्च नीच हुन्छन् ?

| उच्च | ग्रह | नीच |
|---|---|---|
| १ मेष | सूर्य | ७ तुला |
| २ वृष | चन्द्र | ८ वृश्चिक |
| १० मकर | मगंल | ४ कर्क |
| ६ कन्यां | बुध | १२ मीन |
| ४ कर्क | गुरू | १० मकर |
| १२ मीन | शुक्र | ६ कन्या |
| ७ तुला | शनि | १ मेष |
| ३ मिथुन | राहु | ९ धन |
| ९ धन | केतु | ३ मिथुन |

## कुन-कुन ग्रह परस्पर कस-कसका शत्रु र मित्र हुन् ?

**देवपक्ष–** सूर्य, चन्द्र, मगंल र गुरू-यी चारै परस्पर मित्र हुन्।

**दैत्यपक्ष–** शनि, शुक्र, राहु र केतु- यी चारै परस्पर मित्र हुन् र बुध सबैका मित्र हुन्।

**उपरोक्त–** दुवै पक्ष परस्परमा एउटा अर्कोका शत्रु हुन्।

**अर्थात्–** देवपक्ष र दैत्यपक्षका ग्रहहरूमा परस्पर शत्रुमा रहन्छ।

*नोट–* जन्म कुण्डलीको बाह्र कोठा भित्र जुन-जुन कोठमा जुन राशि हुन्छ र त्यस राशिका जुन-जुन ग्रह स्वामी मानिन्छन्, त्यही-त्यही स्थानमा तिनको राशि हुन्छ।

## आवश्यक कुरा !

**यदि कुनै पुरुष वा स्त्रीको जन्म कुण्डली भित्र, कुनै पनि विषयका लागि, कुनै एउटा ग्रहको ध्वनि(आवाज) राम्रो फल दिने कुरा भन्दछ भने अर्को दोस्रो ग्रहको आवाज त्यसै विषयको लागि-केही नराम्रो कुरा भन्दछ। अनि बुझ्नुपर्दछ कि त्यो दुवै फल अवश्य घटित हुनेछ, त्यो कुनै पनि रूपबाट घटोस्। यसमा समयान्तर र रूपान्तर अवश्य हुन सक्छ, तर निर्मूल वा घटना नघट्ने हुनै सक्नैन। अर्को कुरा यो हो कि नवग्रहहरूको जुन फलादेश लेखियो, त्यसैको प्रत्येक व्यक्तिको भाग्यको रूपरेखा तयार भएर जीवनभरि चल्दै रहन्छ।**

# ग्रहहरूको शान्तिका लागि

साधारणतः अरिष्टदायक ग्रहहरूको शान्तिका लागि निम्नलिखित प्रयत्न गरेउत्तम हुनेछ। यी तीन थरिका अर्घ्य झन् लाभदायक हुन्छन्—

१- सूर्यलाई नित्य प्रातः अर्घ्यदिनु ।

२- शिवजीलाई नित्य प्रातः अर्घ्यदिनु।

३- शनिवारको दिन पीपललाई जल चढाउनु कल्याणदायक रहने छ।

सू०- व्रत गरेर राती गाईलाई नमस्कार सहित शक्कर ख्वाएर अनि आफूले भोजन गर्नु। (माणिक रत्न धारण गर्नु।)

चं०- व्रत गरेर ब्राह्मणलाई नमस्कार सहित शक्कर दही दान दिएर मात्र आफूले खानु। (मोती रत्न धारण गर्नु।)

मं०- व्रत गरेर राती गाईलाई पूरी र शक्करको लड्डू बनाएर खान दिनु अनि आफूले भोजन गर्नु। (मूगा रत्न धारण गर्नु।)

बु०- व्रंत गरेर कुनै पनि गाईलाई हरियो तरकारी र फल खान दिएर भोजन गर्नु। (पन्ना रत्न धारण गर्नु।)

गु०- व्रत गरेर पहेंली गाईलाई लड्डू वा शक्कर खान दिनु, त्यसपछि भोजन गर्नु। (पुष्पराज रत्न धारण गर्नु।)

शु०- व्रत गरेर शिवजीमा दूधको भांग चढाएर नमस्कार गर्नु। अनि आफूले भोजन गर्नु। (हीरा रत्न धारण गर्नु।)

श०- व्रत बसेर काली गाईलाई रोटी शक्कर खान दिएर अनि मात्र आफूले भोजन गर्नु। (नीलम रत्न धारण गर्नु।)

रा०- पक्षीहरूलाई नित्य अन्नका दाना वा रोटी खान दिनु। (गोमेद रत्न धारण गर्नु।)

के०- माछालाई नित्य अन्नका दाना वा पीठोको गोलिहरू तलाऊ वा नदीमा फालिदिने गर्नु। (लहसुनियाँ रत्न धारण गर्नु।)

# सर्वश्रेष्ठ बीसा यन्त्र

यस यन्त्रमा आठ कोठा छन् र आठ प्रकारले बीस गन्न सकिन्छ।




यो यन्त्रलाई दीपावलीको दिन शुभ मुहूर्तमा सिन्दूर र शुद्धघिउ मुछेर भित्तामा लेखी पूजा गरे लक्ष्मी प्रसन्न हुन्छिन्।

।।श्री गणेशाय नमः।।

# वृहद्

# भृगु संहिता पद्धति

## प्रारम्भः

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

पाठक वृन्द–आफूले अफ्नै जन्मकुण्डलीको फलादेश हेर्ने बेलामा, यस पुस्तक भित्र जुन १२ लग्नहरूको भिन्न-भिन्न फलादेश लेखिएको छ, त्यसबाट पहिले तपाईं स्वयं आफ्नू जन्म-कुण्डलीको लग्नलाई हेर्नुहोस, आफ्नू कुण्डलीको भित्र लेखिएका नवग्रहहरूको फलादेश यथा स्थानबाट भिन्ना-भिन्नै प्राप्त गर्नुहोस् र त्यही लग्नको जाति-नजाति तारीख र अनुकूल प्रतिकूल समयको ज्ञान तथा पुस्तकको अन्त्यमा जुन भाग्य वृद्धिका समय लेखिएका छन्, तिनलाई पनि प्राप्त गर्नोस्, कुण्डलीमा नवग्रहको जुन फलादेश छ, त्यो सम्पूर्ण जीवनमा प्रभाव पार्ने हुन्छ र जाति-नजाति समयको ज्ञान भाग्यको जाति-नजाति समय जान्नका लागि हो।

# मेष लग्न हुनेहरूको भविष्यका तारीखहरू

सन् १९९७ को वर्षमा भाग्येश गुरू दसौं स्थानमा नीच हिंड्दछन् र राज्येश लाभेश शनि आठौंमा रहन्छन्, यस निम्ति यो वर्ष भाग्यको बारेमा प्रायः दुर्बल रहने छ, किन्तु ता० १०-१-९७ बाट केही उन्नति रहने छ। ता० ४-२-९७ देखि व्यय बढी हुनेछ। ता० १-६-९७ देखि भाग्यको समय असल बन्नेछ। ता० १६-११-९७ देखि बर्ता कष्ट रहनेछ। ता० २२-१२-९७ देखि ३१-१२-९७ सम्ममा भाग्यको समय राम्रो हुनेछ।

कु० नं० १

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

सन् १९९८ को वर्षमा ता० २-१-९८ देखि समय राम्रो चल्नेछ। ता० ३-३-९८ बाट समय बर्ता खर्च हुनेर बढी कष्टदायक चल्नेछ। ता० ४-५-९८ बाट समय सप्रन थाल्नेछ। ता०२-८-९८ सम्म समय कष्टकै रहने छ। ता० १-९-९८ देखि भाग्य सप्रने छ। ता० ३-१०-९८ देखि फेरि कष्टका दिन आउने छन्। अनि १६-११-९८ बाट केही लाभ हुन थाल्नेछ। यस वर्ष राज्येश र लाभेश शनि आठौंमा रहने छ। यस निम्ति उन्नतिमा अनेक बाधाहरू छन्।

कु० नं० २

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

# मेष लग्नमा सुनौला तारीखहरू

सन् १९९९ को वर्षमा ता० १-१-९९ बाट बुद्धिको परिश्रमले सफलता रहने छ तर गृहस्थीमा केही झ्याउला रहने छन्, ता० १-२-९९ बाट गृहस्थी र भाग्यमा सफलताहरू रहनन्, र ता. ८-४-९९ सम्ममा धनको लाभ राम्रो छ, ता० ९-४-९९ बाट धन बर्ता खर्च हुन सक्छ। ता० १३-५-९९ बाट गृहस्थी र रोजगारमा सफलता रहने छ। ता० १६-६-९९ बाट समय प्रभावशाली चल्नेछ, साहस बढ्ला, सुखका साधन प्राप्त हुन्, १९-८-९९ बाट बुद्धि र संतान पक्षबाट लाभ, सफलता रहने छ, ता० १२-९-९९ बाट समय फेरि दुर्बल हुनेछ, ६-१०-९९ देखि अगाडि समय केही सुख-दुःख- को मिश्रण लिएर चल्दै रहने छ।

कु० नं० ३

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

सन् २००० को वर्षमा ता०१-१-२००० देखि भाग्यमा उन्नति एवं सफलता रहने छ। ता० ४-२-२००० बाट लाभ-हानि दुवै साथै चल्नेछ, ता० १-३-२००० बाट मान, प्रभाव र भाग्य को सफलता रहने छ। ता० १४-४-२००० बाट उन्नति र इज्जत बढ्ने छ। ता० ३-७-२००० बाट स्वास्थ्य-मा दुर्बलता तथा धनको आय र व्यय दुवै समान रहने छन्। ता० २५-१०-२००० बाट गृहस्थी र व्यापारमा कष्ट बढ्ने छ। अगाडि ता० ३१-१२-२००० सम्ममा केही घटी बढी, तेजी-मन्दी चलिरहने छ।

कु० नं० ४

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

# मेष लग्नमा सुनौला तारीखहरू

सन् २००१ को वर्षमा ता० १-१-२००१ देखि समय केही दुर्बल चल्नेछ ता. ११-१-२००१ बाट भाग्यको सर्वोत्तम समय उन्नतिदायक चल्नेछ। ता० १९-३-२००१ बाट समय बढी व्ययले कमजोर रहने छ। ता० १२-४-२००१ बाट समय प्रभावशाली र भाग्योन्नतिको रहने छ। ता० १०-८-२००१ बाट गृहस्थी र व्यापारमा केही झ्याउलो रहला। ता० ९-९-२००१ देखि गृहस्थीमा सुख-शान्ति रहला, केही उन्नति पनि हुनेछ। ता० १६-१-२००१ बाट मनमा कुरा खेलेर दिक्क लाग्ला। ता० १६-१२-२००१ देखि बुद्धि र भाग्यमा शक्ति र सफलता प्राप्त होला।

कु० नं० ५

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

सन् २००२ को वर्षमा ता० ५-१-२००२ देखि भाग्यमा सफलता र शक्ति रहला। ता० १७-३-२००२ देखि केही परेशानी र केही दुर्बलता रहिरहला। ता० १६-४-२००२ बाट शारीरिक कष्ट रहने छ, त्यसो त सफलता र खर्च दुवै रहनन्। ता० २९-७-२००२ देखि भौतिक सुख-साधनमा वृद्धि होला। ता० २९-८-२००२ देखि शारीरिक कष्ट रहे पनि छिटै निवारण हुनेछ। ता० २२-८-२००२ देखि बढी खर्च र गृह-कलह रहला। ता० २४-१०-९० बाट भाग्योदय होला। ता० १७-११-२००२ देखि फेरि कष्ट आइपर्ला। ता० ८-१२-२००२ देखि भाग्यको समय उकालो लाग्नेछ।

कु० नं० ६

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

# मेष लग्नमा- सुनौला तारीखहरू

सन् २००३ सालको ता० ८-१-२००३ देखि ता० १४-४-२००३

कु० नं० ७

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

सम्म समय राम्रो रहने छ, त्यसपछि व्यय बढ्ला। ता० १५-४-२००३ देखि मान-सम्मान बढ्ला। ता० १५-५-२००३ देखि शरीर अशान्त रहने छ। ता० ६-७-२००३ देखि सुख शान्ति र सफलता रहनेछ। ता० २५-१-२००३ देखि बढी परिश्रमले मन दुःखी रहला। ता० ३०-१२-२००३ सम्म सामान्य सफलता रहनेछ।

सन् २००४ को वर्षमा ता० ६-१-२००४ देखि सौभाग्य र धनलाभ

कु० नं० ८

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

हुनेछ। ता० १४-३-२००४ देखि बढी व्यय भए पनि कार्यमा सफलता मिल्ला। ता० ७-६-२००४ देखि सम्मान र शक्ति बढ्ने छ। सन्तान पक्षबाट सुख र शान्ति बढी प्राप्त होला। ता० २५-८-२००४ देखि व्यापारबाट धनागम र गृहस्थीमा केही झयाउला आइलाग्नन्। ता० २०-९-२००४ देखि केही अपठ्याराहरू भएर पनि सफलता प्राप्त हुँदै रहने छ। ता० १७-१०-२००४ देखि कही कष्ट रहे पनि आय बढ्दै जाला। ता० १९-११-२००४ देखि भाग्य सप्रदै जानेछ। ता० ३१-१२-२००४ देखि केही समस्या आए पनि धनागम अवश्य हुनेछ।

सन् २००५ सालमा ता० २-१-२००५ देखि ता० २६-१-२००५ सम्म भाग्योन्नति हुनेछ। पछि बढी खर्च हुन सक्नेछ। ता० १-६-२००५ अकस्मात् धनागम। र ता० २-८-२००५ बाट समाजमा प्रभाव वृद्धि। ता० १८-९-२००५ देखि आफ्नू देहको कार्यले इज्जत बढ्ला। ता० ११-१०-२००५ देखि आर्थिक अवनति हुन सक्नेछ। ता० ५-११-२००५ बाट व्यापार र गृहस्थीमा लाभ। शारीरिक स्वस्थता रहने छ। ता० २८-११-२००५ बाट केही कष्ट बढ्नेछ। ता० २३-१२-२००५ देखि भाग्य सप्रला र अनेक सफलता प्राप्त हुनन्।

कु० नं० ९

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

सन् २००६ को वर्षमा ता० १-१-२००६ देखि भाग्य सप्रदै जाला र सफलताहरू प्राप्त हुँदै जानेछन्। ता० ४-३-२००६ बाट खर्च बढ्दै जाला। ता० २९-३-२००६ बाट भाग्य सप्रने छ। ता० ७-४-२००६ सम्म केही झ्याउला आइरहनन्। ता० २५-४-२००६६ देखि बुद्धिद्वारा सफलता प्राप्त होला। ता० ३-९-२००६ बाट व्यापार र गृहस्थीमा सफलता रहला। ता० १७-१०-२००६ देखि केही कष्ट बढ्ला। ता० १६-१२-२००६ बाट भाग्यको प्रभाव बढ्ने छ।

कु० नं० १०

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

# मेष लग्न हुनेहरूको लागि उत्तम तारीखहरू

सन् २००७ को वर्षमा ता० १-१-२००७ बाट धन-पक्ष दुर्बल रहला। ता० ३०-१-२००७ बाट भाग्यको समय उन्नतिदायक रहने छ। ता० १७-४-२००७ देखि धनको बढी अपव्यय रहने छ। ता० ११-५-२००७ बाट भाग्यको समय सप्रने छ। ता० ७-७-२००७ बाट पुरूषार्थ द्वारा सफलता प्राप्त, शक्ति बढ्दै जाने छ। ता० ११-९-२००७ बाट धन र व्यापारमा झ्याउलो पर्ला। ता० ६-१०-२००७ बाट गृहस्थी र व्यापारमा सफलता मिल्ला। ता० ३०-१०-२००७ देखि फेरि व्यापारमा हानिले मनखिन्न, ता० २३-११-२००७ बाट ३१-१२-२००७ सम्म भाग्यको सफलता रहने छ।

कु० नं० ११

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

सन् २००८ को वर्षमा ता० १-१-२००८ बाट भाग्योदय हुनेछ। ता० ४-२-२००८ देखि बर्ता धनव्ययले चिन्ता। ता० १-३-२००८ बाट फेरि भाग्यमा बाधा आउला। ता० १७-३-२००८ बाट शरीरमा रोग लाग्ला। ता० २५-४-२००८ बाट देह धनको मार्ग सप्रला। ता० १-९-२००८ देखि गृहस्थिति सप्रला, शरीर स्वस्थ रहने छ। ता० २४-१०-२००८ देखि धन व्यय र अनेक झ्याउला आउनन्। ता० १८-११-२००८ बाट ता० ११-१२-२००८ सम्म धन, व्यापार र गृहस्थीमा सफलता मिल्नेछ।

कु० नं० १२

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

# मेष लग्न हुनेहरूको प्रतिकूल समयको ज्ञान

कु० नं० १३ (सदैव कालको लागि)

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

तब लेखिएका ग्रह जब-जब यी राशिहरूमा पंचांगमा आउने छन् तब-तब ती वर्षमा, महीना र दिनहरूमा प्रतिकूल समय रहने छ।

सू०- तुला, वृश्चिक र मीन।
चं०- कन्या, वृश्चिक र मीन।
म०- कर्क, कन्या, वृश्चिक र मीन।
बु०- वृश्चिक र मीन।
गु०- वृश्चिक, मकर, मीन र कन्या।
शु०- कन्या, वृश्चिक, मीन।
श०- कन्या, वृश्चिक, मीन र मेष।
रा०- वृश्चिक, धन, मकर, मेष, वृष, कर्क र सिंह।
के०- वृश्चिक, मकर, मेष, वृष, मिथुन, कर्क र सिंह।

उपरोक्त ग्रहहरूबाट सालाना फलादेश जान्नको लागि गुरू, शनि, राहु र केतुबाट हेर्नु आवश्यक छ। महीनाको फलादेश जान्नको निम्ति सू०, बु०, मं०, शु०, यी चार ग्रहबाट हेर्नु आवश्यक छ। दिनहुँको फलादेश जान्नका लागि चन्द्रमाबाट हेरे हुन्छ। जुन वेला कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, अनि त्यसको फल दुर्बल हुन जान्छ।

# मेष लग्न हुनेहरूको अनुकूल समयको ज्ञान

कु० नं० १४ (सदैव कालको निम्ति)

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

मेष लग्न हुने हरूको तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पंचांगमा आउँछन् तब-तब ती वर्षहरूमा, दिनमा लाभप्रद र सुखदायक समय रहने छ।

सू०- मेष, मिथुन, कर्क, सिंह, धन, मकर र कुम्भ।
चं०- मेष, वृष, मिथुन, कर्क, सिंह, तुला, धन, मकर र कुम्भ।
मं०- मेष, मिथुन, सिंह, कन्या, तुला, धन, मकर र कुम्भ।
बु०- मेष, वृष, मिथुन, कर्क, सिंह, कन्या, तुला, धन, मकर र कुम्भ।
गु०- मेष, वृष, मिथुन, कर्क, सिंह, तुला, धन र कुम्भ।
शु०- मेष, वृष, मिथुन, कर्क, सिंह, तुला, धन, मकर र कुम्भ।
श०- वृष, मिथुन, कर्क, सिंह, तुला, धन, मकर र कुम्भ।
रा०- मिथुन, कन्या, कुम्भ र मीन।
के०- कन्या, धन, कुम्भ, र मीन।

नोट- सालाना फलादेशको ज्ञानका लागि शनि, राहु, केतु, गुरूयी चार ग्रहबाट हेर्नु। महीनाको फल जान्न-सूर्य, बुध, शुक्र र मंगल यी चारबाट हेर्नु। दिनहुँको फल चन्द्रमाबाट हेर्नु पर्दछ। विभिन्न विषयहरूको पूर्ण ज्ञानको लागि 'अखण्ड भाग्योदय दर्पण ११ देखि २५ सम्म हेर्नोस्'।

# जीवनको रहस्य प्रारम्भः

## मेष लग्नान्तर सूर्यफलम्

जुन व्यक्तिको मेषको सूर्य लग्नको प्रथम स्थानमा छ भने त्यो व्यक्ति ठूलो विद्वत्ता भएको र विद्याको आदर्श शक्ति प्राप्त गर्नेवाला, बर्ता अग्लो र सन्तान शक्ति प्राप्त गर्ने र आत्मज्ञानको महानता पाउने, धेरै ठूलो सम्मान पाउने तथा निकै बढी प्रभाव भएको र दिमाग एवं शरीर भित्र तेज भएको, अनि स्त्री स्थानमा केही कमी पाउने भएको र स्त्रीलाई यौटा साधारण वस्तु ठान्ने भएको, इन्द्रिय भोगादिमा केही न्यूनता र केही पनि लुकाउन सक्ने क्षमता भएको, व्यापारमा केही पनि ध्यान नदिने खालको तथा दैनिक रोजगारलाई यौटा अत्यन्त साधारण वस्तु मान्ने खालको होला।

कु० नं० १५

२ १२
३ सू. १ ११
४ १०
५ ७ ९
६ ८

जुन मानिसको वृषको सूर्य लग्नबाट दोस्रो स्थानमा छ भने मानिस विद्याको संग्रह गर्ने काममा बढी अपठेरो अनुभव गर्ने, बुद्धि र दिमाग भित्र केही कष्ट अनुभव गर्ने, केही विद्याका बन्धनयुक्त कर्मद्वारा धन प्राप्त गर्ने र सन्तान पक्षमा केही कमी वा अवरोधको योग पाउने तथा सन्तानको सम्बन्धमा केही बन्धनको कारणले र केही चिन्ताको योग पाउनेवाला, धनको स्थानमा धनको केही दुर्बलता तथा विद्याको प्रकाशरूपी धन प्राप्त गर्नेवाला, जीवनको दिनचर्यामा र पुरातत्वको सम्बन्धमा आनन्द अनुभव गर्ने खालको हुन्छ।

कु० नं० १६

सू. २, १२, ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८

जुन मनुष्यको मिथुनको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस बुद्धि बलको शक्तिले तथा वाणीको शक्ति एवं प्रभाव राख्ने खालको र भुजाहरूमा बल भएको, दिमागी ताकतद्वारा उन्नतिको बारोमा निकै परिश्रम गरेर उन्नतिलाई प्राप्त गर्ने र भाइको शक्ति पाउने, भाग्यको उन्नतिमा सफल हुने, धर्मलाई मात्रै र ईश्वरमा पूर्ण आस्था एवं विश्वास राख्ने तथा महान हिम्मत भएको तथा बोलचालमा पनि वीरत्व देखाउन सक्ने खालको हुन्छ।

कु० नं० १७

२, १२, सू. ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८

जुन व्यक्तिको कर्कको सूर्य लग्नबाट चौथो स्थानमा छ त्यो मनुष्य विद्या ग्रहण गर्नेवाला र सुखपूर्वक विद्याध्ययन गर्नेवाला र विद्याले नै सुख प्राप्त गर्ने तथा सन्तानको पनि प्रसस्त सुख प्राप्त गर्नेवाला, मीठो बोली र प्रभावशाली वाणी भएको व्यक्ति आमाका गुण र अनेक सुख प्राप्त गर्नेवाला, विद्या र बुद्धिको योगले केही अंशमा भूमि-सुखमा पनि वृद्धि गर्नेवाला, पितृ-स्थानमा केही अरूचि राख्ने भएको तथा उन्नतिको बाटोमा बुद्धिद्वारा नै केही शिथिलता राख्ने र राजसमाजको सम्वन्धमा केही वैमनस्यता झैं भाव भएको तथा घर भित्र आफ्नू बुद्धिले प्रकाश फिंजाइराख्ने खालको हुनेछ।

कु० नं० १८

२　१२
३　१　११
सू. ४　१०
५　७　९
६　८

जुन व्यक्तिको सिंह लग्न सूर्यबाट पाँचौं स्थानमा हुन्छ, त्यो व्यक्ति महान विद्या प्राप्त गर्ने र निकै प्रभावशाली वाणी बोल्ने तथा बुद्धिद्वारा नै ठूलो प्रताप फिजाउने अनि धेरै परसम्म स्थिति सहजै आँक्न जान्ने, सन्तान पक्षवाट ठूलो यश र प्रभाव पाउने र आयको स्थानमा केही कमी वा नीरसताको अनुभव गर्ने तथा आफ्नू वाणीको बलले अर्काको बललाई सहजै थिच्न सक्ने र आफ्नू आयमा वृद्धिगर्नका लागि बुद्धिको विशेष शक्ति प्रदर्शन गर्न सिपालु तथा आफ्नू बुद्धिर दिमागीशक्तिको सामुन्ने अन्य कसैको पनि वाणी र दिमागी शक्तिलाई एकदम तुच्छ मात्रे खालको व्यक्ति होला।

कु० नं० १९

२　१२
३　१　११
४　१०
सू. ५　७　९
६　८

जुन व्यक्ति कन्या राशिको सूर्य लग्नबाट छैठौं स्थानमा रहन्छ त्यो व्यक्ति आफ्नू बुद्धिको भर नमात्रे र अनेक कष्ट पाउने तथा विद्या एवं बुद्धिकै बाटोबाट निकै ठूलो प्रभाव कायम गर्ने खालको तथा अनेक शत्रुमाथि विजय प्राप्त गर्न सक्ने अनि जति ठूलो भए पनि अपठेरो वा झ्याउलाहरूलाई सहजै सोझ्याउन जात्रे खालको तथा बुद्धिद्वारा नै आइपरेका अनेक संकटलाई टार्न जात्रे, अनि घरमा बुद्धि बलले महान प्रकाश फिजाउन सक्ने र सन्तान पक्षमा केही अपठेरो र वैमनस्यताको योग भएको, मावली पक्षमा केही प्रभावको योग अनुभव गर्ने र बर्ता धन व्यय गर्न अधिसर्ने खालको, दिमागी शक्तिले अन्य स्थानको भित्र सम्बन्ध पाएर त्यसबाट लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० २०

२ १२
३ १ ११
४ १०
५ ७ ९
सू. ६ ८

जुन व्यक्तिको तुलाको सूर्य लग्नको सातौं स्थानमा छ भने त्यो मनुष्य स्त्री स्थानमा ठूलो क्लेश अनुभव गर्ने तथा सन्तान पक्षमा विशेष कष्ट पाउने खालको व्यक्तिको विद्या स्थानमा कमी रहने छ। अनि बुद्धिमा दुर्बलता र अनेक झ्याउला भोग्ने र गृहस्थीका झंझटहरूमा विशेष कष्टको अनुभव गर्ने खालको व्यक्ति होला। यसको व्यापार स्थानमा बढी कष्ट खपी-खपीकन आफ्नू काम चलाउने र रोजगारको पंक्तिमा सत्य-असत्यको योगद्वारा काम सहज तुल्याउन जात्रे तथा अग्लो र अलि मोटो-घाटो, इन्द्रिय भोगादिमा अरूचि राख्ने एवं मितव्ययी (थोरै खर्च गर्ने) होला।

कु० नं० २१

२ १२
३ १ ११
४ १०
५ ७ सू. ९
६ ८

जुन व्यक्तिको वृश्चिकको सूर्य लग्नको आठौं स्थानमा रहन्छ, त्यो व्यक्ति सन्तान पक्षबाट कष्ट सहन सक्ने, विद्यास्थानमा दुर्बल हुने, दिमागमा भित्री अपठ्याराहरू भोगने र गूढ ज्ञानको सम्बन्धमा ठूलो प्रकाश-शक्ति राख्ने खालको र निकै गहीरो वा लुकेको भाव राखी कुरा गर्ने, आफ्नू जीवनको दिनचर्याको सम्बन्धमा पार्न सक्ने, अनि धन स्थानमा शत्रुदृष्टि राख्ने र आफ्ना कुटुम्ब स्थानमा वैमनस्यताको भाव राख्ने, आफ्नै बुद्धिको बलले अलि-अलि बाङ्गो चाल चल्ने तथा अलि कठोर वाणी बोल्ने खालको यो व्यक्ति निकै रिसाहा हुन सक्छ।

कु० नं० २२

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८ सू.

जुन व्यक्तिको धनको सूर्य लग्नबाट नवम स्थानमा हुन्छ, त्यो व्यक्ति आफूभित्र विद्या शक्तिको महानताले अत्यन्त राम्रो प्रकाश पाउन सक्ने र बुद्धिकै बलमा भाग्यको वृद्धि र वाणी द्वारा अर्कामाथि प्रभाव पार्न सक्ने, तथा यश प्राप्त गर्ने, धर्मको सम्बन्धमा राम्रो ज्ञान प्राप्त गरेको, ईश्वरमा श्रद्धा र विश्वास गहीरो भएको मानिस होला। सन्तानको सम्बन्धमा यसको लागि उत्तम पुत्र-सुख प्राप्त गर्नेवाला, दूरदर्शिता (परको) पनि स्वच्छ देख्न सक्ने, भाइ-बहिनीको सुख पनि यथेच्छ प्राप्त गर्ने र पुरुषार्थको बलमा शक्ति प्राप्त गर्ने, अरू दैवी सहायताको शक्ति पाउने र न्यायोत्तम प्रभावशाली वक्ता एवं विद्वान होला।

कु० नं० २३

२ १२
३ १ ११
४ १०
५ ७ ९ सू.
६ ८

जुन व्यक्तिको मकरको सूर्य, लग्नबाट दसौं स्थानमा छ, त्यो मानिस सन्तानको स्वभावले गर्दा केही अनुचित शक्ति र सकंट अनुभव गर्नेवाला,

कु० नं० २४

२ १२ ३ १ ११ ४ १० सू. ५ ७ ९ ६ ८

सन्तान-पक्षबाट केही वैमनस्यता र समान सम्बन्ध पाउन खोज्नेवाला, तथा सन्तान र बुद्धिको कारणले गर्दा पिता-स्थानमा केही वैमनस्यता र अरूचि प्राप्त गर्नेवाला, व्यापार वा कारबारको उन्नतिमा बाधा पाउने, राजसमाजका काममा केही विरोध र अपठ्यारो अनुभव गर्नेवाला, विद्या र बुद्धिको स्थानमा ठूलो हुँ भन्नाका साथसाथै केही सौन्दर्यमा हीनता पाउने खालको र माता-पिताको बढी सम्मान-इज्जत गर्ने तथा घर र भूमिको सुख प्राप्तिको सम्बन्धमा उन्नति गर्ने खालको मानिस हुनेछ।

जुन व्यक्ति कुम्भको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस विद्या ग्रहण गर्नमा अरूचिको योग पाएको अर्थात् थोरैनै पढे-लेखेको हुन

कु० नं० २५

२ १२ ११ सू. ३ १ ४ १० ५ ७ ९ ६ ८

सक्दछ। सन्तान पक्षको लाभ पाइरहेर पनि सन्तान पक्षबाट मनमा केही असन्तोष राख्ने, बुद्धि केही थाकिसके झै अनुभव गर्ने योग भएको र मस्तिष्क भित्र ठूलो तेजी राख्न सक्ने तथा केही कठोर बोलेर भए पनि आफ्नू स्वार्थ सिद्ध पार्न जान्ने, अनि बढी लाभ पाउनका लागि बराबर चिन्तन साधन गरिरहने तथा विद्याको प्रभावले अनेक थरिका स्वार्थ सिद्ध गर्न जान्ने, तथा सदैव आफ्नू स्वार्थ सिद्धिमा तत्पर रहने खालको मानिस हुन्छ।

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस विद्या स्थानमा कमी पाउनेवाला र नेत्र-शक्तिमा केही दुर्बलता अनुभव गर्ने र बुद्धि द्वारा अन्य स्थानको ठूलो प्रभावशाली चिन्तन गर्न सक्ने र बढी धन खर्च गर्न नडराउने, फेरि सन्तान पक्षमा केही दुर्बलता अनुभव गर्ने, बोल-चालमा सदैव छल-छन्दको बटारिएको वा बाङ्गो कुरा गर्ने वाला, आफ्नू बुद्धिमा केही व्यवधान अनुभव गर्ने र शत्रु स्थानमा प्रभाव कायम राख्न सक्ने अनि अनेक व्यवधान झ्याउलाहरूलाई थिचेर राख्न जान्ने, बाहिरिया मानिसहरूसित राम्रो सम्पर्क राख्न जान्ने, खर्च गर्ने स्थानमा केवल आफ्नू प्रभावले काम सिद्ध पार्न सक्ने खालको होला।

कु० नं० २६

२ १२ सू.
३ १ ११
४ १०
५ ७ ९
६ ८

## मेषलग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको मेषका चन्द्रमा लग्नको प्रथम स्थानमा छ भने त्यो व्यक्ति निकै ठूलो सुख शान्तिको अनुभव गर्ने खालको र सुखका अनेक साधन प्राप्त गर्ने र मातृस्थानको र भूमिको सुख प्राप्त गर्नेवाला, अत्यन्त मोहक शरीर प्राप्त गरेको तथा स्त्री-सुख इच्छानुसार प्राप्त गर्ने खालको र भोग-विलासमा बर्ता रूचि राख्ने भएको तथा व्यापारमा पनि सुखका साधन प्राप्त गर्ने तथा मान-सम्मान पाउने र मनोयोगको शक्तिद्वारा लौकिक सम्बन्ध अथवा गृहस्थ जीवनमा ठूलो सफलता पाउने र राम्रा सहयोगी मित्रवर्गको उत्तम सम्पर्क प्राप्त गर्ने खालको हुने छ।

कु० नं० २७

२ १२
३ १ चं. ११
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको वृषको चन्द्र लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक विशेष धन पाउने र घर-सम्पत्ति संचय गर्ने र अर्काले संचय गरेको धन पाउने, सुख प्राप्तिका लागि एकत्रित महान् धन-शक्तिको भण्डारको योग भएको, कुटुम्बको वृद्धि पाउने भएको। प्राप्त धनको भण्डारलाई इच्छानुसार भोग्न वा सुख प्राप्त गर्न नपाउनेवाला र धनको शक्तिले मनमनै गमक्क परेर बस्ने खालको, तर मनमनमा कुनै बन्धन अनुभव गर्ने किसिमको र मनोयोगको बलमा धनको वृद्धि गर्न खोज्ने, अनि जीवनको दिनचर्यामा केही न्यूनता र केही अशान्तिको योग पाउने खालको र माता पक्षमा केही बन्धन र केही वृद्धि पाउनेवाला हुन्छ।

कु० नं० २८

२चं. १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

जुन व्यक्तिको मिथुनको चन्द्रमा लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस भाइ-बहिनीको सुख पाउने, मातृस्थानको शक्ति पाउने र पुरुषार्थले मनोयोगद्वारा सुखको वृद्धि गर्नसक्ने तथा सुखपूर्वक मनोयोगको शक्तिले पुरुषार्थको वृद्धि गर्न सक्ने, तथा यश-मान प्राप्त गर्ने, ईश्वरमा पूर्णनिष्ठा राख्ने खालको र धर्ममा आस्था एवं विश्वास गर्ने, घर र भूमिको शक्तिले मनभित्र बढी प्रफुल्लताको योग पाउने, र मनको सुखद कारणहरूले धेरै ठूलो साहस र हिम्मत अनुभव गर्ने तथा दाजु-भाइद्वारा आजीविकाको योग प्राप्त गर्ने खालको हुनेछ।

कु० नं० २९

२ १२ ३चं. १ ११ ४ १० ५ ७ ९ ६ ८

जुन व्यक्तिको कर्कको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आमाको परम सुख पाउनेवाला, घर, भूमिको शक्तिको राम्रो सुख प्राप्त गर्ने र मनोयोगको शक्तिले धेरै ठूलो सुख पाउनेवाला, मनमनै मग्न रहेर वेफिक्रीसित डुल्ने फिर्नेवाला, आमाको सहायक शक्तिको सामुन्ने पिताको पनि वास्ता नगर्ने खालको र उन्नतिको बाटोमा र राज-समाजको काममा मनोयोग-को शीतल शक्तिले काम लिने भएको, आफ्नो सुखको बढी ख्याल राख्ने खालको हुन्छ।

कु० नं० ३०

२ १२
३ १ ११
४ चं. १०
५ ७ ९
६ ८

जुन मानिसको सिंहको चन्द्रमा लग्नको पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धियोगद्वारा महान सुखको अनुभव प्राप्त गर्नेवाला, तथा विद्या प्राप्त गर्ने र सन्तान-सुख पाउने-वाला, बुद्धि र विद्याको योग्यताले भूमि र सम्पत्तिको शक्ति पाउने, तथा सुखदायक बुद्धियोगले वाणीद्वारा अर्कालाई सुख दिने र आफ्नू स्थान एवं बुद्धियोगले नै विशेष लाभ र आमदानी पाउनेवाला, शान्तिले कुरा-कानी गरेर अर्काको मन तान्ने, सदैव आरामको सम्बन्धमा सुखदायक कुरा मात्र सोच्ने तथा आमा-को गुणहरूको र माताको इज्जत एवं प्रशंसा गर्ने र आज्ञा मान्नेवाला तथा अनेक गहीरो कुरामा चिन्तन गर्ने खालको होला।

कु० नं० ३१

२ १२
३ १ ११
४ १०
५ चं. ७ ९
६ ८

जुन मानिसको कन्याको चन्द्रमा लग्नको छैठौं स्थानमा छ भने त्यो मानिस आमाको सुख-शान्तिमा वाधा पुऱ्याउने तथा घरका सुख साधनमा हीनता पाउने र घर, जायदादमा पनि कमीको अनुभव गर्नेवाला, मनमा एक प्रकारको अनौठो अशान्ति अनुभव गर्ने वाला। तथा शत्रु स्थानमा केही शान्तिपूर्वक काम सपार्ने कारणहरूले गर्दा सुख-दुःखको बर्ता अनुभव गर्नेवाला तथा अनेक झ्याउलाहरू पन्छाएर सुख पाइने साधन उत्पन्न गर्नेवाला, बढी धन व्यय गर्ने र अन्य स्थानमा मित्रताको सम्बन्ध पाउने खालको, मावलीको धनमा सुख भोग्नेवाला, मनोयोगको बलमा नजाति काममा पनि राम्रोभाव झिक्ने, शीतलयुक्त र सज्जन हुन्छ।

कु० नं० ३२

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ चं. ८

जुन मानिसको तुलाको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू घर-गृहस्थीको ठूलो सुख भोग्नेवाला र पत्नीको भित्र शील-शान्ति, सौन्दर्यको योग पाएर मनमनै प्रसन्न हुनेवाला, अनि आमाको सहायक सेवा प्राप्त गर्ने खालको र घर-भूमिको सुख पाउने तथा मातृ स्थानको शक्तिले मान-सम्मान पाउनेवाला, शरीरमा सुख र सौन्दर्य पाउने र भोगादिकको सुखको आनन्द प्राप्त गर्नेवाला, लौकिक र गृहस्थीको सम्बन्धमा निकै प्रवीणता र कार्यदक्षताको शक्ति मनोबलले पाउने, बाठो र रसिक खालको होला।

कु० नं० ३३

२ १२ ३ १ ११ ४ १० ५ ७ चं. ९ ६ ८

जुन मानिकको वृश्चिकको चन्द्रमा लग्नवाट आठौं स्थानमा छ भने त्यो मानिस आमाको हानि पाउने र मातृ-स्थानको तर्फबाट अशान्ति पाउने अनि घर-भूमि आदिको ठूलो हानि पाउने, सुखको र आरामको कारणले गर्दा व्यापारमा निकै घाटा पाउने र मनभित्र घोर अशान्ति अनुभव गर्नेवाला तथा जीवनको दिनचर्यामा ठूलो संकीर्णताको योग गर्ने भएको र केही उदर विकारले अशान्ति अनुभव गर्दै रहने भएको, आयको स्थानमा अनेक पल्ट हानिहरूको सम्भावना पाउने र धनको वृद्धि गर्नका लागि निकै ठूलो साहस र बल लगाएर कष्ट सहने तथा पुरातत्त्व लाभमा केही कभी पाउने खालको हुनेछ।

कु० नं० ३४

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८ चं.

जुन मानिसको धनराशिको चन्द्रमा नवौं स्थानमा छ भने त्यो मानिस मातृ-स्थानले भाग्यमानी होला। भूमि र घर आदिको सुख प्राप्त गर्नेवाला र भाग्यको तागतले धेरै थरी सुख प्राप्त गरेर मनमनै प्रसन्न रहने र सुखपूर्वक मनोयोगको शक्तिले भाग्य-वृद्धि भेट्टाउने तथा धर्ममा बढी रूचि राखेर धर्मको पालनमा तत्पर रहने वाला, अनि भाइ-बहिनीको स्थानमा सुखको योग पाउनेवाला तथा बाहुबल र पुरूषार्थको स्थानमा पनि अनेक सुखका योगहरू भेट्टाउने र परमार्थको सादर पालन गर्ने वाला, दैवबलको सहायताले ठूला-ठूला सुखप्राप्तिका साधन स्वयं प्राप्त गर्ने खालको हुनेछ।

कु० नं० ३५

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ चं. ६ ८

जुन मानिसको मकर राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो व्यक्ति आमाको शक्ति प्राप्त गर्नेवाला, पिताको स्थानबाट सुख प्राप्त गर्ने र घर-भूमि, सम्पत्तिको शक्ति भेट्टाउने, राज-समाजबाट सुख पाउने मनोयोगको शक्तिले मान र सुखको वृद्धि गर्ने वाला, तथा व्यापार आदि ठूला कर्म स्थानबाट सफलता भेट्टाउने र मान-प्रतिष्ठाको उन्नतिमा नै अपार सुखको अनुभव गर्नेवाला, सुन्दर र सुखद कर्मको कार्यलाई मनोयोगले गर्ने खालको अनि उत्तम वेषभूषा र गौरवले रहनेवाला, बस्ने स्थानमा शोभा र सौन्दर्यको बढी ध्यान राख्नेवाला, सदैव लौकिक सम्बन्धी उच्च विचार राख्नेवाला स्वाभिमानी होला।

कु० नं० ३६

२ १२ ३ १ ११ ४ १० चं. ५ ७ ९ ६ ८

जुन मानिसको कुम्भ राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आमदानीको स्थानमा सुख प्राप्त गर्ने तथा केही बाधाहरूले युक्त सुख प्राप्त गर्ला तथा तिनै बाधाहरूको सुखले लाभ पाउला र घर-जमीनबाट पनि लाभ पाउला, अनि मातृ-स्थानको लाभमा केही कमीको साथै आंशिक लाभ पाउला, विद्या स्थानबाट सुख पाउने वाला र सुखपूर्वक विद्या ग्रहण गर्ने अवसर पाउला, सन्तान पक्षबाट सुख-सन्तोष पाउला तथा बोल-चालमा नम्रताले आफ्नू काम बनाउला, मनोयोगको बलले बुद्धिको गहीरोसम्म पुग्नसक्ने र मनोयोगको बलले नै अनेक थरिका धेरै-धेरै सुख र लाभ प्राप्त गर्ने, सन्तोषी होला।

कु० नं० ३७

२ १२ ११ चं. ३ १ ४ १० ५ ७ ९ ६ ८

जुन मानिसको मीन राशिका चन्द्रमा लग्नको बाह्रौं स्थानमा छ भने त्यो मानिस सुख प्राप्तिका निमित्त जति पनि खर्च गर्ने खालको र धन खर्च गरेर नै सुखको अनुभव गर्ने खालको होला। आमाको हानि वा मातृ-वियोग भोग्ने होला। स्थानीय स्वस्थानमा सुखको हानि पाउनेवाला होला। अन्य स्थानमा गएर सुख प्राप्त गर्ला। भूमि भवनको सम्बन्धमा दुर्बलता अनुभव गर्ला। शत्रु बसेका स्थानमा शान्तिपूर्वक आफ्नू काम बनाउनेवाला, विपत्तिमा पनि मनोयोगको सहायताले सुखको अनुभव गर्नेवाला तथा सुखपूर्वक खर्च संचालन गर्न सक्ने खालको र मनमा बराबर अशान्तिले युक्त रहने होला।

कु० नं० ३८

२
१२ चं.
३
१
११
४
१०
५
७
९
६
८



# मेषलग्नान्तर (भौमफलम्)

जुन मानिसको मेष राशिको मंगल लग्नमा नै पहिलो स्थानमा छ भने त्यो व्यक्ति शरीरमा महानता पाउने तथा ठूलो प्रसिद्धि प्राप्त गर्ने र तमोगुणी र प्रचण्ड शक्ति भएको तथा आत्मशक्तिको विशेष तागत भएको र अन्तरात्मासित विशेषसम्बन्धको ज्ञान हुने, माताको सम्बन्धमा धेरै न्यूनताको योग अनुभव गर्नेवाला, मातृस्थान अर्थात जन्मभूमिमा पनि केही कमी देख्नेवाला तथा पुरातत्त्व ज्ञानको महान् आदर्श सम्बन्धी लाभ प्राप्त गर्ने वाला, आयुको महान् शक्ति पाउने तथा गूढ युक्तिहरूको बलले तथा असहयोग द्वारा शारीरिक कष्ट सहन सक्ने, बलको ठूलो गौरव भएको, चमत्कार प्राप्त गर्ने र स्त्रीपक्ष एवं गार्हस्थ्य सुखमा न्यूनता पाउने र अशान्ति-युक्त हुनेछ।

कु० नं० ३९

| | | |
|---|---|---|
| २ | | १२ |
| ३ | १ मं. | ११ |
| ४ | | १० |
| ५ | ७ | ९ |
| ६ | | ८ |

जुन व्यक्तिको वृषको मंगल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो व्यक्ति सदैव धन कमाउनतिर लागिरहने होला, तर धन बढाउने भन्दा बर्ता धनको हानि पार्ने होला र पुरातत्त्व धनबाट लाभ पाउनेवाला होला, अनि धन बढाउनको निम्ति बर्ता परिश्रम र गूढ युक्तिहरूको आश्रय लेला, अनि केही गुप्त शक्तिले अनुचित लाभ प्राप्त गर्ने होला, अनि दिनचर्यामा केही बन्धन अनुभव गर्ने होला तथा सन्तान पक्षबाट हानि पाउला र बुद्धि भित्र बुद्धिबल, आत्मबलको तागतले, केही रूखो बोलेर आफ्नू काम पूरा पार्नेवाला, धर्मलाई केही हानि पुऱ्याएर पनि भाग्यको वृद्धि गर्नेवाला होला।

कु० नं० ४०

| | | |
|---|---|---|
| २ मं. | | १२ |
| ३ | १ | ११ |
| ४ | | १० |
| ५ | ७ | ९ |
| ६ | | ८ |

जुन व्यक्तिको मिथुनको मंगल लग्नको तेस्रो स्थानमा छ भने त्यो मानिस महान् पुरुषार्थी र दाजू-भाइको स्थानमा हानि पाउनेवाला, आयु वृद्धि पाउने र राज-समाजमा निकै प्रभुत्व भेट्टाउने वाला, अनि आफ्नू पूर्ण शक्तिको बलमा उन्नति गरेर बाटो सपार्नेवाला, ठूलो व्यापार गर्ने र कठिन भन्दा पनि कठिन अर्थात् कष्टसाध्य कार्य पनि अल्छी नमानी गर्न अधिसर्ने, सबै शत्रुको दमन गर्ने र दुःख तथा झ्याउलाहरू आए पनि सहजै पन्छाउन जान्ने, उन्नति गरेर धन कमाउन कूटनीति जान्ने र परिश्रमपूर्वक काम गर्ने, पिता स्थानबाट पुरातत्त्वमा राम्रो योग पाउने होला।

कु० नं० ४१

२ १२
३ मं. १ ११
४ १०
५ ७ ९
६ ८

जुन मानिसको कर्कको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस शरीरमा लघुता पाउने, मातृ-स्थानमा हानि पाउने र जीवनमा अशान्ति अनुभव गर्ने, आयु स्थानमा सामान्य भए पनि राम्रो सुख पाउने, भूमि र भवनको अभाव हुनाले केही हानि पाउने र पिता स्थानमा केही वृद्धि र सम्मानको योग ठान्ने तथा मान प्रतिष्ठा र उन्नतिका लागि ठूलो प्रयत्न गर्नेवाला, स्त्री स्थानमा केही हानि र क्लेश पाउने तथा दैनिक व्यापारमा ठूलो परिश्रम गर्ने, पुरातत्त्वमा केही हानि पाउने र धन कमाउन समर्थ होला।

कु० नं० ४२

२ १२
३ १ ११
४ मं. १०
५ ७ ९
६ ८

जुन मानिसको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धि भित्र पुरातत्त्वको महान् शक्ति प्राप्त गर्ने र आयुमा वृद्धि पाउने, मस्तिष्क भित्र र साधारण कुराकानीमा निकैबर्ता तेजी र रिसाहा होला। लुकाउने शक्तिद्वारा गहीरा युक्तिहरूले आफ्नू ठूलो स्वार्थ सिद्ध पार्न जात्रे, जुन वेला पनि गुप्त चालको कुरा मात्र गर्ने, सन्तान पक्षबाट केही गौरव पाउने वाला र जीवनको दिनचर्यामा निकै ठूलो प्रभाव पार्न जात्रे तथा अन्यान्य स्थानहरूलाई विशेष सम्पर्कमा राखेर जीवनको महत्त्व प्राप्त गर्न जात्रे र आफ्नू जीवनी शक्तिको बलले खूब खर्च गर्ने र उत्साहयुक्त रहेर लाभ पाउनेवाला होला।

कु० नं० ४३

२ १२ ३ १ ११ ४ १० ५ मं. ७ ९ ६ ८

जुन मानिसको कन्याको मंगल लग्नबाट छैटौं स्थानमा छ भने त्यो मानिस महान प्रभावको शक्ति पाउनेवाला, आत्मबलको शक्तिले तथा कठोर परिश्रमले यश कीर्ति फिजाउला, शत्रुस्थानमा विजयी हुने तथा केही प्रभावशाली परतन्त्रताको योग पाउनेवाला र जीवनमा ठूलो गौरव प्राप्त गर्ने खालको, आयु स्थानमा शक्ति पाउनेवाला, देहमा केही रोग अथवा अपठेरो अनुभव गर्नेवाला, रोग र अनेक झ्याउलाहरूलाई थिच्न समर्थ हुनेवाला र कुनै प्रकारको पनि आपत्ति वा अपठेरो परेमा कत्ति पनि नआत्तिएर त्यसलाई समाप्त पार्ने उद्योगमा लाग्ने खालको र धर्म स्थानको ध्यान राखेर पनि पूर्णरूपले पालन गर्न नसक्ने र बढी खर्च गर्न मनपराउने, भाग्य वृद्धिको निम्ति अनेक प्रयत्न गर्ने खालको, बहादुर र गुप्त शक्तिवाला, स्वार्थयुक्त होला।

कु० नं० ४४

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ मं. ८

जुन मानिसको तुलाको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै बाधाहरू भए पनि व्यापार थाल्नेवाला, स्त्री स्थानमा केही हानि वा क्लेश पाउने र ठूलो व्यापार भित्र धन कमाउने साधन उत्पन्न गर्न सक्ने खालको, तथा राज र समाजमा सम्मान पाउनेवाला, तथा आफ्नो आत्मगौरवको विशेष ध्यान राख्ने वाला, जीवनको दिनचर्याको आनन्द लिनेवाला र आयुको शक्ति पाउनेवाला, धनको वृद्धि गर्न सक्ने खालको र विशेष प्रयत्न गर्दागर्दै पनि केही न्यूनता भेट्टाउने र पुरातत्त्वको शक्तिवाट लाभ प्राप्त गर्ने भएको र गूढयुक्तिहरूबाट र आत्मबलले गृहस्थी एवं लौकिक परम्पराका कार्य गर्दै रहने तथा भोगादिमा केही न्यूनता पाए पनि कर्मिष्ठ हुनेछ।

कु० नं० ४५

२ १२
३ १ ११
४ १०
५ ७ मं. ९
६ ८

जुन व्यक्तिको वृश्चिकको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस शरीरको केही हलुको, कद र सौन्दर्यमा केही न्यूनता भएको, अत्यन्त गूढ खोजीमा लागिरहने, आफ्नू जीवनमा एकदम अलमस्त, बेफिक्रीले रहने, हृदयमा केही अशान्तिको अनुभव गर्ने र आयुमा शक्ति पाउने खालको, अनि आफ्नू हस्तीलाई मेटेर भए पनि कष्ट सहेर भए पनि अर्कालाई अहंकार सहित जीवनको शक्ति दिएर आफूले बेसरी लाभ कमाउन जान्ने, आफूसित सम्बन्धित कुनै बूढा-पाकाको स्थान ओगटने खालको र सानै उमेरमा बूढोको ढंग पार्ने तथा वृद्धावस्थाको लक्षण र सेतो कपालको योग पाउने, भाइको स्थानमा न्यूनता पाउने प्रसिद्ध हुनेछ।

कु० नं० ४६

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८ मं.

जुन मानिसको धन राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको भरमा आफ्नू जीवनको समय व्यतीत गर्ने खालको,

कु० नं० ४७

र भाग्य स्थानको उन्नतिका लागि भरमगदूर प्रयत्न गर्नेवाला होला तापनि भाग्यको उन्नतिमा अनेक बाधा पाउनेवाला र पुरातत्त्वबाट लाभ पाउनेवाला, धर्मको स्थानमा धर्म-पालन गर्ने तथा धर्मको इच्छा गरे पनि धर्मको वृद्धि गर्न नसक्ने र आयुको आनन्द भेट्टाउने तथा अन्य टाढा-को सम्बन्धले लाभ प्राप्त गर्ने तथा वर्ता धन खर्च गर्ने र मातृ-स्थानको हानि पाउनेवाला अनि सुख- शान्ति र भवन-भूमि आदिको अभाव वा न्यूनता या लापरवाही अनुभव गर्ने खालको र दाजु-भाइको कमी पाउने, आडम्बरी धर्मवाला होला।

जुन व्यक्तिको मकरको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो व्यक्ति आफ्नै शारीरिक बलले ठूलो प्रभाव पाउने तथा आयु र जीवनको

कु० नं० ४८

दिनचर्यामै महान् गौरव प्राप्त गर्ने र पैतृक पुरातत्त्वको ठूलो शक्ति पाउने तथा स्वाभिमान र अहकांरको महानता भेट्टाउने, राज र समाजमा मान-सम्मान सहित इज्जत पाउने, अनि महान् कर्म गर्नसक्ने र प्रभावशाली देह भएको अनि स्वेच्छा र स्वतन्त्रतापूर्वक आफ्नू हुकुमले काम गराउने खालको होला। मातृ-स्थान र सुख-शान्तिको वास्ता नराख्ने तथा विद्या बुद्धि भित्र निकै ठूलो गूढ युक्तिहरू भएको, आत्मबलको शक्तिले काम लिन जान्ने तथा माता-पिताको बढी वास्ता नगर्ने र सन्तानको इच्छा भएको क्रोधी व्यक्ति होला।

जुन मानिसको कुम्भको मंगल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू शारीरिक परिश्रमले खूब लाभ कमाउने तथा लाभको सम्बन्धमा निकै चातुर्य र कूटनीतिले काम लिन जान्ने र आयुको पूरा लाभ पाउने होला। अनि पुरातत्त्वको लाभ पाउने र धन स्थानमा केही हानि भेट्टाउने, अनि कुटुम्बमा केही हानि र क्लेश पाउने खालको तथा सन्तान पक्षमा पनि केही कमी वा हीनता पाउने, शत्रु स्थानमा निकै ठूलो प्रभाव प्राप्त गर्नेवाला, आइपरेका कष्ट र झ्याउलाहरूको अलिकति पनि वास्ता नराख्ने खालको र आमदानीको स्थानमा केही अपठेरो पर्ने देखेर केही नाजायज (अयोग्य) फाइदा पनि पाउने खालको र विद्या एवं बुद्धिको भित्री तहमा लुकेको शक्तिले बिग्रेको काम पनि बनाउन जान्ने होला।

कु० नं०४९

२ १२
३ १ ११ मं.
४ १०
५ ७ ९
६ ८

जुन मानिसको मीनको मंगल लग्नबाट बाह्रौं स्थानमा परेको छ भने त्यो मानिस आफ्नू शरीर र आत्मामा ठूलो अशान्ति अनुभव गर्ने होला। जीवनको आनन्दलाई तुच्छ ठान्ने भएको त्यो मानिस विदेश र अन्य स्थानको नागतले केही शान्ति अनुभव गर्ला। दाजू-भाइको स्थानमा हानि अथवा क्लेशको योग भएको होला। त्यो बढी धन व्यय गर्ने तथा पुरातत्त्वमा ठूलो हानि पाउने होला। आफ्नी स्त्रीमा पनि केही दुर्बलता पाउने र दैनिक व्यापारमा कष्ट अनुभव गर्ने र परिश्रममा व्याकुलता प्राप्त गर्ला। शत्रु स्थानमा प्रभाव राख्ने र खरीद-बिक्री (हेर-फेर) को काम गर्ला। सुख भोगादि गार्हस्थ्य सुखको कमी, सन्तानबाट असहयोग पाउने होला र शरीर दुर्बल भएको होला।

कु० नं० ५०

२ १२ मं.
३ १ ११
४ १०
५ ७ ९
६ ८

# मेषलग्नान्तर बुधफलम्

जुन मानिसको मेष राशिको बुध लग्नको पहिलो स्थानमा छ भने, त्यो मानिस आफ्नू शरीर र विवेक शक्तिको बलले महान् पुरुषार्थ गरेर सम्मान र इज्जत पाउला। दाजू-भाइ र दिदी-बहिनीको शक्तिबाट गौरव प्राप्त गर्ने र मावली पक्षबाट पनि शक्तिको उत्तम सहयोग पाउनेवाला, आफ्नू शत्रु पक्षमा प्रभाव पारिराख्ने होला। सबै प्रकारका अपठ्यारा र आपत्ति-विपत्ति निवारण गर्ने र सहन सक्ने खालको अनि ठूलो हिम्मत र चातुर्यले नहुने काम पनि सजिलैसित सम्पन्न गराउन जान्ने होला। गृहस्थी र स्त्री स्थानमा केही साधारण झ्याउलाहरूका साथै उत्तम र बलियो शक्ति प्राप्त गर्नेवाला तथा केही परिश्रम र युक्तिहरूद्वारा व्यापारमा उन्नति गर्नेवाला, प्रभावशाली र सम्मानले युक्त होला।

कु० नं० ५१

२, १२, ३, १ बु., ११, ४, १०, ५, ७, ९, ६, ८

जुन मानिसको वृष राशिको बुध लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस आफ्नै परिश्रम र पुरुषार्थ एवं बुद्धि-विवेक शक्ति द्वारा निकै धन कमाउने खालको र कमाएको धन वृद्धिको निम्ति धेरै ठूलो गूढ युक्तिहरूको प्रयोग गर्न जान्ने खालको होला। कुटुम्ब स्थानमा सानो-तिनो वैमस्यताका साथै सम्पर्क-शक्ति जोरिराख्ने खालको होला। पुरातत्त्व स्थानबाट विशेष लाभ कमाउन जान्ने भएको त्यो मानिस दाजू-भाइ र दिदी-बहिनीको स्थानमा सुखको अभाव अनुभव गर्ला। केही बन्धन-योग प्राप्त गर्ने र धनको स्थानबाट प्रभाव पार्न जान्ने खालको होला। पुरुषार्थ र बलको स्थानमा केही दुर्बलता पाए पनि आफ्नू शक्तिको एकत्रित भएको बलले निकै गहीरो चाल चल्न जान्ने होला। आफ्नू धनको शक्ति सदैव सम्पत्ति बढाउनेतिर नै प्रयोग गरिरहने यो मानिस इज्जतदार पनि होला।

कु० नं० ५२

२ बु., १२, ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नको तेस्रो स्थानमा छ भने त्यो मानिस विवेक शक्ति र परिश्रम एवं पुरुषार्थद्वारा ठूला- ठूला काम पनि सहजै

कु० नं० ५३

२ १२
३ बु. १ ११
४ १०
५ ७ ९
६ ८

सम्पन्न पार्ने खालको र दाजू-भाइ, दिदी-बहिनीहरूको शक्तिबाट सुख-शान्ति र आ... अलि दुःख-कष्टले प्राप्त गर्ला। आफ्नू शक्तिको कारणले गर्दा साहस र उल्लास प्राप्त गर्ने खालको, अनि आफ्नै परिश्रम र यता-उता दौडा-दौडको शक्तिले सौभाग्य वृद्धि गर्न सक्ने खालको होला। मावली पक्षबाट कुनै सहयोग नपाए पनि आफ्नै प्रभाव शक्तिले उन्नतिको बाटो फुकाउन सक्ने खालको साहसी व्यक्ति होला। धर्मको पालनमा केही प्रयत्न र धन-व्यय गर्ने खालको र आफ्नू मनभित्र आफ्नू शक्तिको सुख एवं गौरव अनुभव गर्नेवाला तथा शत्रु पक्षमा प्रभाव पारिराख्ने प्रभावशाली होला।

जून व्यक्तिको कर्कराशिको बुध लग्नबाट चौथो स्थानमा रहेको छ भने त्यो मानिस आफ्नू पुरुषार्थ र परिश्रमको बलले सुख प्राप्त गर्ने खालको

कु० नं० ५४

२ १२
३ १ ११
४ बु. १०
५ ७ ९
६ ८

तथा दाजू-भाइ, दिदी-बहिनीको शक्तिबाट सानो-तिनो झ्याउलो पछि सुख-शान्ति प्राप्त गर्ने वाला र आमासित अलि-अलि वैमनस्यताको योग भएको होला। मातृ-स्थान र भूमि-स्थानको सम्बन्धमा अलि-अलि बाधाहरू आइलागे पनि सहजै खप्न सक्ने र आफ्नू आराम एवं शान्तिमा बाधा पर्नाले क्रोधित हुने खालको होला। शत्रु स्थानबाट निर्भय रहेर आफ्नू काम सफल बनाउन जान्ने र व्यापारमा लाभ प्राप्त गर्न जान्ने वाला, राज-समाजमा सम्मान प्राप्त गर्नेवाला, तथा पिता स्थानबाट शक्ति प्राप्त गर्न जान्ने र विवेक शक्तिले उन्नति गर्न सक्ने खालको होला।

जुन मानिसको सिंहराशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मनुष्य बुद्धि स्थानमा निकै ठूलो गुप्त विवेक-विचार शक्तिको बलबाट आफ्नू काम सपार्न जान्ने र महान चातुर्यले कुरा-कानी गर्ने र सन्तान पक्षबाट केही वैमनस्यता सहित शक्ति प्राप्त गर्ने र विद्या स्थानमा सान्है ठूलो परिश्रमद्वारा शक्तिले प्राप्त गर्न जान्ने तथा शत्रु स्थानमा बुद्धिको योग्यता र बठ्याइँले आफ्नू काम पूरा गर्नेवाला तथा बुद्धिको परिश्रम शक्तिद्वारा धन कमाउन र कमाउने बाटो पाउन सक्ने र दिमागको शक्तिले धेरै थरि काम गर्न सक्ने खालको होला। दाजू-भाइ, दिदी-बहिनीको स्थानमा सम्मान पाउने खालको होशियार व्यक्ति होला।

कु० नं० ५५

२  १२
३  १  ११
४  १०
५ बु.  ७  ९
६  ८

जुन मानिसको कन्याराशिको बुध लग्नबाट छैठौं स्थानमा वसेको छ भने त्यो मानिस आफ्नू बुद्धि, बल र पराक्रम शक्तिले विवेक द्वारा ठूलो प्रभाव पार्न सक्ने र दाजू-भाइको पक्षमा वैमनस्यता वा विरोध प्राप्त गर्ने खालको होला। मावली पक्षमा उन्नतिको मार्गदर्शक भेट्टाउने र शत्रु स्थानमा विवेक शक्तिले र पुरुषार्थ बाटोबाट ठूलो गौरव पाउने खालको होला। बाहिरी अन्य स्थानको परिस्थितिको सम्बन्धमा उदासीन रहनेवाला तथा खर्चको सम्बन्धमा केही दुर्बलता भए पनि हेलचक्राईले काम लिनेवाला, र अपठेरो परेमा उदासीन एवं विवेक शक्तिले महानता पाउने र केही प्रभावयुक्त परतन्त्रताको योग भएको महान परिश्रमी, हिम्मत र साहस हुने बहादुर होला।

कु० नं० ५६

२  १२
३  १  ११
४  १०
५  ७  ९
६ बु.  ८

जुन व्यक्तिको तुलाराशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै बढी परिश्रमले, विवेक शक्तिद्वारा व्यापार गर्नेवाला र केही दाजु-भाइ र दिदी-बहिनीको शक्ति भेट्टाउने वाला, तथा व्यापारको बाटोमा केही अपठेरो र रोकावट सहन, सक्ने खालको र व्यापारमा नै बढी शक्ति पनि प्राप्त गर्नेवाला तथा स्त्री स्थानमा केही आंशिक वैमनस्यता सहित, शक्ति र प्रभावको लाभ प्राप्त गर्ने वाला तथा इन्द्रियादि भोग-शक्तिले बर्ता प्राप्त गर्नेवाला, शत्रु र गृहस्थी तथा लौकिक कामहरूमा केही अपठेरो पर विवेको युक्ति र शक्तिले आफ्नू उत्थान गर्न सक्ने तथा दैहिक सम्मान प्राप्त गर्नेवाला अनि मावली पक्षका केही राम्रा वस्तु पाउने खालको होला।

कु० नं० ५७

२ १२ ३ १ ११ ४ १० ५ ७ बु. ९ ६ ८

जुन मानिसको वृश्चिक राशिको बुध लग्नको आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू बल-पुरुषार्थमा दुर्बलता अनुभव गर्नेवाला र दाजु-भाइ, दिदी-बहिनीको सुख पनि थोरै नै पाउने वाला, मावलीतिरको पनि केही कमी नै भेट्टाउने खालको होला। आफ्नू चातुर्यले केही गूढ युक्तिद्वारा विग्रेको काम सपार्ने होला। गुप्त-शक्तिको भर मान्ने र पुरातत्त्व स्थानबाट केही अपठेरो सहित विवेकद्वारा शक्ति प्राप्त गर्ने खालको, धन कमाउन र बढाउनको निम्ति बढी प्रयत्न गर्नेवाला, साधारण उदरविकार भएको तथा जीवनको दिनचर्या र शत्रुपक्षमा केही अत्यास अनुभव गर्नेवाला, गुप्त साहस भएको होला।

कु० नं० ५८

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८बु.

जुन मानिसको धन राशिको बुध लग्नको नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थ र परिश्रमद्वारा सफलता प्राप्त गर्नेवाला र केही

कु० नं० ५९

विवेकपूर्ण तर अल्झेको काम पनि आदर्श बाटोद्वारा यश र शक्ति प्राप्त गर्ने खालको तथा भाग्योन्नतिमा केही बाधा र अपठेरो आइलागेको अनुभव गर्नेवाला, अनि धर्मको स्थानमा आफ्नू भित्री दुर्बलता र बाहिरी शक्ति प्राप्त गर्ने खालको तथा आफ्नू भाग्योन्नतिको निम्ति धर्म-अधर्मको कुनै विचार नगर्नसक्नेवाला त्यो मानिस ठूलो गुप्तचर र साहस भएको होला।

जुन व्यक्तिको मकर राशिको बुध लग्नको दसौं स्थानमा छ भने त्यो महान् प्रभावशाली र आयु तथा जीवनको दिनचर्यामा सफल होला। पुरुषार्थ

कु० नं० ६०

र परिश्रमद्वारा तथा विवेक शक्तिले उन्नति गर्नेवाला, अनि दाजु-भाइ दिदी-बहिनीको शक्ति प्राप्त गर्ने, पिता स्थानबाट शक्ति प्राप्त गर्ने, आफ्नू मिहिनेतले कठिन परिश्रमबाट राज-समाजबाट सम्मान र प्रभाव प्राप्त गर्नेवाला तथा पिताको सम्पर्कमा केही वैमनस्यता प्राप्त गर्नेवाला, केही अपठेरो युक्तिहरूद्वारा काममा वृद्धि गर्नेवाला, मातृ-स्थानलाई वैमनस्यताले हेर्नेवाला होला।

जुन व्यक्तिको कुम्भ राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दाजु-भाइ र दिदी-बहिनीबाट लाभ पाउने खालको तथा आफ्नू पुरुषार्थले धन कमाउने खालको, परिश्रम र कठिन युक्तिले लाभ पाउने वाला र शत्रु तथा झ्याउलो लागेको मामिलामा परेकाहरूबाट लाभ प्राप्त गर्न जान्ने भएको, विशेष आमदानी र अनेक थरिका लाभको वृद्धिका लागि चारैतिर दगुरा-दगुर गरेर आफ्नू विवेक शक्तिले काम पूरा गर्ने खालको र विद्या प्राप्तिको लागि ठूलो परिश्रम गर्ने खालको, बुद्धि भित्र निकै कठिन विवेक शक्तिले काम बनाउनेवाला र मीठो बोल्नेवाला, सन्तान पक्षमा केही शक्ति र वैमनस्यताको योग पाउनेवाला, प्रभाव शक्ति र योग्यता भएको निकै बाठो व्यक्ति होला।

कु० नं० ६१

२ १२
३ १ ११ बु.
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस दाजु-भाइ, दिदी-बहिनीको हानि र कम सहयोग पाउने वाला, बल पुरुषार्थमा धेरै दुर्बलता पाउने भएको र मावली पक्षमा हानि पाउनेवाला, ठूला-ठूला कष्ट सहेर खर्च चलाउने खालको तथा निकै संकीर्ण परिश्रम गर्नेवाला, शत्रुपक्षबाट भय र अशान्ति द्वारा काम पूरा गर्न खोज्ने, आफूभित्र लुकेको ठूलो संकीर्ण शक्तिको भर मान्ने खालको र अन्यान्य स्थानहरूको सम्पर्कमा अशान्तिको योग परेको र खर्चको संचालन शक्तिमा अलिकति परतन्त्रता र केही अत्यासको योग भएको र केही मुठी सारो भएको अर्थात विचार नगरी खर्च नगर्ने खालको र केही कष्ट सहेर पनि आइपरेको विपत्तिलाई हटाउन सक्ने खालको होला।

कु० नं० ६२

२ १२ बु.
३ १ ११
४ १०
५ ७ ९
६ ८

# मेषलग्नान्तर-गुरुफलम्

जुन मानिसको मेषराशिको गुरु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस निकै राम्रो, भाग्यशाली र सम्मान प्राप्त गर्नेवाला अनि अन्यान्य स्थानहरूबाट भाग्योन्नतिले गर्दा प्रभाव र मान प्राप्त गर्ने र शानदार खर्च गर्ने खालको र शारीरिक शक्ति प्राप्त गर्ने, अनि धर्मको सम्बन्धमा केही भित्री दुर्बलता भएको र बाहिरी शक्ति प्राप्त गर्ने खालको एवं प्रसस्त विद्या प्राप्त गर्ने खालको तथा यश-कीर्ति भएको, गृहस्थीको सम्बन्धमा केही दुर्बलता भए पनि सुख पाउनेवाला र हृदयको सुन्दर गौरव तथा दूरदर्शिताको शक्ति राख्ने सज्जन होला।

कु० नं० ६३

२　१२
३　१ गु.　११
४　१०
५　७　९
६　८

जुन मानिसको वृष राशिको गुरु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस भाग्यमानी तथा अन्य स्थानको सम्पर्कले र भाग्यको ताकतले धन कमाउने खालको र धनको वृद्धिको निम्ति हृदयको शक्ति र केही देवबलको भर मात्रै खालको र धन संग्रहको स्थानमा केही हानिहरूको पनि योग पाउने वाला र खर्चलाई रोक्ने सकेसम्म पूर्ण प्रयत्न गर्ने खालको तथा कहिले काहीं बढी खर्च गर्ने भएको र धनको तुलनामा धर्मलाई सानो ठान्ने भएको तथा शत्रुपक्षमा निकै उदारताले काम बनाउने भएको, पिता-स्थानको बढी वास्ता नराख्नेवाला र मान-प्रतिष्ठा आदिको पनि केही वास्ता नगर्नेवाला, पुरातत्त्वको लाभ पाउनेवाला, जीवनको दिनचर्यामा विशेष आनन्द अनुभव गर्ने होला।

कु० नं० ६४

२ गु.　१२
३　१　११
४　१०
५　७　९
६　८

जुन मनुष्यको मिथुन राशिको गुरु लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस भाग्यमानी मानिने खालको तथा हृदय र पुरुषार्थको बलद्वारा अन्यान्य स्थानको सम्पर्कबाट लाभ प्राप्त गर्न वाला, आफ्नू पुरुषार्थ शक्तिले खर्च चलाउने भएको र दाजु-भाइ दिदी-बहिनीको राम्रो सम्पर्क पाउने भएको, केही भित्री दुर्बलता या कमी अनुभव गर्ने खालको तथा यश कीर्ति कमाउने र उत्साहपूर्वक काम गर्नेवाला तथा रोजगारको बाटोमा केही बडप्पन र भाग्यको तागतले सफलता प्राप्त गर्नेवाला, धर्मको यथाशक्ति पालन गर्ने खालको र गृहस्थीको आनन्द हेरिरहने वाला र पुरुषार्थले धेरैं लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० ६५

२ १२
३ गु. १ ११
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको कर्क राशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने, त्यो मानिस अन्यान्य स्थानको महान् शक्तिबाट सुख प्राप्त गर्ने खालको र भाग्यको शक्तिले भूमिको विशेष लाभ पाउने वाला र भूमिको एवं मान स्थानको तागतले खूब खर्च गर्ने र सुखपूर्वक दिन व्यतीत गर्नेवाला, मातृपक्षमा र सुख प्राप्तिको साधनहरूमा केही आन्तरिक दुर्बलता र बाहिरी शक्ति प्राप्त गर्नेवाला तथा शत्रु पक्षको सम्बन्धमा भाग्यको प्रभुता र पुरुषार्थ शक्तिले नै सजिलो सफलता पाउने भएको तथा आफ्नो भाग्योन्नतिको निम्ति धर्म-अधर्मको पूरा विचार नगरेर काम गर्ने, धर्मको बर्ता आडम्बर देखाउने, बढी सुख पाउने कारणहरूले उन्नतिको कर्मको वास्ता नगर्ने खालको र बढी खर्च गरेर सुखको वृद्धि गर्ने भाग्यमानी होला।

कु० नं० ६६

२ १२
३ १ ११
४ गु. १०
५ ७ ९
६ ८

जुन मानिसको सिंह राशिको गुरु लग्नको पाँचौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यामानी, बुद्धिमान तथा उत्तम विद्या प्राप्त गर्नेवाला, हृदय र विद्याको शक्तिले राढा-टाढासम्मका कुराहरू लौकिक र अलौकिक कुरा भन्न सक्ने र बुझ्ने खालको, तर विद्याको शक्ति भित्र केही दुर्बलताको योग अनुभव गर्ने खालको र विद्या स्थानबाट नै बुद्धिद्वारा भाग्योदयको शक्ति प्राप्त गर्नेवाला तथा धर्मशास्त्रमा अधिकार राख्ने भएको र वाणीद्वारा 'म ठूलो' भन्ने दर्शाउने र यश-कीर्ति प्राप्त गर्ने खालको तथा सन्तान शक्तिले पनि फाइदा पाउनेवाला, तथा भाग्य शक्तिको बलले ठूलो सम्मान प्राप्त गर्ने खालको र बुद्धि तथा भाग्य शक्तिले खर्च चलाउनेवाला एवं अन्यान्य स्थानहरूको सम्पर्कबाट राम्रो लाभ कमाउने खालको होला।

कु० नं० ६७

२ १२
३ १ ११
४ १०
५ गु. ७ ९
६ ८

जुन व्यक्तिको कन्या राशिको गुरु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्य केही दुर्बल भएको अनुभव गर्नेवाला र यश कीर्तिमा न्यूनता र धर्मको सम्बन्धमा आफूमा केही दुर्बलता गर्ने र खर्चको संचालन शक्तिमा केही परतन्त्रता वा बन्धन भेट्टाउने र भाग्योदयको सम्बन्धमा ठूला-ठूला बाधाहरू द्वारा र अनेकानेक तगाराहरू नाधेपछि उन्नतिको बाटो अन्य स्थानको सम्पर्कले प्राप्त गर्नेवाला, पिताको स्थानको सम्बन्धमा उदासीन रहनेवाला, राज-समाजको पनि वास्ता नगर्ने खालको र धन जोर्ने चेष्टा हृदयको शक्तिले र भाग्यको भरले, खर्च रोक्ने शक्तिले गर्नेवाला, शत्रु स्थानमा उदारताले काम लिने, केही गुप्त चाल चल्ने खालको होला।

कु० नं० ६८

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ गु. ८

जुन मानिसको तुलाको गुरु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्तिले र बाहिरी सम्पर्कले व्यापारमा सफलता पाउनेवाला, गृहस्थीको सुखमा केही न्यूनता सहित उन्नति भेट्टाउने वाला, पत्नीमा केही अभिमान र धार्मिक भावना बढेको देख्नेवाला, दैनिक व्यापारमा हृदय बलको शक्तिले व्ययको बल पाउनेवाला, दैवीगुणका कलाबाट पनि फाइदा पाउने र ईश्वर एवं भाग्यमा विश्वास राख्ने खालको र लौकिक कामहरूमा सफलता तथा सम्मान प्राप्त गर्नेवाला, उन्नतिको निम्ति ठूलो पुरुषार्थ गर्ने, व्यापारमा पनि धर्मको हृदयमा ध्यान राख्ने खालको होला।

कु० नं० ६९

२ १२
३ १ ११
४ १०
५ ७ गु. ९
६ ८

जुन मानिसको वृश्चिकको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यको पंक्तिमा दुर्बलता पाउने र यशमा न्यूनता भेट्टाउने, विदेशमा सम्मान र भाग्यको योजना पाउने तथा ठूलो परिश्रमको बलले खर्च गर्ने शक्ति भेट्ने खालको र धर्मको बाटोमा हिड्न जान्ने र सुखको बढी प्राप्तिको लागि महान् साधन पाउनेवाला, हृदय भित्र मातृ-स्थानको ठूलो चाहना, इज्जत पाउने र पुरातत्त्वको लाभ भेट्टाउने र सानो आयुमैं ठूलो वृद्धि पाउने र धन-वृद्धिका लागि भाग्यको केही सहयोग पाउनेवाला, तर भाग्यतर्फबाट केही दुःख मान्नेवाला होला।

कु० नं० ७०

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ ८गु.

जुन व्यक्तिको धनको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी भएर पनि सौभाग्यमा केही न्यूनता पाउनेवाला र अन्य स्थानहरूको सम्बन्धमा स्वयं सफलताका साधन पाउनेवाला, दैवी सहायताको योगले सम्मान, विद्या र बुद्धिमा सफलता तथा चमत्कार पाउनेवाला एवं सन्तान सुखले सन्तुष्ट रहने वाला, आफ्नू हृदयमा गौरव र धर्मको मर्यादा पालन गर्ने खालको तर धर्म स्थानमा दुर्बलता भेट्नेवाला, पुरुषार्थले नै सफलता भेट्टाउनेवाला, दाजु-भाइ र दिदी-बहिनीको केही सहयोग पाउनेवाला तथा भाग्यलाई ठूलो र प्रधान मान्ने खालको सुमार्गी होला।

कु० नं० ७१

२ १२ ३ १ ११ ४ १० ५ ७ ९गु. ६ ८

जुन मानिसको मकरको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा हानि, न्यूनता पाउनेवाला, हृदय-योगले सम्बन्धित कुनै सानो व्यवसायद्वारा भाग्यको शक्ति पाउने तथा राज-समाजबाट कुनै खास महत्व नभेट्ने खालको एवं साधारण रूपमा खर्च गरेर आफ्नू इज्जत जोगाउने किसिमको तथा मातृ-स्थान र सुख-शान्तिको वातावरण प्राप्त गर्नमा हृदयको पूरा बल प्रयोग गर्ने र धनको वृद्धिको लागि पनि केही सहयोग भाग्य एवं अन्य स्थानको शक्तिबाट प्राप्त गर्ने किसिमको तथा शत्रु स्थानमा केही उदारताले काम वनाउनेवाला र भाग्य स्थानमा परिश्रमको योग पाउनेवाला तथा केही छल-कपटले ठूलो लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० ७२

२ १२ ३ १ ११ ४ १० गु. ५ ७ ९ ६ ८

जुन मानिसको कुम्भको गुरु लग्नबाट एधारौं स्थानमा छ भने त्यो मानिस भाग्यको बलले र अन्यान्य स्थानहरूको सम्पर्कले लाभ पाउनेवाला,

कु० नं० ७३

२ १२ ३ १ ११ गु. ४ १० ५ ७ ९ ६ ८

तथा पाएको लाभमा न्यूनता अनुभव गर्ने वाला, धर्मको सम्बन्धले पनि लाभ भेट्टाउनेवाला तथा पुरुषार्थले केही लाभ पाउनेवाला र दाजु-भाइ, दिदी-बहिनीको आंशिक सहयोग भेट्नेवाला र गृहस्थीको केही आनन्द प्राप्त गर्ने खालको तथा दैनिक व्यापारबाट लाभ कमाउनेवाला, खर्च गर्न पनि तत्पर रहने खालको र हृदयको शक्तिले काम गर्नेवाला, सन्तान-शक्तिको पनि केही लाभ पाउनेवाला, बोल-चाल र विद्याको भित्र सफलताको योग पाउने होला।

जुन मानिसको मीन राशिको गुरू लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बाहिरी स्थानहरूको सम्पर्कबाट भाग्यको शक्ति-साधन प्राप्त

कु० नं० ७४

२ १२ गु. ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

गर्ने तथा भाग्यको स्थानमा केही दुर्बलता पाउने वाला र बढी खर्च गर्ने, भाग्यको शक्तिले खर्च संचालनको शक्ति सदैव प्राप्त गर्नेवाला, भाग्योन्नतिको निम्ति हृदयको बल र वृथाभिमानको ढंगले अबेर गर्ने अनि हानि भइसकेपधि बल्ल सफलता पाउनेवाला र हृदय-शक्तिले नै बढी उन्नति पाउने खालको र धार्मिक कामहरूमा पनि खर्च गर्नेवाला तथा जीवनको दिनचर्यामा केही गौरव प्राप्त गर्नेवाला एवं शत्रु स्थानमा केही अभिमानको भावले काम पूरा गर्ने खालको होला।

# मेष लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको मेषको शुक्र लग्नको पहिलो स्थानमा रहन्छ, त्यो मानिस निकै शानदार (उच्चकोटिको) व्यापार गर्ने र धन कमाउने खालको राम्रो शरीर हुने तथा राम्री पत्नीवाला, भोग-विलासको शक्तिको उत्तम आनन्द प्राप्त गर्ने वाला, ठूलो चातुर्य र कलाहरूले आफ्नू काम बनाउने र निकै मान-सम्मान प्राप्त गर्ने खालको र धन एवं कुटुम्बको आनन्द प्राप्त गर्नेवाला तथा लौकिक कार्यहरूमा बढी दक्षता र कुशलता भएको, स्त्रीको मनमा निकै अभिमान पाउन सक्ने र गृहस्थीको उत्तम आनन्द भोग्नेवाला, धनीहरूमा गनिने खालको तथा इन्द्रियादिक सुखहरूलाई बढी महत्व दिने भएको, निकै कार्यकुशल, इज्जतदार होला।

कु० नं० ७५

२ १२ ३ १ शु. ११ ४ १० ५ ७ ९ ६ ८

जुन मानिसको वृषको शुक्र लग्नबाट दोस्रो स्थानमा छ भने, त्यो व्यक्ति धेरै धन कमाउने, बढी कुटुम्ब भएको र अनेक थरिका व्यापार गर्नेवाला तथा चातुर्यले धन संग्रह गर्न जान्ने शक्ति भएको र स्त्री स्थानबाट सुख सम्बन्धमा ठूलो योगदान भेट्टाउने र इन्द्रिय भोगादिको सम्बन्धमा अनेक थरिका साधन जम्मा पार्नेवाला, जीवनको दिनचर्यामा बर्ता धनीको प्रभावले आनन्द मात्रै खालको र पुरातत्त्वबाट धनको लाभ प्राप्तगर्ने खालको, मान र इज्जत प्राप्त गर्नेवाला र गूढ एवं गुप्त चालाको युक्तिले पनि लाभ प्राप्त गर्ने भएको तथा जीवनमा बन्धन ही अनुभव गर्ने किसिमको होला।

कु० नं० ७६

२ शु. १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

जुन मानिसको मिथुनको शुक्र लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थले र चातुर्यले अनेक काम गरेर धेरै धन कमाउन सक्ने र व्यापार गर्ने ठूलो शक्ति भएको अनि दाजु-भाइ र दिदी-बहिनीको राम्रो सहयोग पाउनेवाला, स्त्रीमा आफ्नू गहिरो प्रभाव पार्न जान्ने, सुन्दरता र धार्मिकताको योग प्राप्त गर्न सकेको अनि इन्द्रिय भोगादिको धेरै शक्ति प्राप्त गर्न सक्ने खालको तथा कर्तव्य र धर्मको विशेष ख्याल राख्ने किसिमको, अनि इज्जतदारहरूमा गनिने खालको, राम्रो प्रभावशाली व्यक्तित्व भएको तथा लौकिक र कुटुम्ब-शक्तिको बर्ता आनन्द पाउने र बाठो होला।

कु० नं० ७७

जुन मानिसको कर्कको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धनको सुख प्राप्त गर्नेवाला, पत्नीमा सौन्दर्य, स्वच्छता, सम्मान, धनी र शान्तिको योग पाउने इच्छा भएको तथा गृहस्थी र आमाको राम्रो सम्पर्क भेट्टाउने भएको र घर-जमीन आदिको स्वामी हुने खालको र कुटुम्बको सुख, सहयोग प्राप्त गर्नेवाला, रोजगार व्यापारको विशेष लाभ पाउनेवाला समाजमा मान-सम्मान र धन भेट्टाउने योग परेको तथा नोकरीमा उन्नति गर्ने खालको र पिता स्थानको सहायक शक्ति पाउनेवाला, शान्तिपूर्वक गहीरो चातुर्य आदिले लौकिक सुख सुविधाको बलियो शक्ति र आनन्द पाउने खालको होला।

कु० नं० ७८

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नको पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू चातुर्य र बुद्धिद्वारा कुनै प्रकारको कलाबाट आजीविका

कु० नं० ७९

२ १२
३ १ ११
४ १०
५ शु. ७ ९
६ ८

चलाउने भएको र परिश्रम, बल र बुद्धिले नै धनको उपार्जन गर्न जान्ने भएको, गृहस्थी र स्त्री-सुखको मनमा अभाव अनुभव गर्ने खालको, इन्द्रिय-सुख र भोगादिको विषयमा बढी चिन्तन गर्ने भएको तथा मस्तिष्क-शक्ति द्वारा धेरै धनलाभ पाउने खालको, अनि दिमागमा बढी कुरा खेलाउने बानी परेको, सन्तान पक्षमा केही बर्ता बन्धन अनुभव गर्ने भएको, अनि आफ्नू वाणीको चातुर्यले बिग्रेको काम पनि सपार्न सक्ने भएको, धेरै प्रकारले बढी लाभ पाउनको निम्ति मन-बुद्धिमा बर्ता बल लगाउने भएको, कुटुम्बको तर्फबाट अलि-अलि चित्त दुखाउने र विद्याले युक्त भएको होला।

जुन व्यक्तिको कन्या राशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धनको विषयमा बढी चिन्ता गरिरहने खालको तथा कुटुम्बको हानि

कु० नं० ८०

२ १२
३ १ ११
४ १०
५ ७ ९
६ शु. ८

पाउने भएको र स्त्रीतर्फबाट निकै अशान्ति अनुभव गर्ने भएको, इन्द्रिय भोगादिको बर्ता न्यूनता मात्रै भएको तथा भोगादिद्वारा बर्ता न्यूनता मात्रै भएको तथा भोगादि द्वारा नै केही अनुचित लाभ भेट्टाउने खालको तर व्यापारको लाइनमा बढी दुर्बलता तथा बर्ता परिश्रम र अनेक झ्याउला द्वारा काम चलाउन बनाउन जान्ने खालको, रोजगार-व्यापारको सम्बन्धमा गुप्त र अपठेरो किसिमले भए पनि आफ्नू काम सपार्न जान्ने खालको होला। मावलीबाट कुनै पनि सहयोग नपाउने र बढी धन-व्यय गर्ने भएको र अन्यान्य स्थानहरूको विशेष सम्पर्क राख्ने खालको तथा शत्रु स्थानमा नरम भावले तथा गुप्त युक्तिहरूले काम बनाउन जान्ने खालको, मावल पक्षको दुर्बलता

पाउनेवाला, रोगादि अनेक थरिका झ्याउलाहरू बाट धनको केही संकीर्णता अनुभव गर्ने भएको र धनको लेन-देनमा विशेष रूचि राख्ने खालको होला।

जुन मानिसको तुलाराशिको शुक्र लग्नको सातौं स्थानमा छ भने त्यो मानिस कुटुम्ब र व्यापारको बाटोबाट धेरै धन कमाउन जान्ने खालको र धनको शक्तिले नै व्यापारमा उन्नति प्राप्त गर्ने खालको तथा राम्री पत्नी र धनले वलियो ससुराली भेट्टाउने भएको, पत्नी र गृहस्थीको सुन्दर शक्तिभित्र एक प्रकारको सानो भए पनि बन्धन परेको अनुभव गर्ने भएको र इन्द्रिय भोगादि भित्र पनि शक्तिको बाटोमा तगारो लागेको अनुभव गर्ने भएको, अनि व्यापारको लाइनमा निकै ठूलो बल र कला-कौशल, चातुर्यद्वारा आफ्नू काम सपार्न जान्ने भएको, ठूलो इज्जत र सम्मान पाउने भएको, लौकिक काममा ठूलो सामर्थ्यको परिचय दिन जान्ने भएको, शारीरिक सौन्दर्यमा अद्वितीय शोभा पाउने खालको होला।

कु० नं० ८१

२, १२, ३, १, ११, ४, १०, ५, ७ शु., ९, ६, ८

जुन व्यक्तिको वृश्चिकको शुक्रलग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धनको शक्तिको निकै दुर्बलता पाउने खालको, पुरातत्त्व धनबाट लाभ कमाउने खालको र उपस्थित धनमा धेरजसो हानि नै पाउने भएको र गूढ एवं गुप्त र परिश्रमको युक्तिले व्यापारको लाइनबाट धन कमाउन जान्ने, विदेश आदिको योग वा सम्बन्धबाट निकै सफलता भेट्टाउने खालको, स्त्री स्थानको हानि भोग्ने वाला, गृहस्थीको भित्र अनेक सानो-ठूलो झ्याउलाहरू भोग्नेवाला, इन्द्रिय भोगादिको न्यूनता भेट्टाउने खालको, जीवनको दिनचर्यामा केही दुर्बलताको अनुभव गर्ने र चातुर्यको कला भेट्ने गुप्त मोजी होला।

कु० नं० ८२

२, १२, ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८ शु.

जुन व्यक्तिको धनुराशिको शुक्र लग्नको नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्ति र व्यापारको बाटोबाट धन कमाउन जान्ने, भाग्य र धनको तागतले रोजगारमा उन्नति गर्ने तथा पत्नीको सौन्दर्य-शक्तिको योग पाउने भाग्यमानी भएको र स्त्रीको मन भित्र धार्मिक र लौकिक भावनाहरूको सम्मिश्रम पाउने खालको तथा स्वयं भाग्यवान मान्नेवाला, उन्नति प्राप्त गर्नका लागि ठूलो पुरुषार्थ गर्न जान्ने भएको र दाजु-भाइ, दिदी-बहिनीको सहयोग पाउने खालको र गृहस्थी एवं लौकिक कामहरूमा धर्माचरण मनपराउने तथा केही इन्द्रिय संयमले लाभ प्राप्त गर्ने भएको निकै बाठो र मानयुक्त, इज्जतदार होला।

कु० नं० ८३

२ १२
३ १ ११
४ १०
५ ७ ९शु.
६ ८

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो भलादमी र ठूलोनै रोजगार, व्यापार गर्ने होला। पूरा सम्मान सहित चादुर्यले धेरै धन कमाउने र पिता स्थानमा बढी मद्दत पाउने तथा राज-समाजमा इज्जत पाउने र स्त्री स्थानमा ठूलो गौरव पाउने, भोग-विलासको विषयमा महानता भेट्टाउने र लौकिक कामहरूमा धेरै ठूलो प्रवीणता (बठ्याइँ) वा दक्षता राख्नेवाला र गृहस्थीको सुखको ठूलो र राम्रो आनन्द पाउनेवाला र धनको शक्तिले एवं नित्य-प्रतिको परिश्रमद्वारा बढी उन्नति गर्नेवाला, भूमि-भवन आदिको सुख पाउनेवाला र कुटुम्बको शक्तिले महानता खालको र मातृ-सुख प्राप्त गर्ने र अत्यन्त बाठो होला।

कु० नं० ८४

२ १२
३ १ ११
४ १०शु.
५ ७ ९
६ ८

जुन व्यक्तिको कुम्भको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस व्यापारको लाइनमा बढी चातुर्यहरू द्वारा बढी आय पाउनेवाला,

कु० नं० ८५

२　१२　३　१　११ शु.　४　१०　५　७　९　६　८

तथा धनको बलले र नित्यको कार्यक्रमको परिश्रमले धनको वृद्धि गर्न जान्नेवाला, स्त्री स्थानको निकै राम्रो, विशेष लाभ भेट्टाउने वाला, अनि इन्द्रिय भोगादिक पदार्थहरूको महत्ताको लाभ प्राप्त गर्नेवाला तथा अनेक थरीका बढी मोल पर्ने सौन्दर्य युक्त पदार्थहरूको पनि लाभ पाउने खालको र गृहस्थीको अपूर्व आनन्द एवं लाभ र सुख भेट्नेवाला, लौकिक कार्यहरूमा निपुणता र चातुर्यले बढी लाभ पाउनेवाला, तथा सन्तान भावमा गृहस्थीको सुखको विचारले केही न्यूनताको योग अनुभव गर्ने खालको तथा विद्यामा पनि केही कमीको वा अरूचिको योग पाउने भएको होला।

जुन व्यक्तिको मीन राशिको शुक्र बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै धन खर्च गर्नेवाला, अनि धन स्थानको ठूलो हानि पाउने र गृहस्थी

कु० नं० ८६

२　१२ शु.　३　१　११　४　१०　५　७　९　६　८

एवं कुटुम्बको पनि हानि पाउने भएको स्त्री स्थानमा पनि अशान्ति र हानि सम्भव छ। अन्य स्थानको संयोग (सम्पर्क) बाट गृहस्थीको र स्त्रीको शक्ति (बल) पाउने भएको, फेरि अन्य स्थानको सम्पर्कले नै व्यापारको लाइनमा उन्नति गर्ने भएको, इन्द्रिय-भोगादिको सम्बन्धमा बढी धन खर्च गर्ने भएको, बाहिरी स्थानहरूको सम्बन्धमा कार्य कुशलताले विशेष बल राख्ने भएको र शत्रुपक्ष एवं विवाद झगडा आदिको सम्बन्धमा मावली पक्षमा दुर्बलताको योगले आफ्नू काम सिद्ध पार्ने वाला होला।

# मेष लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको मेष राशिको शनि लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस शारीरिक सौन्दर्य र कदमा केही कमी पाउने खालको तथा पिता स्थानको तर्फबाट न्यूनताको योग पाउनेवाला, आयको सम्बन्धमा केही परतन्त्रताको योग भएको, तथा केही बन्धन युक्त कर्म गर्न बाध्य भएको र उन्नतिको शिखरमा पुग्नको लागि अनेकानेक प्रयत्न गर्दै रहे पनि विशेषता प्राप्त गर्न नसक्ने भएको र राज समाजमा साधारण सुख प्राप्त गर्ने खालको र दैनिक रोजगारको उन्नतिमा ठूलो प्रयत्न गर्नेवाला, परिश्रम र पुरुषार्थ गर्दै रहनेवाला, दाजु-भाइ, दिदी-बहिनीका स्थानको केही पूर्ति पाउनेवाला, इज्जतको निम्ति केही गुप्त कर्म वा चिन्ताको योग परेको तथा स्त्रीलाई बढी महत्व दिने र अल्छी खालको होला।

कु० नं० ८७

२ १२
३ १श. ११
४ १०
५ ७ ९
६ ८

जुन व्यक्ति वृष राशिको शनि लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस आफ्नू कर्तव्य-कर्म र लाभको शक्तिले धेरै धन कमाउने वाला, तथा धन र इज्जतको प्रभाव वा शक्तिले निकै ठूलो आमदानी एकैपल्ट ( एकमुस्त ) किसिमले प्राप्त गर्नेवाला, पिता स्थानको र कुटुम्बको पनि शक्ति भेट्टाउने भएको, अनि राज समाजबाट पनि धेरै लाभ पाउनेवाला र मातृ-स्थानमा अलि वैमनस्यताको योग परेको तथा सुख प्राप्तिको लागि अनेक साधनहरू र धनको बलले एकत्रित पार्न जान्ने खालको र जीवनको दिनचर्यामा केही अशान्तिको योग परेको तथा धन र इज्जतको स्थिर शक्ति पाउनेवाला तथा धनको वृद्धिका लागि महान् कर्म बन्धनको शक्तिद्वारा काम सपार्न जान्ने खालको होला।

कु० नं० ८८

२श. १२
३ १ ११
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस महान पराक्रमी, पुरुषार्थद्वारा उन्नतिको शिखरमा पुग्नेछ, पिताको शक्तिको बढी सहयोग र लाभ पाउनेवाला, दाजु-भाइ, दिदी-बहिनीको योग पनि प्राप्त गर्नेवाला, राज समाजमा मान-प्रतिष्ठा पाउनेवाला, बढी खर्च गर्नाको कारणले अशान्तिको योग प्राप्त गर्नेवाला, सन्तान पक्षबाट केही अशान्तिको वातावरण उपस्थित भएको अनुभव गर्नेवाला, असाधारण उन्नति प्राप्त गर्नका लागि बुद्धिमा केही अपठेरो अनुभव गर्नेवाला, तथा सम्मान प्राप्तिको विचारले अन्य बाहिरी स्थानहरूमा केही वैनस्यताको योग प्राप्त गर्ने खालको होला। धर्म पालनमा निराश मात्रे अहंकारी होला।

कु० नं० ८९

२ १२
३श. १ ११
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको कर्क राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस पिताबाट सुख पाउनेवाला तथा आफ्नै स्थानबाट व्यापार गर्नेवाला र सरलताले शान्तिपूर्वक लाभ पाउनेवाला एवं राज समाजमा सुख प्राप्त गर्नेवाला मान-सम्मान, इज्जतको साधन जोरिराख्नेवाला, मातृ-स्थानमा केही अशान्ति युक्त वातावरण र गौरव लाभ गर्न जान्ने वाला, शत्रु स्थानमा मौका अनुसार ठूलो प्रभावले आफ्नू काम पूर्ण गर्न जान्नेवाला, अनि अपठेरो र विपत्तिहरूमा सहजै विजय प्राप्त गर्ने क्षमता राख्ने भएको र देहस्थानमा केही न्यूनता र केही उदासीनताको योग पाउने भएको होला। सांसारिक कारणहरूले आत्मा भित्र अलि-अलि अशान्ति भएको अनुभव गर्नेवाला, विशेष परिश्रको काम गर्न मनपराउने खालको कर्मठ व्यक्ति होला।

कु० नं० ९०

२ १२
३ १ ११
४ श. १०
५ ७ ९
६ ८

जुन व्यक्तिको सिंह राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा अलि न्यूनताको योग अनुभव गर्ने खालको होला। अनि पिताका स्थानको सम्बन्धले नै केही लाभ प्राप्तिको योग पाउनेवाला, बुद्धि र विद्याको स्थानबाट पनि धनागम गर्नेवाला तथा व्यापारको लाइनमा निकै ठूलो उन्नतिका लागि सकेसम्म र बल पुगेसम्म प्रयत्न गरिरहनेवाला, इन्द्रिय भोगादिकको प्राप्तिका निम्ति ठूलो उत्साहले काम गर्ने खालको होला। स्त्री स्थानलाई विशेष महत्व दिनेवाला र लौकिक तथा सामाजिक कामहरूको सम्बन्ध मार्गमा बढी परिश्रम गर्नेवाला र धनको वृद्धिका लागि खूब कर्म गर्ने खालको तथा सन्तान पक्षमा केही वैमनस्यताको योग पाउने खालको होला।

कु० नं० ९१

२ १२
३ १ ११
४ १०
५श. ७ ९
६ ८

जुन व्यक्तिको कन्या राशिको शनि लग्नको छैठौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही वैमनस्यताको योग परेको होला तथा केही प्रभावशाली र अलि-अलि परतन्त्रता युक्त कर्म गर्ने खालको तथा दिनचर्यामा केही अपठेरो अनुभव गर्नेवाला, शत्रु स्थानमा बढी प्रभाव राख्ने खालको, विपत्ती र कष्टहरूमा विजय पाउनेवाला, आमदानीको स्थान विवशताले केही तगारो पारेजस्तो अनुभव गर्ला, खर्चको स्थानमा विवशताले गर्दा बढी व्यय गर्नेवाला, अन्य स्थानहरूको सम्बन्धमा केही वैमनस्यताको योग पाउनेवाला, आफ्नो बल-पुरुषार्थको शक्तिले महान कार्य गर्नेवाला, दाजु-भाइ, दिदी-बहिनीबाट केही आशा र घनिष्ठ सम्पर्क राख्नेवाला व्यक्ति होला।

कु० नं० ९२

२ १२
३ १ ११
४ १०
५ ७ ९
६श. ८

जुन व्यक्तिको तुलाराशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस पिता स्थानको शक्तिबाट ठूलो सहयोग प्राप्त गर्नेवाला तथा निकै प्रभावशाली ढंगले व्यापार गर्नेवाला, दैनिक रोजगारको लाइनमा महान परिश्रम गर्नेवाला, शरीर र आत्मामा केही अशान्तिको कारण अनुभव गर्ने भएको र भोग-विलासको लागि महान् साधन प्राप्त गर्नेवाला, तथा रोजगारको श्रेणीमा बर्ता लाभ पाउनेवाला, र भाग्यको उन्नतिका लागि धेरै अनेक प्रयत्न गर्ने वाला, धर्मको वास्तविक रूपको पालन नगरेर बाहिरी धर्मको पालन गर्नेवाला, आफ्ना उग्र कर्महरूको कारणले आमासित केही अशान्तिको साथै लाभको सम्बन्ध भेट्टाउनेवाला अभिमानी होला।

कु० नं० ९३

| | | |
|---|---|---|
| २ | | १२ |
| ३ | १ | ११ |
| ४ | | १० |
| ५ | ७ श. | ९ |
| ६ | | ८ |

जुन व्यक्तिको वृश्चिकको शनि लग्नको आठौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट कष्टको योग पाउनेवाला र उन्नतिको स्थान प्राप्त गर्नको निम्ति महान् परिश्रम र उद्योग तथा कूटनीतिहरूको सहयोग प्राप्त गर्ने खालको तथा आयुको वृद्धि पाउने र लाभको निम्ति कठोर कर्म गर्न अघिसर्ने, विदेशको सम्बन्ध पाएर केही उन्नति गर्ने खालको तथा महान हठ्योगको प्रयोगले काम बनाउनेवाला, आफ्नू राम्रो र गहीरो गुप्त शक्ति र युक्तिहरूको ठूलो भर मान्नेवाला, जे काममा पनि सफलता पाउनेवाला, तर राज समाजमा सम्मानको माझमा अलिकति कमीको साथै वृद्धि पाउनेवाला, अनि बुद्धि-भित्रै केही कष्टको अनुभव गर्नेवाला, विद्या र सन्तान पक्षमा केही वैमनस्यता पाउने तथा हठी स्वभावको होला।

कु० नं० ९४

| | | |
|---|---|---|
| २ | | १२ |
| ३ | १ | ११ |
| ४ | | १० |
| ५ | ७ | ९ |
| ६ | | ८ श. |

जुन व्यक्तिको धन राशिको शनि लग्नको नवौं स्थानमा छ भने त्यो मानिस कर्म भाग्यको शक्तिले धेरै धन कमाउने होला, तोकिएको आमदानी पाउने अधिकारी र ठूलो भाग्यशाली मानिने खालको तथा अनेक प्रकारले धर्मको पालन गरेर धर्मको शक्ति देखाउनेवाला, पिता स्थानबाट सम्बन्धित विशेष लाभ पाउनेवाला, राज समाजको शक्तिबाट लाभ-भाग्य र चातुर्यको बलले प्राप्त गर्नेवाला तथा शत्रु स्थानमा ठूलो प्रभाव जमाउनेवाला र अनेक कष्ट एवं झ्याउलाहरूमा विजय पाउनेवाला तथा महान पुरुषार्थ र परिश्रमले लाभ कमाउनेवाला तथा देवता वा भगवतीको कृपाले केही परिश्रम गर्नाले नै प्रभावको वृद्धि भेट्टाउने र ईश्वरीय सफलताको अधिकारी हुन्छ।

कु० नं० ९५

२ १२
३ १ ११
४ १०
५ ७ ९श.
६ ८

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो व्यापारी कारवार जान्ने र गर्ने तथा निकै शान र अभिमानका साथ आमदानी पाउनेवाला, पिता स्थानको शक्ति ठूलो लाभ पाउनेवाला, राज समाजको सम्बन्धले धेरै इज्जत र धन-मान प्राप्त गर्ने तथा अनेक प्रकारले राजसी खर्च गर्न मनपराउने, अनि अनेक स्थानहरूमा विभिन्न प्रकारका सम्बन्ध कायम गर्न जान्नेवाला, मातृ-स्थानको सम्पर्कमा अरूचि भएको ध्वनि जस्तै सारा क्षेत्रमा सफलता प्राप्त गर्नेवाला, भोग-विलासको सम्बन्धमा इच्छित साधन प्राप्त गर्नेवाला, उन्नतिको शिखरमा पुग्नको लागि महान कार्य गर्ने र स्वाभिमानी होला।

कु० नं० ९६

२ १२
३ १ ११
४ १० श.
५ ७ ९
६ ८

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट एधारौं स्थानमा छ भने त्यो मानिस धेरै बलियो आय पाउने तथा इज्जतको कामले उन्नतिको टुप्पामा पुग्ने, अनि पिता स्थानको सम्बन्ध पनि लाभको योग प्राप्त गर्नेवाला, राज समाजसित पनि राम्रो सम्बन्ध भएर विशेष लाभ पाउने, स्वयंले पनि शक्ति प्राप्त गर्ने जात्रे भएको र उन्नतिको साधनमा आफ्नू शरीरको पनि वास्ता नगर्नेवाला, शरीर र आत्मामा कुनै प्रकारको न्यूनताको योग पाउनेवाला, अनि बुद्धिमा केही अत्यास र झर्किने योग वा बानी भएको तथा सन्तान पक्षबाट केही असन्तोष अनुभव गर्ने होला।

कु० नं० १७

२ १२
३ १ ११ श.
४ १०
५ ७ ९
६ ८

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पिता स्थानको तर्फबाट हानिको योग भेट्टाउनेवाला र धेरै प्रकारले अनावश्यक खर्च गर्ने खालको र अरू बाहिरी सम्पर्कले मोटर आदिको व्यवसाय गरेर आमदानीको शक्ति भेट्टाउने वाला, तर मान-प्रतिष्ठाको स्थानमा न्यूनताका कारणहरूको योग पाउनेवाला र धनको वृद्धिका लागि धेरै ठूलो प्रयत्न गर्दै रहने खालको र कुटुम्ब स्थानबाट आंशिक मान-प्रतिष्ठाको सम्बन्ध राख्नेवाला, बाहिरी स्थानहरूको सम्पर्क शक्तिको कर्मबलबाट भाग्यमानीमा गनिने भएको तथा धर्मको पालनका लागि केही अनेक थरिका साना-साना कर्महरू गर्दै रहने भएको, शत्रु स्थानमा प्रभाव राख्ने खालको व्यक्ति होला।

कु० नं० १८

२ १२श.
३ १ ११
४ १०
५ ७ ९
६ ८

# मेष लग्नान्तर-राहुफलम्

जुन व्यक्तिको मेष राशिको राहु प्रथम स्थानमा छ भने त्यो मानिस शारीरिक कष्ट सहन सक्ने खालको र शरीरमा कुर्नै प्रकारको केही न्यूनताको पाउनाले दुःख मान्ने भएको तथा महान् गुप्त साहस राख्ने खालको र आफ्नू स्थायी उन्नतिका लागि शक्ति प्राप्त गर्ने भएको, फेरि आफ्नू नाम अमर तुल्याउन ठूलो भन्दा पनि ठूलो विपत्ती वा खतरा उठाउन सक्ने खालको र अनधिकार प्रयत्न पनि गर्न अधिसर्ने खालको, अनि आफ्नू गुप्त शक्तिको कर्म-बलले प्रतिष्ठामा उन्नति पाउने खालको र ठूला-ठूला मार्मिक आघात र सकंट सहन सक्नेवाला, उन्नतिको पथमा अडिन सक्ने खालको तथा युक्ति र शक्तिको भर मान्ने वाला होला।

कु० नं० ९९

२, १२, ३, १रा., ११, ४, १०, ५, ७, ९, ६, ८

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धन स्थानमा केही हानि पाउनेवाला तथा कुटुम्बमा केही बिग्रह पाउनेवाला र धनको वृद्धिका लागि महान् भन्दा पनि ठूलो चातुर्यहरूले काम सपार्नेवाला तथा धनको चिरस्थायी- का लागि शक्ति पाउने खालको, केही अनाधिकार प्रयत्न गुप्त रीतले बराबर गर्दै रहने खालको, धनको स्थानमा कहिले काहीं डरलाग्दो संकटमा पर्न पनि आँट गर्ने खालको होला। धनको सम्बन्धमा कहिले काहिं अर्काको भर र विश्वास मान्नेवाला, धनसंग्रह गर्नको निम्ति दिमागको परेशानी तथा बुद्धिको र युक्तिको निकै ठूलो हिम्मतले काम पूर्ण पार्नेवाला र देख्दा ठूलै धनी झैं मानिने या देखिने खालको तथा केही गुप्त अशान्तिमा गाडिएको होला।

कु० नं० १००

२ रा., १२, ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८

जुन व्यक्तिको मिथुनको राहु लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस निकै तूलो पुरुषार्थ शक्ति भित्र निकै साहस र हिम्मत भएको,

कु० नं० १०१

२ १२
३ रा. १ ११
४ १०
५ ७ ९
६ ८

मस्तिष्कको शक्तिले र गुप्त युक्तिहरूको षड्यन्त्रले ठूलोभन्दा पनि ठूलो महान् र कठिन कार्यहरूलाई पूरा गर्ने ताकत र हिम्मत भएको र साहसले अगाडी बढ्ने भएको, महान् धैर्य र परिश्रमद्वारा काम गर्न जान्नेवाला, दाजु-भाइ र दिदी-बहिनी माथि आफ्नू प्रभुत्व कायम राख्न खोज्ने खालको, अर्कालाई थिचेर राख्न पाए प्रसन्न रहने खालको र कुनै प्रकारको पनि डर भय नमान्नेवाला, आफ्नो स्वार्थसिद्धि गर्नमा कहिल्यै नचुक्ने खालको निकै प्रभावशाली होला।

जुन व्यक्तिको कर्कको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृ स्थानमा र आमाको पक्षमा विशेष हानि पाउने भएको, सुख-शान्तिको

कु० नं० १०२

२ १२
३ १ ११
४ रा. १०
५ ७ ९
६ ८

सम्बन्धमा झन बर्ता हानि हुने योग छ। भूमि र भवन आदिको पनि हानि तथा वासंस्थान पनि छाड्नु पर्ने स्थिति आउने छ, सुख-शान्तिको स्थितिलाई बलियो पार्न ठूलो मानसिक र शारीरिक कष्ट सहन सक्ने खालको तथा निकै गुप्त र गहीरो चाल चल्नेवाला तथा अनेक झ्याउलाहरू सहिसकेपछि अन्त्यमा सुखको बलियो साधन पाउने भएको, सुखकै सम्बन्धमा कुनै प्रकारको केही विशेष कुरा फेला पार्ने भएको जसले गर्दा अर्कालाई चकित पार्न सक्ने खालको होला।

जुन व्यक्तिको सिंहराशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या स्थानमा न्यूनता र अनेक अशान्ति योग पाउनेवाला र सन्तान पक्षमा अनेक हानि र क्लेशको योग परेको र मस्तिष्क भित्र बढी कुरा खेलाउने र रिसाएर कुरा गर्ने, कुरा-कानी गर्दा राम्रो नियम काइदासित अर्कालाई कुरा बुझाउन नजान्ने वा नसक्ने तथा आफूले बोलेका वाक्य भित्र केही लुकाएको छ भन्ने स्पष्ट थाहा पाइने खालको होला। बुद्धि भित्र केही अनुचित तेजी र केही झर्कने खालको र केवल अर्काको बुद्धिमा न्यूनता देख्ने र कहिले काहीं लगातार बोलिरहने वाला, अनि केही कटु-भाषी होला।

कु० नं० १०३

२ १२
३ १ ११
४ १०
५रा. ७ ९
६ ८

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा ठूलो प्रभाव युक्त एवं विजयी रहने खालको, अनि सबै प्रकारका कष्ट र आइपरेका अपठेराहरूमा विजय पाउने खालको तथा महान् कूटनीतिले आफ्नू काम सहजै पूरा गर्ने भएको, अनि ठूला-ठूला जाल-झेल गरेर आफ्ना ठूलठूला स्वार्थ सिद्ध पार्न जान्ने भएको, स्वार्थसिद्धिको स्थानमा आउने बाधाहरूलाई स्वयं उपस्थित रहेर अरूसित काम लिन जान्ने र आफ्नू प्रभाव वृद्धिको निम्ति दिन-रात ठूला-ठूला उपायहरू विचार गर्दै रहने भएको तथा उन्नतिको बाटो बलियो पार्न कुनै न कुनै बलियो बाटो खोज्न जान्ने, मावलबाट केही कष्ट पाउने खालको र सदा सावधान रहने व्यक्ति होला।

कु० नं० १०४

२ १२
३ १ ११
४ १०
५ ७ ९
६रा. ८

जुन व्यक्तिको तुलाराशिको राहु लग्नको सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा केही अपठेरोको योग पाउने भएको तथा गृहस्थीमा पनि अनेक थरिका झ्याउला आउने योग वाला, दैनिक कार्य संचालन राम्ररी गर्न जान्नेवाला, व्यापारको लाइनमा ठूला-ठूला बाधाहरू बराबर रहेर आफ्नू काम सपार्न जान्नेवाला र दैनिक व्यापारमा कहिले काहीं धार्मिक आघात परेको पनि सहन सक्नेवाला, निकै ठूलो युक्तिले र गुप्त चालले भए पनि व्यापारमा सफलता पाउनेवाला, इन्द्रिय भोगादिकको स्थान सम्बन्धमा निकै रूचि राखेर युक्तिहरूले आफ्नू काम सपार्नेवाला, लौकिक विषयको प्रत्येक घेरामा केही अनधिकार लाभ पाउनेवाला बाठो होला।

कु० नं० १०५

२ १२ ३ १ ११ ४ १० ५ ७रा. ९ ६ ८

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यामा अनेक थरिका कष्टको योग पाउने खालको, जीवन निर्वाह शक्तिमा र पुरातत्त्व सम्बन्धमा केही हानिको योग भएको र पेटको तल्लो भागमा भित्रतिर केही विकार भएको, धेरै गहीरो हिसाबको चाल चल्न जान्ने भएको, गुप्त शक्तिको प्रयोग निकै अभिमानपूर्वक गर्न जान्ने र जीवन निर्वाह शक्तिमा स्थिरता र दृढता पाउनको लागि ठूला-ठूला निराशाजनक संकट पनि सहने, अनि कुनै दीर्घो लाइनबाट बलियो बाटो प्राप्त गर्ने खालको महान कूटनीति जान्ने होला।

कु० नं० १०६

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८रा.

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा ठूलो अफसोस (विषाद) मात्रै भएको तथा आफ्नू उन्नतिको विषयमा महान् निराशाहरू र अनेक चिन्ताहरूको योग भेट्टाउने खालको, भाग्यको वृद्धिको लागि अनेक थरिका अनुचिक योजनाहरूको योगबाट गुप्त रूपले काम गर्ने अघिसर्ने खालको, धर्मको स्थानको सम्बन्धमा ठूलो हानिकारक योग परेको, अनि धर्म र अधर्मको ठीक विचार नगरेर कुनै सारै सानो तत्त्वलाई धर्म मात्रै भएको तथा वास्तविक धर्मलाई हानि पुऱ्याएर लाभ प्राप्त गर्ने प्रयत्नमा लाग्ने, केही अपयश प्राप्त गर्ने र चित्तमा अशान्तिले युक्त होला।

कु० नं० १०७

२ १२ ३ १ ११ ४ १० ५ ७ ९रा. ६ ८

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही अपठेरोको योग पाउनेवाला, तथा पिता स्थानको सम्बन्धमा केही युक्तिद्वारा आफ्नू काम पूरा पार्ने खालको, र व्यापारमा उन्नतिको बाटोमा आइपरेका ठूला-ठूला बाधाहरू सहन सक्ने तथा पदोन्नतिका लागि निकै ठूलो र स्थायी युक्तिहरू द्वारा र परिश्रम गरेर, गुप्त शक्तिहरूबाट काम लिनजान्ने खालको र राज समाजको सम्बन्धमा उन्नतिको लागि केही न्यूनता र अनेक कष्टहरू सहदै रहे पनि ठूलो परिश्रम र चातुर्यहरूले सफलता शक्ति प्राप्त गर्न जान्ने भएको, अनि सम्मान र प्रभावको स्थानमा कहिले-कहिले महान् सकंट पनि सहन गर्न तत्पर रहने खालको, बाङ्गो उपायले र महान् हिम्मत (साहस) ले स्थिरता प्राप्त गर्ने भएको बाठो व्यक्ति होला।

कु० नं० १०८

२ १२ ३ १ ११ ४ १० रा. ५ ७ ९ ६ ८

जुन व्यक्तिको कुम्भ राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस प्रसस्त लाभ पाउनेवाला तथा आमदानीको स्थानमा केही

कु० नं० १०९

२ १२ ११ रा. ३ १ ४ १० ५ ७ ९ ६ ८

सित्तैमा पाउने साधनको लाभ पाउनेवाला र धेरै लाभ प्राप्तिको लागि अनेक थरिका युक्तिहरूले आफ्नू काम पूरा नपारी नछाड्ने खालको, फेरि कुनै गुप्त युक्तिहरूले पनि सफलता प्राप्त गर्ने भएको होला। लाभ प्राप्तिका बाटोमा कहिले-कहिले निकै ठूलो विपत्तिको पनि हाँसेर मुकाबला गर्दै लक्ष्यसम्म पुग्ने भएको, फेरि जस्तोसुकै अपठेरो वा संकटको समय उपस्थित भए पनि कुनै न कुनै युक्ति खेलेर आफ्नू इच्छित लक्ष्य र शक्तिलाई पाउने, तथा आवश्यकताको पूर्ती प्राप्त गरिछाड्ने खालको तथा लाभको प्राप्तिका सम्बन्धमा निकै ठूलो साहस, हिम्मत र सतर्कता एवं केही अनधिकार लाभ प्राप्त गर्ने शक्ति भएको र काम पूरा गर्ने जिद्दी, अड्डी लिने भएको होला।

जुन व्यक्तिको मीन राशिको राहु लग्नको बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्नाले मनमा दुःखको अनुभव गर्ने तथा खर्चको

कु० नं० ११०

२ १२रा. ३ १ ११ ४ १० ५ ७ ९ ६ ८

स्थानमा कुनै पनि प्रकारले कुनै यस्तो कारण भेट्टाउने–जसले मनमा अशान्ति प्राप्तहोस् र विद्वत्ताको कुनै अपठेरो युक्ति गरेर भए पनि खर्च संचालनको शक्ति वा युक्ति फेला पार्नेवाला, फेरि अन्यान्य बाहिरी स्थानहरूबाट सम्पर्क मार्गमा तगारो ठडिएको अनि केही मानसिक कष्टको अनुभव गर्ने खालको भए पनि 'म ठूलो र म नै जान्ने' यस्तो भावना भित्र लुकेका युक्तिहरूले आफ्नू बिग्रेको काम पनि सपार्न जान्ने र बाहिरी सम्बन्धका मानिसहरूसित केही वैमनस्यताले गर्दा दुःखी रहने र कहिले काहीं खर्चको ठाउँमा भयानक बाधाहरू पनि भोग्ने, कहिल्यै हताश नहुने र अन्त्यमा केही खर्चको विवशता पाउने खालको होला।

# मेष लग्नान्तर-केतुफलम्

जुन व्यक्तिको मेष राशिको केतु पहिलो लग्नको स्थानमा परेको छ भने त्यो मानिस शारीरिक अशान्तिको योग पाउनेवाला र शरीरको सम्बन्धमा कहिले काहीं सांघातिक चोट अथवा वेदनाको योग पाउने भएको, फेरि हृदय भित्र धेरै ठूलो विवशता र गुप्त धैर्यको महान शक्ति राख्ने खालको, अर्काको सामुन्ने थिचिएर या दबिएर बस्ने कुरा कत्ति पनि मन नपराउने तर ठीक त्यसको विपरीत जथाभावीसित अहं-भावना र हठधर्मीले काम बनाउनेवाला, गुप्त युक्तिहरूको बलले तथा महान् कष्टहरू सहन शक्तिको बलले कुनै प्रकारको ख्याति प्राप्त गर्ने शक्ति पाउने खालको र आफ्नू अन्तःकरणमा कुनै कुराको न्यूनता सम्बन्धी कष्ट अनुभव गर्ने होला।

कु० नं० १११

जुन व्यक्तिको वृष राशिको केतु लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस धन स्थानमा कहिले काहीं ठूलो हानि पाउनेवाला, धनको कमीले पनि कष्टको अनुभव गर्ने खालको तथा धनको वृद्धि गर्नको लागि चातुर्यका साधनहरूको पालन गुप्त साहसको बलले गर्न जान्नेवाला, धनको प्रत्येक सम्बन्धमा ठूलो धैर्यले काम बनाउने खालको, धनको पक्षमा कहिले काही घोर संकटमा पर्नेवाला, अन्त्यमा कुनै धनको सम्बन्ध भएको गुप्त शक्तिको साधन पाउने भएको, धनको निम्ति आफ्नू शक्तिभन्दा पनि बढी वल र युक्तिको प्रयोग गर्नेवाला होला।

कु० नं० ११२

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस दाजु-भाइ, दिदी-बहिनीको स्थानमा हानि र क्लेशको योग परेको र आफ्नू पुरुषार्थ वा बलमा केही न्यूनता पाउनेवाला, तर आफ्नू शक्ति भित्र ठूलो गुप्त साहस र ठूलो भरोसा राख्ने खालको तथा गुप्त शक्तिले अनेक काम बनाउनेवाला र उचित-अनुचित रीतिले भए पनि आफ्नू बहादुरी र बल-साहसको परिचय दिने भएको व्यक्तिहोला।आफ्नू बल,पुरुषार्थ र हिम्मत-साहस भन्दा कहिले काहीं भीषण प्रहार सहनेवाला, ठूलोभन्दा पनि ठूलो विपत्ति आइलाग्दा पनि आन्तरिक धैर्य नत्याग्नेवाला, गुप्तरीतिले सदैव आफ्नू स्वार्थसिद्धिमा लागिरहने खालको होला।

कु० नं० ११३

२ १२ ३के. १ ११ ४ १० ५ ७ ९ ६ ८

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस माताको पक्षमा हानि पाउनेवाला र मातृ स्थानमा केही उदासीनताको योग पाउनेवाला, भूमि-भवन आदिको सम्बन्धमा केही हानि र न्यूनताको योग भेट्टाउने वाला, सुख र आराम एवं शान्तिको स्थानमा अनेक थरिको न्यूनता वा कमी एवं अशान्तिको योग पाउनेवाला, सुख प्राप्तिका स्थानमा बलियो योग पाउनको लागि महान् परिश्रम र कष्टहरू सहने खालको आफ्नू निज स्थानमा कहिले काहीं असहनीय दारुण विपत्ती वा कष्ट आइपर्ने खालको, अन्त्यमा कुनै सुख सम्बन्धी बलियो साधन फेलापार्ने वाला, सुख प्राप्तिका लागि आँखा चिम्लेर शक्तिको प्रयोग गर्नेवाला होला।

कु० नं० ११४

२ १२ ३ १ ११ ४ के. १० ५ ७ ९ ६ ८

जुन व्यक्तिको सिंह राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा कष्ट सहन गर्नेवाला, सन्तानको हानि पाउनेवाला, विद्या ग्रहण गर्नमा ठूला-ठूला, गहीरा झ्याउलो बोक्नेवाला, बुद्धि र विद्या स्थानमा अनि सन्तान स्थानमा पनि कहिले काहीं असहनीय दारुण कष्टको योग परेको होला। मस्तिष्क भित्र बर्ता गर्मी हुनाले आफ्ना शब्दहरूको पूरा भाव अरूहरूलाई राम्ररी बुझाउन नसक्नेवाला, आफ्नू बुद्धिको न्यूनता हराउनको लागि महान् भन्दा पनि महान् परिश्रम अन्धविश्वासमा फरेर गरिरहने खालको तथा केही गुप्त कुरा परेमा लुकाइराख्ने खालको होला।

कु० नं० ११५

२ १२ ३ १ ११ ४ १० ५ के. ७ ९ ६ ८

जुन व्यक्तिको कन्या राशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा महान् पुरुषार्थ शक्तिको परिचय दिन जान्ने तथा शत्रुलाई परास्त गर्न सक्ने र महान् भन्दा पनि महान् अपठेरो र कष्टहरूको अलिकति पनि वास्ता नगर्ने र आफ्नू प्रभावको बढी उन्नति गर्नका लागि जाति-नजाति सबै प्रकारका शक्तिहरूको प्रयोग गर्नेवाला, मावली पक्षमा केही दुर्बलता अनुभव गर्ने खालको, शत्रु स्थानमा कहिले काहीं अकस्मात् भीषण विपत्तिहरूको आशंका पाउनेवाला, तर वास्तवमा हरबखत विजयी रहनेवाला, ठूलो पुरुषार्थको दावीगर्ने खालको पाप-धर्म र दोषको वास्ता नगरेर स्वार्थ-सिद्धिमा पूरा विश्वास राख्ने खालको मानिस होला।

कु० नं० ११६

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ के. ८

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिसले स्त्री स्थानमा केही हानि र अनेक थरिका अशान्ति पाउनेवाला, इन्द्रियका भोगादिक शक्तिहरूको सम्बन्धमा बढी अधिकार राख्ने खालको होला, व्यापारको विषयमा बर्ता परिश्रम गरेर कुनै गुप्त युक्तिद्वारा वा शक्तिद्वारा आफ्नू काम सपार्न जान्ने खालको तथा भीषण सम्मान प्राप्त गर्ने भएको, तर ठूलो धैर्य र साहसले आफ्नू काम वेलामा गर्दै रहने खालको र व्यापारको सम्बन्धमा अन्त्यसम्म कुनै न कुनै बलियो स्थिति-प्राप्त गर्नेवाला र प्रत्येक लौकिक कार्यहरूमा केही न्यूनता भए पनि ठूलो साहसपूर्वक उन्नतिको मार्गमा अग्रसर भइरहने खालको मानिस होला।

कु० नं० ११७

२ १२ ३ १ ११ ४ १० ५ ७ के. ९ ६ ८

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पेटको भित्री भागमा र तल्लो एवं पछिल्लो भागमा केही न्यूनता भएको अनुभव गर्ने र जीवनको दिनचर्यामा निकै बर्ता अशान्ति अनुभव गर्ने खालको होला। पुरातत्त्वको केही हानि पाउनेवाला, जीवनको आयुष्यको सम्बन्धमा कहिले-कहिले सांघातिक हानि पाउने खालको र आफ्नू जीवनसित सम्बन्धित मार्गमा महान अभिमान राख्ने खालको, तीक्ष्ण र गुप्त युक्तिहरू द्वारा निर्वाह गर्ने शक्तिमा सहयोग उत्पन्न गर्नेवाला, अन्त्यसम्म जीवनमा केही प्रसिद्धि पाउनमा सफल हुने प्रभाव वाला होला।

कु० नं० ११८

२ १२ ३ १ ११ ४ १० ५ ७ ९ ६ ८ के.

जुन व्यक्तिको धन राशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको उन्नतिका लागि बढीभन्दा पनि धेरै बढी परिश्रम गर्ने र भाग्यको स्थानमा ठूला-ठूला झ्याउलाहरूको योग परेको तथा केही गुप्त शक्तिको महान प्रयोग द्वारा उन्नतिको साधन प्राप्त गर्न जान्ने, धर्म पालनको स्थानमा वास्तविक धर्मको पालन गर्न जान्ने खालको महान् तामसी धर्मको पालन गर्नेवाला, वास्तविक सुयश पाउन नसकेर तमोगुणको बाटोबाट यश प्राप्त गर्न जान्ने भए पनि भाग्यमा केही न्यूनता र मनमा अशान्ति अनुभव गर्ने, अनि निकै ठूलो आडम्बर द्वारा भाग्यको चमत्कार भेट्टाउने, शीलरहित होला।

कु० नं० ११९

२ १२
३ १ ११
४ १०
५ ७ ९के.
६ ८

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही हानि र केही न्यूनता एवं क्लेशको योग भेट्टाउने होला र केही न्यूनता एवं क्लेशको योग भेट्टाउने होला र रोजगारको भित्री तहमा बढी परिश्रम र अनेक झ्याउलाहरू भोग्दै काम गर्नेवाला अनि उन्नति प्राप्त गर्नका लागि कुनै गुप्त शक्तिको पनि प्रयोग निकै धैर्य र साहस गर्ने खालको तथा राज-समाजको सम्बन्धमा अनेक कष्टहरू सहिसके पछि उन्नति एवं मानवृद्धिको साधन पाउनेवाला, मान प्रतिष्ठाको स्थानमा कहिले काही सांघातिक हानिहरूको योग भेट्टाउने योग परेको र आफ्नू इज्जतको रक्षामा न्यूनता पाउने भए पनि साहसले काम लिने खालको होला।

कु० नं० १२०

२ १२
३ १ ११
४ १० के.
५ ७ ९
६ ८

जुन व्यक्तिको कुम्भ राशिको केतु लग्नको एघारौं स्थानमा छ भने त्यो मानिस बर्ता लाभ पाउने वाला, तथा बढी लाभ पाउनको निम्ति बढी बर्ता प्रयत्न गर्ने वाला, केही मुफ्तको जस्तो लाभ सदैव पाइरहने जस्तै योजनाहरू बनाइरहनेवाला, धन-लाभको स्थानमा महान धैर्य र केही गुप्त शक्तिहरू द्वारा काम मिलाउन जान्ने खालको, आफ्नू लाभको स्थानमा कुनै प्रकारको पनि न्यूनताको योग अनुभव नगर्ने खालको, फेरि आमदानीको सम्बन्धमा कुनै दीघो योजना प्राप्त गर्नेवाला, केही अनुचित लाभ पनि प्राप्त गर्ने शक्ति भएको र महान् स्वार्थयुक्त भएर धमाधम काम गर्ने खालको होला।

कु० नं० १२१

२, १२, ३, १, ११ के., ४, १०, ५, ७, ९, ६, ८

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट बार्हौं स्थानमा छ भने त्यो मानिस बढी खर्च गर्नेवाला र खर्चका कारणहरूले केही कष्ट प्राप्तिको योग परेको होला। खर्चको बाटोमा केही म ठूलो हुँ भन्ने अभिमान र निकै दृढताले काम बनाउनेवाला, तथा महान धैर्य-शक्तिको गुप्त बलले खर्च संचालन गर्दै रहने भएको र कहिले काहीं खर्चको बाटोमा भीषण संकटको पनि अनुभव गर्नेवाला, बाहिरी अन्य स्थानहरूको सम्पर्कमा कष्टको तथा झ्याउलाहरू आइलागेको अनुभव गर्ने भएको र बाहिरी सम्बन्धमा आफ्नू दुर्बलता या न्यूनताको वास्ता नगर्ने र आन्तरिक शक्ति द्वारा निकै परिश्रमले काम पूर्ण पार्नेवाला तथा अन्त्यमा खर्च संचालनलाई स्थिर शक्ति प्रदान गर्नेवाला होला।

कु० नं० १२२

२, १२ के., ३, १, ११, ४, १०, ५, ७, ९, ६, ८

# वृषभ लग्न हुनेहरूको भविष्यका तारीख

सन् १९९७ को वर्षमा गुरू भाग्य स्थानमा नीच राशिमा हिड्ने छन्-यसनिम्ति भाग्योदयमा केही अपठेरो परिरहने छ-जनवरीको महीना केही दुर्बल रहने छ। ता० २/२/९७ बाट समय राम्रो फर्कने छ, सफलता मिल्ला। ता० १०/५/९७ बाट केही बढी खर्च हुनेछ र केही आन्तरिक कष्ट रहला। ता० १६/७/९७ बाट भाग्य सप्रने छ। ता० ६/९/९७ बाट सुखका साधन बढ्ने छन्। ता० १७/१०/९७ बाट केही झ्याउला आउने छन्। ता० २९/११/९७ बाट ११/१२/९७ सम्ममा घर-गृहस्थी र व्यापारमा सफलता र शक्ति बढ्दै जानेछ।

कु० नं० १२३

| | | |
|---|---|---|
| ३ | | १ |
| ४ | २ | १२ |
| ५ | | ११ |
| ६ | ८ | १० |
| ७ | | ९ |

सन् १९९८ को वर्षमा– ता० २०/१/९८ सम्म अनेक कष्ट रहने छ। ता० २१/१/९८ देखि भाग्यको समय राम्रो आरम्भ हुनेछ। ता० २७/३/९८ सम्म उन्नति रहने छ, त्यसपछिको समय साधारण रहने छ। खर्च बढी हुनेछ। ता० २/६/९८ बाट समय राम्रो आरम्भ हुनेछ, हिम्मत र शक्ति बढ्दै जानेछ। ता० १७/१०/९८ बाट केही परेशानी रहने छ। ता० ६/१२/९८ बाट ता० ३१/२२/९८ सम्म प्रायः व्यापार र गृहस्थीमा सफलता र शक्ति बढ्दै जानेछ।

कु० नं० १२४

| | | |
|---|---|---|
| ३ | | १ |
| ४ | २ | १२ |
| ५ | | ११ |
| ६ | ८ | १० |
| ७ | | ९ |

# वृषभ लग्नमा-सुनौला तारीखहरू

सन् १९९९ को वर्षमा ता० १४/१/९९ देखि भाग्यको सफलता चल्ने छ। ता० १२/२/९९ बाट समय केही कमजोर चल्नेछ। ता० २७/३/९९ बाट समयमा सुधार र लाभदायक चल्ने छ। ता० १८/४/९९ बाट समय राम्रो र धनागम गराउने छ। ता० १३/५/९९ बाट केही अत्यास र कष्ट रहला। ता० १३/६/९९ बाट समय प्रभावशाली रहने छ। ता० २५/७/९९ बाट हिम्मत र शक्ति बढ्ने छ। ता० १९/८/९९ बाट घरेलू प्रभावको शक्ति बढ्ने छ। ता० १८/१०/९९ बाट घरेलू सुख-शान्तिमा बाधा पर्ला। ता० १७/११/९९ बाट गृहस्थी, र व्यापारमा सुख सफलता मिल्ला। ता० १९/११/९९ बाट ३१/१२/९९ सम्ममा भाग्यको झ्याउलो आइलाग्ला।

कु० नं० १२५

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

सन् २००० को वर्षमा– ता० १/१/२००० बाट समय राम्रो रहने छैन। ता० १७/१/२००० बाट भाग्यको समय सफलतातिर लम्कने छ। ता० १/३/२००० देखि बढी खर्च हुने समय चल्नेछ। ता० १/४/२००० बाट भाग्यको समय सफलतातिर लम्कने छ र खर्च पनि निकै बढी हुनेछ। ता० ५/७/२००० बाट समय लाभदायक रहने छ। ता० २३/९/२००० बाट धनको पक्षबाट केही चिन्ता आइलाग्ला, अनि घरेलू अशान्ति पनि बढ्ने छ। ता० २३/११/२००० देखि व्यापार र गृहस्थीमा सुख-शान्ति रहला। ता० १०/१२/२००० बाट ता० ३१/१२/२००० सम्ममा धनको पक्ष दुर्बल नै रहने छ।

कु० नं० १२६

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृषभलग्नका सुनौला तारीखहरू

सन् २००१ को वर्षमा ता० १४/१/२००१ देखि भाग्यमा केही सुधार आउला। ता० ८/४/२००१ सम्ममा धनको खर्च अनावश्यक रूपमा बढ्दै जानेछ। ता० १५/५/२००१ देखि मान र प्रभाव बढ्दै जाला। ता० ३/७/२००१ बाट धनमा सफलता प्राप्त होला। ता० २७/१०/२००१ बाट धनको पक्षमा अझ बढी सुख शान्ति पाउने आशा नगरे पनि हुन्छ। ता० १६/११/२००१ देखि व्यापार र गृहस्थीमा शान्ति र सफलता रहने छ। ता० ४/१२/२००१ बाट समय झन राम्रो चल्ने छैन।

कु० नं० १२७

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

सन् २००२ को वर्षमा– ता० ४/१/२००२ दोखि समय कमजोर रहने छ। ता० २२/२/२००२ देखि भाग्यको समय सफलतातिर लम्कनेछ। ता० ३१/३/२००२ सम्ममा अनेक लाभ प्राप्त हुने छन्। ता० १/४/२००२ बाट धनको खर्च बढ्दै जानेछ। ता० २०/६/२००२ देखि सुख-शान्ति र शक्ति बढ्ने छ। ता० २१/१०/२००२ देखि समयमा परिवर्तन भएर अनेक विपत्ति आउनन्। ता० १६/११/२००२ देखि व्यापार र गृहस्थीमा सुख-शान्ति आउला। ता०२७/११/२००२ देखि ता० ३१/१२/२००२ सम्ममा समय केही उत्तम हुन सक्ने आशा नराखे पनि हुन्छ।

कु० नं० १२८

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृषभलग्नमा सुनौला तारीखहरू

सन् २००३ को वर्षमा ता० ६/१/२००३ बाट समय केही न्यून रहने छ। २/२/२००३ देखि भाग्य सप्रनको निम्ति समय राम्रो फर्कने छ। धनागममा सफलता प्राप्त होला। ता० १४/३/२००३ देखि केही शारीरिक कष्ट बढ्ने छ, त्यसैले गर्दा बढी खर्च हुनेछ। ता० २/६/२००३ देखि सफलता शक्ति र मान-सम्मानको प्रभाव बढ्नेछ। ता० २३/८/२००३ देखि केही खर्चमा वृद्धि भए पनि बुद्धिमा केही शक्ति बढेर आउला। ता० १८/१०/२००३ देखि केही झ्याउलाहरू आइलाग्नन्। ता० १७/११/२००३ देखि व्यापार र गृहस्थीमा सफलता तथा सुख-शान्ति आउला। ता० १/१२/२००३ बाट सफलता र प्रभावको वृद्धि ता० ३१/१२/२००३ सम्म रहने छ।

कु० नं० १२९

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

सन् १/१/२००४ देखि घर-गृहस्थी र व्यापारमा अलि-अलि अपठेरो पर्नेका साथै सफलता र लाभमा कमी आउने छैन। ता० १४/२/२००४ देखि भाग्यको सफलता राम्रो रहने छ। ता० २७/४/२००४ देखि शारीरिक कष्टले निकै दु:ख देला, दैनिक खर्च बढ्ने छ। ता० २४/५/२००४ बाट मान-सम्मान, इज्जतका साथै धनलाभको योग रहने छ। ता० ७/६/२००४ देखि फेरि खर्च बढ्दै जानेछ। ता० १६/७/२००४ देखि हिम्मत र प्रभाव शक्ति बढ्ने छ। ता० १७/९/२००४ देखि बुद्धि र सन्तान पक्षबाट सफलता प्राप्त होला। ता० ३/१०/२००४ देखि मन र शरीर केही व्याकुल रहला। ता० २४/१०/२००४ देखि ३०/१२/२००४ सम्म घर-गृहस्थीमा केही सम्पन्नता आउला।

कु० नं० १३०

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृषभ लग्न हुनेहरूका लागि उत्तम तारीख

सन् २००५ को वर्षमा ता० १/१/२००५ देखि धनको पक्ष केही न्यून रहनेछ। ता० १८/१/२००५ बाट भाग्य र धनागमको उन्नतितिर अग्रसर हुनेछ। ता० १४/४/२००५ बाट व्ययको बाटोमा आउने र जाने क्रम चल्दै रहला। ता० १६/५/२००५ बाट केही सुख शान्ति र धनको पक्षमा निकै न्यूनता आउन सक्दछ। ता० ३/१२/२००५ देखि ता० २१/१२/२००५ सम्म भाग्य, व्यापार र गृहस्थीमा सबैतिरबाट सफलता मिल्ला। ता० २२/१२/२००५ बाट भाग्य उल्टो पर्नसक्दछ, शारीरिक कष्ट पनि बढ्ला।

कु० नं० १३१

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

सन् २००६ को वर्षमा ता० १/१/२००६ को देखि भाग्य विपरीत हुनेछ र शारीरिक कष्ट पनि बढ्ने छ। ता० १५/१/२००६ बाट भाग्योदय आरम्भ हुनेछ। ता० ८/२/२००६ बाट मान-सम्मान बढ्ने छ। ता० २०/२/२००६ सम्ममा लाभ निकै भइसक्ने छ, त्यसपछि समय विपरीत आउन सक्दछ। ता० ७/५/२००६ बाट भाग्य र मान-सम्मानको प्रभाव बढ्ने छ। ता० २१/९/२००६ देखि धन र बुद्धिमा नयूनता आउन सक्दछ। ता० २६/९/२००६ बाट ता० १५/१२/२००६ सम्म व्यापार र गृहस्थीमा उत्तम सफलता मिल्नेछ।

कु० नं० १३२

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

# वृषभ लग्न हुनेहरूका लागि उत्तम तारीख

सन् २००७ को वर्षमा ता० २/१/२००७ बाट भाग्योदयको बाटो सप्रन्दै जानेछ र उन्नति हुँदै जानेछ। ता० १०/४/२००७ देखि आय र व्यय दुवै समान रूपमा बढ्दै जानन्। ता० ६/६/२००७ बाट भाग्यको समय उत्तम चल्दै जानेछ। मान-सम्मान बढे पनि अलि-अलि अपठेरो परिरहने छ। ता० १/११/२००७ बाट धनको पक्ष केही दुर्बल भएर जानेछ। ता० १९/११/२००७ देखि ता० ७/१२/२००७ सम्म व्यापार र गृहस्थीमा सुख-शान्ति रहला, त्यसको केही पछि समयले फेरि कोल्टे फेर्न सक्छ।

कु० नं० १३३

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

सन् २००८ को वर्षमा ता० ४/१/२००८ देखि भाग्योदय र धनागम भइरहने छ। ता० १४/४/२००८ बाट खर्च बढी भएर मनमा अशान्ति रहने छ। ता० ४/६/२००८ बाट समय केही सप्रन्दै जानेछ। ता० १६/७/२००८ बाट हिम्मत र प्रभाव शक्ति बढ्ने छ। ता० २४/१०/२००८ बाट मनमा अशान्ति र सन्तान पक्ष अनेक रोगले पीडित रहनन्। ता० ११/११/२००८ देखि व्यापार र गृहस्थीमा सबै तिरबाट सफलता मिल्ला। ता० १/१२/२००८ बाट धनको कमीले मन खिन्न रहला।

कु० नं० १३४

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृषभ लग्न हुनेहरूको-प्रतिकूल समयको ज्ञान

कु० नं० १३५

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

(सदैव कालको निम्ति)

तल लेखिएका ग्रह-जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउने छन्, तब-तब ती वर्ष हरूमा प्रतिकूल समय रहने छ, भनी जान्नू।

सू०- मेष, तुला र धन।
चं०- मेष, तुला, वृश्चिक र धन।
मं०- मेष, मिथुन, कर्क, तुला र धन।
बु०- मेष, तुला, धन र मीन।
गु०- मेष, तुला, मकर र कुम्भमा सामान्य।
शु०- मेष, कन्या, तुला र धन।
श०- मेष, धन।
रा०- सिंह, वृश्चिक, धन, कुम्भ र मीन।
के०- सिंह, वृश्चिक, कुम्भ, वृषभ र मिथुन।

नोट- उपरोक्त ग्रहहरूबाट वर्षको फलादेश जान्नको लागि- शनि, गुरू, राहु, केतु- यी चार ग्रहहरूबाट थाल्नुपर्दछ र मासिक फलादेशको ज्ञान गर्नका लागि सूर्य, बुध, शुक्र, मंगल यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट थाल्नु पर्दछ। जब कहिले कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब त्यो कमजोर फल दिने हुन्छ।

# वृषभ लग्न हुनेहरूको- अनुकूल समय ज्ञान

कु० नं० १३६

| | | | |
|---|---|---|---|
| | ३ | १ | |
| ४ | २ | | १२ |
| | ५ | ११ | |
| ६ | ८ | | १० |
| | ७ | ९ | |

(सबै कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशि हरूमा पञ्चाङ्गमा आउने छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा लाभदायक र सुखकर समय रहने छ।

**सू० वृषभ-** मिथुन, कर्क, सिंह, कन्या, वृश्चिक, मकर, कुम्भ, र मीन।
**चं० वृषभ-** मिथुन, कर्क, सिंह, कन्या, मकर, कुम्भ र मीन।
**मं० वृषभ-** सिंह, वृश्चिक, मकर र मीन।
**बु० वृषभ-** मिथुन, कर्क, सिंह, कन्या, वृश्चिक, मकर र कुम्भ।
**बृ० वृषभ-** मिथुन, कर्क, सिंह, कन्या, वृश्चिक, धन र मीन।
**शु० वृषभ-** मिथुन, कर्क, सिंह, वृश्चिक, मकर, कुम्भ, र मीन।
**श० वृषभ-** मिथुन, कर्क, सिंह, कन्या, तुला, वृश्चिक, मकर, कुम्भ र मीन।
**रा० मिथुन-** कर्क, कन्या, तुला, मकर, मीन र मेष।
**के० कर्क-** कन्या, तुला, धन, मकर, मीन र मेष।

***द्रष्टव्य-*** वर्षको फलादेश जान्नका लागि- शनि, राहु र केतु यी चार ग्रहबाट हेर्नु पर्दछ र मासिक फलादेशको लागि सू०,बु०, शु० र मगंल यी चार ग्रहबाट हेर्नुपर्दछ। दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नु थाल्नु पर्दछ। भिन्न-भिन्न फलादेशको ग्यानका लागि 'अखण्ड भाग्योदय' नामक पुस्तको अध्ययन गर्न आवश्यक पर्दछ।

# वृष लग्नान्तर सूर्यफलम्

यस व्यक्तिको वृष राशिको सूर्य लग्नको प्रथम स्थानमा परेको छ, त्यो मानिस आमाको सहायक शक्ति केही वैमनस्यताले प्राप्त गर्ने खालको होला। वैमनस्यताले नै देहको सुखका साधनहरू प्राप्त गर्ने वाला र आफ्नू शरीरमा शीतल आगो अर्थात शान्त गरमी भएको होला। केही भूमिको लाभ पाउनेवाला र घरेलू साधनहरूको शक्तिले व्यापारको मार्गमा खूब प्रगति गरेर अनेक सुख सम्बन्धी प्रभाव पाउने तथा गृहस्थ जीवनको वातावरणमा सुखको अनुभव गर्नेवाला र इन्द्रिय भोगादिकको सुख प्राप्त गर्नमा इच्छित सहायता पाउनेवाला र देहमा केही बढी आलस्यको प्रभाव परेको होला।

कु० नं० १३७

यस व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धनको स्थान सम्बन्धी सुख प्राप्त गर्ने खालको होला। सुख सम्बन्धी कारणहरूमा केही बाधा वा बन्धन पाउने वाला र सम्पत्ति एवं भूमिको प्रभाव प्राप्त गर्नेवाला, र आमाको सम्बन्धमा पनि केही बन्धनको योग पाउनेवाला, अनि सुख प्राप्तिको सम्बन्धमा अनेकानेक वस्तुहरू र अनेक पदार्थ संग्रह गरेर प्रभाव शक्ति प्राप्त गर्नेवाला, कुटुम्ब द्वारा घरेलू सुख प्राप्त गर्ने खालको अनि ठूलो घरको सुख र देखावटी प्रभावले धनको शक्ति प्राप्त गर्ने योग परेको र जीवनको दिनचर्यामा र आयुस्थानमा सुख भेट्टाउनेवाला र पुरातत्त्व स्थानाबाट सुख प्राप्त गर्ने खालको होला।

कु० नं० १३८

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो व्यक्ति आफ्नै पराक्रमले अनेक प्रकारका सुखको शक्ति प्राप्त गर्नेवाला, दिदी-बहिनी र दाजू-भाइको प्रभावशाली सुख प्राप्त गर्नेवाला, भूमि-भवन आदिको सुख प्राप्त गर्नेवाला, शान्तियुक्त प्रभाव पाउनेवाला, आमाको र मातृस्थानको शक्तिको सहयोग प्राप्त गर्नेवाला, आफ्नू कद वा औकातको भित्र नै राम्रो प्रभाव र उच्चस्थान प्राप्त गर्नेवाला, धर्मस्थानको सम्बन्धमा केही नीरसताको योग परेको तथा भाग्यको शक्तिलाई महत्व नदिने खालको र बढी उत्साह उमंगको योग परेको होला।

कु० नं० १३९

३ १
४सू. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धेरै भूमि-भवन, सम्पत्ति पाउने खालको र आमाको ठूलो प्रभाव शक्तिको सुख भोग्नेवाला, फेरि मातृस्थानबाट महान सुख प्राप्त गर्नेवाला र सुख सम्बन्धी मामलामा निकै गौरव र चमत्कारको शक्ति प्राप्त गर्न पाउने भएको र भूमि स्थानमा विशेष सम्बन्ध तथा स्थानाधिकार हुनाले गर्दा अनेक सुखका वृद्धिको योग प्राप्त गर्नेवाला, बढी परिश्रमले सिद्धि पाउने काममा अरूचि भएको, राज्य र समाजको सम्बन्धमा थोरै सम्पर्क राख्ने भएको र आफ्नू स्थानमा नै प्रसन्न र सन्तुष्ट रहने होला।

कु० नं० १४०

३ १
४ २ १२
५ सू. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्याराशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ, त्यो मानिस विद्या प्राप्त गर्नेवाला, बुद्धिको स्थानमा शान्ति युक्त प्रभावको शक्तिले सुख भोग्नेवाला, सन्तान-स्थानमा सुख-शान्ति र शक्तिको प्रभाव प्राप्त गर्ने खालको र बुद्धिको भित्री तहमा गहीरो तथा महान आदर्श र प्रतिभाको शक्ति राख्ने भएको, अनि निकै गहीरा र उच्च विचारको प्रयोग गरेर आफ्नू काम सिद्ध पार्न जान्ने खालको होला। बुद्धिको शान्त र प्रखर शक्तिले भूमिको लाभ पनि इच्छानुसार प्राप्त गर्ने भएको, लाभ र आयको स्थानमा गहीरो विचारको शक्तिले ठूलो उन्नति गर्ने खालको होला। मातृस्थानको योगले विशेष लाभ पाउने र केही नाम-बृद्धिवाला होला।

कु० नं० १४१

३ १
४ २ १२
५ ११
६सू. ८ १०
७ ९

जुन व्यक्तिको तुलाराशिको सूर्य लग्नबाट षष्ठ स्थानमा छ भने त्यो मानिस आमासित केही विरोध र वियोग तथा केही न्यूनताको योग भेट्टाउने खालको र भूमि-भवनको अभाव प्राप्त गर्ने खालको, अनि जन्मभूमिबाट कहीं अन्तै बस्नु पर्ने योग परेको होला। सुख-शान्तिका साधनहरूमा पनि न्यूनता प्राप्त गर्ने खालको होला। मावल-पक्षमा पनि न्यूनताकै योग पाउने खालको होला र शत्रु स्थानमा केही अशान्तिको योग भेट्टाउने खालको होला। केही बढी श्रमको योग पनि पाउन सक्छ। बढी धन व्यय गर्ने र अन्य स्थानहरूको सम्पर्क-शक्तिले सुखका साधन एकत्र पार्ने होला। केही अशान्तिप्रद वातावरणमा रहे पनि आन्तरिक शक्ति पूरा भएको व्यक्ति होला।

कु० नं० १४२

३ १
४ २ १२
५ ११
६ ८ १०
७सू. ९

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आमाद्वारा सेवा र सुख प्राप्त गर्ने खालको तथा गृहस्थ-जीवनमा प्रभावशाली आनन्दको योग परेको होला, स्त्री स्थानबाट सुख-शान्तिको भोग प्राप्त गर्नेवाला र भूमि-भवन तथा लौकिक सुखका साधन प्राप्त गर्ला। दैनिक कार्य प्रणाली भित्र आफ्नू राम्रो योग्यता द्वारा सबैलाई प्रभावित पार्न सक्ने खालको होला। आफ्नू व्यापार व्यवसायमा पनि निकै प्रभावयुक्त कार्यहरू गरेर परिवारलाई चकित पार्दै सुख प्राप्त गर्ने खालको र अकस्मात धनागमको योग परेको विशिष्ट व्यक्तिहरूमा गनिने खालको होला। गृहस्थीमा बढी परिश्रम गर्नाले शरीरमा केही कष्ट वा परेशानीको अनुभव गर्नेवाला र शरीरको सौन्दर्यमा केही न्यूनताको आभास पाउने खालको व्यक्ति हुन सक्तछ।

कु० नं० १४३

३ १ ४ २ १२ ५ ११ ६ ८सू. १० ७ ९

जुन व्यक्तिको धनराशिका सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आमाको सम्बन्धमा कष्ट र अशान्तिको योग परेको होला। मातृभूमिको वियोग पाउनेवाला र विदेशको स्थानमा महान् प्रभावशाली सहायक हितू र मित्र भेट्टाउनेवाला, अनि जीवनको दिनचर्यामा ठूलो प्रभाव र सुखको उत्तम योग पाउने वाला र विदेशमै निकै बढी भूमिमा अधिकार प्राप्त गर्ने वाला, अनि आयुस्थानमा महानता पाउनेवाला, अर्थात मृत्यु भइसके पछि पनि आफ्नू स्थिर प्रभावको शक्ति छाडेर जानेवाला, अनि पुरातत्त्वको स्थानमा कुनै धेरै ठूलो स्थायी शक्तिको प्रभाव पाउनेवाला, निकै गहीरो र गम्भीर युक्तिहरूद्वारा आफ्ना कर्मले सुखानुभव गर्नेवाला र धनको वृद्धिका लागि पुरातत्त्व स्थानकै शक्तिबाट लाभ प्राप्त गर्ने खालको होला।

कु० नं० १४४

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९सू.

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आमाको सम्बन्धमा यति राम्रो योग पाउनेवाला हुनेछ कि वर्णन गरेर साध्य छैन। भूमि-भवन आदिको पनि सामान्यतया उत्तम लाभ पाउनेवाला, र भाग्यको स्थानमा अलि-अलि नीरसता युक्त सुखहरूको साधन प्राप्त गर्ने वाला, केही यश-मान पनि प्राप्त गर्नेवाला, धर्मको सम्बन्धमा केही ज्ञानको भित्री तहसम्भ पुग्न सक्ने योग पनि प्राप्त गर्नेवाला र दाजु-भाई, दिदी-बहिनीको स्थानबाट सुखका साधन पाउनेवाला,पुरुषार्थ-बलको सुख पनि यथेच्छ पाउनेवाला, अनि परिश्रमको स्थानबाट पनि उत्तम प्रभाव पाउने भाग्यमानी होला।

कु० नं० १४५

३ १ ४ २ १२ ५ ११ ६ ८ १० सू. ७ ९

जुन व्यक्तिको कुम्भको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आमाको शक्तिबाट आनन्द पाउने र केही नीरसताको अनुभव गर्ने खालको होला। पिता-स्थानको सुखमा केही वैमनस्यताको योग पाउनेवाला, भवन-भूमि आदिको सुख प्रसस्त पाउनेवाला, राज समाजको सम्बन्धमा केही सामान्य सुखको योग परेको र व्यापारमा बढी परिश्रम गरेर पनि थोरै सुख पाउने योग परेको होला। मान-सम्मान प्राप्ति र उन्नतिको मार्गमा केही आलस्य र अपठेरो परेको योग पाउने होला। सुख प्राप्तिको स्थान वृद्धि गर्नका लागि शक्तिभन्दा बढी प्रयत्न गर्नेवाला, आलस्यका कारणहरूले गर्दा कहिले काहीं ठूलो हानिको योग प्राप्त गर्ने खालको होला।

कु० नं० १४६

३ १ ४ २ १२ ५ ११ सू. ६ ८ १० ७ ९

जुन व्यक्तिको मीनराशिका सूर्य लग्नबाट एघारौं स्थानमा छन् भने त्यो मानिस मातृ-स्थानबाट ठूलो लाभ पाउनेवाला, तथा भूमि-भवन आदिको प्रभावशाली लाभ प्राप्त गर्नेवाला र आयको स्थानबाट पनि अनेक थरिका सुखहरू र प्रभाव सहित लाभ प्राप्त गर्नेवाला तथा विद्याको स्थानबाट सुख प्राप्त गर्नेवाला, सन्तान पक्षबाट सुख, शान्ति र शक्ति प्राप्त गर्नेवाला, अनि बुद्धिको शान्तियुक्त प्रभाव शक्ति द्वारा आफ्नू काम सफल तुल्याउन जान्नेवाला, विचारपक्षमा धेरै परसम्मको गहीरो कुरा विचार्न सक्ने खालको होला। सुख प्राप्तिका अनेक प्रभावशाली वस्तुहरूद्वारा प्रसस्त लाभ पाउनेवाला र निकै बाठो एवं धैर्यवान् होला।

कु० नं० १४७

जुन व्यक्तिको मेशराशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै बढी धन व्यय गर्नेवाला, र व्ययस्थानमा ठूलो प्रभाव र सुख प्राप्त गर्नेवाला, अनि मातृस्थानमा केही हानि पाउने वाला, र भूमि-भवन र अन्य सम्पत्तिको हानि गर्ने वाला, अनि अन्यस्थान अर्थात् स्थानान्तरण गरेर भूमिको सुखमा प्रभावशाली सम्बन्ध प्राप्त गर्नेवाला, मातृ-स्थानको सम्बन्धले पनि बढी खर्ज गर्ने शक्ति प्राप्त गर्नेवाला, अनि मावली पक्षका सम्बन्धमा सुखको न्यूनताको योग परेको होला र शत्रु स्थानमा केही दुर्बलता र हेलचक्राइँ गर्नेवाला र बढी खर्चले गर्दा मनमा केही अशान्तिको योग परेको व्यक्ति होला।

कु० नं० १४८

# वृष लग्नान्तर चन्द्रफलम्

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नको प्रथम स्थानमा छ भने त्यो व्यक्ति आफ्नू शरीर भित्र ठूलो प्रभावको शक्ति संचय गर्नेवाला र आफ्नै पुरुषार्थले ठूलो उन्नति गरेर मान-सम्मान प्राप्त गर्नेवाला, अनि आफ्नू मनको शक्तिले बढी साहस र हिम्मत तथा उत्साहले उन्नति बाटोमा प्रोत्साहन प्राप्त गर्नेवाला अनि स्त्री स्थानमा केही उपेक्षा गर्नाले अलि न्यूनताको योगद्वारा काम निकाल्ने खालको होला। इन्द्रिय-भोगादिको स्थानको सम्बन्धमा भित्री मनमा केही बढी हीनभावनाको योग परेको र लौकिक एवं घर-गृहस्थीमा केही शान्तिको योग परेको होला।

कु० नं० १४९

३ १
४ २ चं. १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थको शक्तिले मनोयोगद्वारा धन-धान्यको वृद्धि गर्नेवाला, अनि धन संग्रह गर्नको लागि आफ्नू सम्पूर्ण शक्तिको प्रयोग गर्नेवाला र भाई-बहिनी, दाजू-दिदीको सम्बन्धमा केही बन्धनको योग परेको होला। कुटुम्बको शक्तिको केही गौरव मात्रै खालको तथा आफ्नू बाहुबलमा पनि असक्तता वा न्यूनताको योग परेको होला। अनि पुरातत्त्वको स्थानबाट शक्ति र लाभ भेट्टाउनेवाला, जीवनको दिनचर्यामा केही राम्रो प्रभाव पाउनेवाला, आफ्नू मनोयोगको बलले केही गूढ र गहीरो युक्तिहरूको प्रयोग गरेर सफलताको आनन्द मान्ने र कुनै राम्रो परिश्रम गर्ने खालको होला।

कु० नं० १५०

३चं. १
४ २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कर्कराशिका चन्द्रमा तेस्रो स्थानमा छन् भने त्यो मानिस निकै प्रभावशाली राम्रो कर्म एवं उद्योग गरेर त्यसमा सफलता पाउने खालको होला। दाजु-भाई दिदी-बहिनीको उत्तम सहयोग प्राप्त गर्नेवाला, र आफ्नू परिश्रम द्वारा भाग्यको केही ठूलै उन्नति गर्नेवाला, मनको भित्र ठूलो दृढता र प्रसन्नता पाउनेवाला, फेरि मनको तागतबाट बढी लाभ प्राप्त गर्ने खालको होला। बाहुबलको स्थानमा महान् शीतल शक्तिको स्थिरताले महनता भेट्टाउने खालको र धर्मस्थानमा केही वैमनस्यताको शक्तिद्वारा काम लिने र ईश्वरमा विश्वास राख्ने एवं पुरुषार्थलाई सदैव महत्व दिनेवाला, आफ्नू कद काठीमा सौन्दर्य पाउने र उत्साही होला।

कु० नं० १५१

३ १
४चं. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिका चन्द्रमा लग्नबाट चौथो स्थानमा छन् भने त्यो मानिस दाजु-भाई दिदी-बहिनीबाट निकै सुख प्राप्त गर्नेवाला र शान्ति-पूर्वक परिश्रम गरेर मनोयोगले सुख शान्ति भोग्नेवाला र भूमि-भवनको शक्ति पाउनेवाला, आमाको शक्तिबाट लाभ भेट्टाउने वाला, तथा घरेलू सुख प्राप्तिका साधनहरूको पनि शक्ति आफ्नू भित्र अनुभव गर्ने खालको होला। पिता स्थानमा केही वैमनस्यताको योग अनुभव गर्ने र उन्नतिको स्थानमा अलि अरुचिका साथ प्रयत्न गर्ने वाला, सामाजिक काममा चोरै रुचि राख्ने र आफ्नू इज्जतलाई महत्व दिने खालको होला।

कु० नं० १५२

३ १
४ २ १२
५ चं. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्या राशिको चन्द्रमा लग्नको पाँचौं स्थानमा छन् भने त्यो मानिस आफ्नै पुरुषार्थ र बलको शक्तिले विद्या प्राप्त गर्ने र दाजु-भाई दिदी-बहिनी एवं सन्तानको शक्ति पाउनेवाला, दिमाग भित्र मनोबलको तागतले अपूर्व शक्तिको अनुभव गर्ने, विद्या स्थानबाट आफ्नू परिश्रमले सफलताको पूरा आशा गर्नेवाला, सन्तान भित्र सौन्दर्य र शक्तिको संचार पाउनेवाला, मनोबलको शक्तिले धेरै धन कमाउनेवाला, तत्काल जवाब दिने तागत भएको र कुरा-कानी गर्दा र बोल-चालमा ठूलो शक्ति र शान्तिले काम बनाउने खालको होला।

कु० नं० १५३

३ १
४ २ १२
५ ११
६चं. ८ १०
७ ९

जुन व्यक्तिको तुला राशिका चन्द्रमा लग्नबाट छैठौं स्थानमा छन् भने त्यो मानिस आफ्ना दाजु-भाई दिदी-बहिनीसित मन नमिल्ने खालको योग परेको होला तथा केही परतन्त्रतायुक्त मनोबलको परिश्रमले काम गर्ने खालको होला। आफ्नू बल-पुरुषार्थको शक्तिमा न्यूनताको अनुभव गर्नेवाला तर मनोबलको शक्तिले शत्रुस्थानमा प्रभाव जमाउने खालको र मावली पक्षको स्थानमा केही शक्तिको अनुभव गर्ने खालको होला। केही मानसिक बाधा भित्र रहे पनि कुनै अपठेरो युक्तिहरूले शक्ति प्राप्त गर्ने खालको होला, अन्य स्थानहरूको सम्पर्कमा राम्रो शक्तिको योग परेको, बढी खर्च गर्ने र मन-भित्र गुप्त शक्तिको बल भएको होला।

कु० नं० १५४

३ १
४ २ १२
५ ११
६ ८ १०
७चं. ९

जुन व्यक्तिको वृश्चिक राशिका चन्द्रमा सातौं स्थानमा छन् भने त्यो मानिस स्त्री स्थानमा अशान्ति र न्यूनताको योग पाउनेवाला होला।

कु० नं० १५५

३ १
४ २ १२
५ ११
६ ८ चं. १०
७ ९

पुरुषार्थको बलमा पनि न्यूनताको योग परेको, व्यापारको पक्षमा दुर्बलता अनुभव गर्नेवाला, रोजगार पक्षमा केही परतन्त्रताको योग परेको र मनोयोगद्वारा आंशिक सफलता प्राप्त गर्नेवाला, इन्द्रिय भोगादिको स्थानमा कमजोरी पाउनेवाला, दैनिक लौकिक काममा र परिश्रम गर्ने विषयमा निकै दुर्बलताको योग परेको, शरीर भित्र 'म ठूलो' भन्ने अनुभव भएको हुनाले हृदयमा निकै शक्ति संचार भएको प्रभावशाली व्यक्ति होला।

जुन व्यक्तिको धनु राशिका चन्द्रमा लग्नबाट आठौं स्थानमा छन् भने त्यो मानिस आफ्नै बल पुरुषार्थको भर मात्रै खालको होला। मनभित्र क्षोभ

कु० नं० १५६

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९चं.

र गुप्त अशान्तिको योग परेको तथा दाजु-भाई दिदी-बहिनीको वियोग पाउने खालको होला। मनोयोगको शक्तिद्वारा निकै गूढ र गुप्त कर्म गर्ने खालको होला। आफ्नू शक्ति प्राप्त गर्नको लागि मन थकित भएको अनुभव गर्नेवाला, आफ्नू जीवनको दिनचर्या भित्र नै शक्तिको अनुभव गर्नेवाला, धनको वृद्धि गर्नका लागि बढि ध्यान र बर्ता प्रयत्न गर्नेवाला होला। विदेशसित सम्बन्ध गर्नाले शक्ति प्राप्त गर्ने र प्रकट साहसमा दुर्बलत्ता देखाए पनि गुप्त हिम्मत राख्ने खालको होला।

जुन व्यक्तिको मकर राशिका चन्द्रमा नवम स्थानमा छ भने त्यो मानिस भाग्यको प्रभावले शक्ति प्राप्त गर्नेवाला र दाजु-भाई, दिदी-बहिनीको राम्रो

कु० नं० १५७

३ १
४ २ १२
५ ११
६ ८ १० चं.
७ ९

सहयोग प्राप्त गर्नेवाला, आफ्नू पुरुषार्थले मनोयोगद्वारा भाग्यको उन्नति पाउनेवाला, मन र पुरुषार्थले धर्मको पालन गर्नेवाला, ईश्वरको शक्ति मान्नेवाला, धेरै परसम्मको बलियो कुरा विचार गर्न सक्ने र लौकिक एवं पारलौकिक दुवै सम्बन्धको पालन गर्नेवाला, निकै धैर्यपूर्वक काम गर्न जान्ने र आफ्नै परिश्रमले यश प्राप्त गर्ने खालको होला।

जुन व्यक्तिको कुम्भ राशिका चन्द्रमा लग्नबाट दसौं स्थानमा छन् भने त्यो मानिस आफ्नै पुरुषार्थको बलले उन्नति गर्नेवाला र मनोयोगको महान्

कु० नं० १५८

३ १
४ २ १२
५ ११चं.
६ ८ १०
७ ९

उन्नतिका बलियो साधन भेट्टाउने र दाजु-भाई दिदी-बहिनीबाट शक्ति पाउने वाला, पिता-स्थानबाट बल पाउनेवाला, राज-समाजको काममा मनोबलले काम गरेर उन्नति भेट्टाउनेवाला, आफ्नू बाहुबलको शक्तिद्वारा ठूलो मान-प्रतिष्ठा पाउनेवाला, मन भित्र बढी गौरव अनुभव गर्ने खालको होला। केही अपठेरो परेको जस्तो ठान्नेवाला र मातृस्थानबाट सुख र शक्ति प्राप्त गर्ने तथा राम्रो रहन-सहन भएको होला।

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नै पुरुषार्थले धेरै धन कमाउनेवाला र दाजु-भाई दिदी-बहिनी द्वारा लाभ पाउनेवाला, लाभ स्थानको भित्र मनोबलको शक्तिले ठूलो भर-थेग पाउनेवाला र थरि-थरिका लाभ हुने साधनहरूले मनमा प्रफुल्लताको योग पाउनेवाला, विद्या स्थानमा आफ्नू शक्तिले वृद्धि भेटनेवाला, सन्तान स्थानमा पनि सहारा प्राप्त गर्नेवाला, मनोबलको तागतले बुद्धि र वाणीमा उन्नति प्राप्त गर्नेवाला, आफ्नू पुरूषार्थ बलको योग पाउने र बाठो एवं बुद्धिमान होला।

कु० नं० १५९

जुन व्यक्तिको मेष राशिका चन्द्रमा लग्नबाट बाह्रौं स्थापना छ भने त्यो मानिस आफ्नै पुरुषार्थ एवं शक्तिमा केही हानि पाउनेवाला र दाजु-भाई दिदी-बहिनीका शक्तिको उल्टो फल पाउनेवाला, बढी धन खर्च गर्नेवाला, कुनै बाहिरिया स्थानको सम्बन्ध र शक्ति भेट्टाउनेवाला र व्यय स्थानमा मनको बढी उत्साह राखेर काम गर्नेवाला, शत्रुस्थानमा शान्तियुक्त बलले काम गर्नेवाला, मन भित्र केही दुर्बलता र निराशाको योग पाउनेवाला, मनोयोगको शक्तिले बाहिरी अपठेराहरू र भित्री भावबाट उत्तम भाव उत्पन्न गर्ने खालको होला।

कु० नं० १६०

# वृष लग्नान्तर - भौमफलम्

जुन व्यक्तिको वृषराशिको मंगल प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा केही दुर्बलता र रक्त विकारले पीडित तथा दैनिक व्यापारवा

कु० नं०१६१

३ १
४ २मं. १२
५ ११
६ ८ १०
७ ९

रोजगारबाट खर्चको शक्ति प्राप्त गर्नेवाला र स्त्रीको सम्बन्धमा केही न्यून योग पाउनेवाला, मातृस्थानमा केही हानि भेट्टाउने वाला र भूमि-भवन आदिको सुखमा न्यूनता अनुभव गर्नेवाला र अन्य स्थानमा अनेक देशान्तर डुल्ने, अनि शरीरद्वारा नै राम्रो रोजगारको शक्ति फेलापार्ने खालको होला। पुरातत्त्वको स्थानमा केही राम्रो र नराम्रो मिश्रित योग परेको तथा लौकिक कामहरूमा बढी परिश्रम गर्ने भए पनि अशान्त रहल।

जुन व्यक्तिको मिथुन राशिका मंगल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धन स्थानमा केही हानि पाउनेवाला र अन्य स्थानहरूको

कु० नं० १६२

३मं. १
४ २ १२
५ ११
६ ८ १०
७ ९

सम्पर्कले व्यापारद्वारा केही धन पाउनेवाला र कुटुम्ब स्थानमा केही हानि भेट्टाउने तथा स्त्री स्थानको सम्बन्धमा केही बाधा-बन्धन र केही न्यूनता पाउनेवाला तथा इन्द्रिय भोगादिमा पनि केही कमी पाउनेवाला र सन्तान पक्षबाट हानि पाउनेवाला, विद्या स्थानमा पनि केही कमी अनुभव गर्ने होला। भाग्यस्थानमा कतिपय अन्य स्थानको सम्बन्धले वृद्धिको योग पाउनेवाला, दैनिक कर्मको शक्तिले धर्म स्थानबाट ईश्वरमा विश्वास बढ्ने होला। खर्चको सम्बन्धमा खर्च नगरौं भने पनि कहिले काहीं विशेष खर्च गर्ने खालको होला।

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस स्त्री पक्षबाट हानि र कष्ट अनुभव गर्नेवाला र दाजु-भाई दिदी-बहिनीको पक्षमा वियोग पाउनेवाला र केही परतन्त्रता युक्त परिश्रमको शक्तिले धन कमाउनेवाला, बढी व्यय गर्ने खालको होला। व्यापारको विषयमा केही न्यूनता र चिन्ताको योग पाउनेवाला, गृहस्थीको परिस्थितिमा दैनिक संचालन मार्गमा ठूलो कठिनाईहरू सहेर काम गर्नेवाला, गृहस्थी र व्यापारको बाटोमा निकै भाग्यमानी गनिने वाला, आफ्नै बलले उन्नति गर्नका लागि बढी र कठोर परिश्रम गर्ने, शत्रु स्थानमा प्रभाव पार्न बराबर प्रयत्नशील रहने खालको होला।

कु० नं० १६३

३ १
४मं. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिको मंगल चौथो स्थानमा छ भने त्यो मानिस आमाको स्थानबाट हानि पाउनेवाला र जन्म-भूमिको वियोग भेटनेवाला, तथा दैनिक व्यापारको बाटोमा अन्य स्थानको सम्पर्कले लाभ र सुख भेट्टाउने खालको होला। आफ्नू स्वयंको स्थानमा स्वतन्त्र व्यापार वा रोजगार भित्र नै केही हानि पाउनेवाला, स्त्री-पक्षमा यौटा बलियो सुख र केही न्यूनताको योग पाउनेवाला, निकै परिश्रम पर्ने काम प्रसन्नतापूर्वक गर्न अघिसर्नेवाला, आयको वृद्धिको लागि विशेष प्रयत्न गर्नेवाला, इन्द्रिय भोगादिको स्थानमा केही न्यूनताका साथ-साथै वृद्धि पनि पाउनेवाला, राज-समाजमा केही मान-सम्मान पाउने खालको होला।

कु० नं० १६४

३ १
४ २ १२
५ मं. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्याराशिको मंगल पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको स्थानबाट अन्य बाहिरिया शक्ति र सम्बन्धद्वारा दैनिक व्यापारको शक्ति प्राप्त गर्नेवाला, धेरै बढी धन खर्च गर्नेवाला, विद्याको स्थानमा केही न्यूनता पाउनेवाला, सन्तान पक्षबाट केही हानि पाउनेवाला, व्यापारको लाइनमा बुद्धिद्वारा निकै घुमाई-फिराई गरेर आफ्नू काम सपार्न जान्नेवाला, प्रतिपक्षीलाई कुराको जालमा अल्झाउन जान्नेवाला, आफू पनि भित्र-भित्रै चक्कर खाने विचारहरूले काम गर्नेवाला, पुरातत्त्वको स्थानमा केही न्यून शक्ति पाउनेवाला, इन्द्रिय भोगादिको शक्ति र लौकिक कार्यहरूको चिन्तन गर्ने खालको होला।

कु० नं० १६५

३ १
४ २ १२
५ ११
६मं. ८ १०
७ ९

जुन व्यक्तिको तुलाराशिको मंगल छैठौं स्थानमा छ भने त्यो मानिस रोजगारको बाटोमा अपठेरो र दुर्बलताको योग पाउनेवाला, अन्य स्थानको सम्पर्कहरू द्वारा प्रभाव पाएर दैनिक व्यापारको काम चलाउनेवाला, खर्चको बाटोमा केही बाधाहरू र केही परतन्त्रताका साथै प्रभावपूर्ण खर्च गर्नेवाला, स्त्री स्थानमा केही परेशानी पाउनेवाला र इन्द्रिय भोगादिको केही कमी पाउनेवाला, भाग्यको स्थानमा प्रभाव शक्तिको योग पाउनेवाला, तथा देहको स्थानमा दुर्बलता र प्रमेह आदि रोगको कष्ट पाउनेवाला, शत्रु स्थानमा प्रभाव राख्ने भएको र मावली पक्षबाट केही हानि पाउने खालको होला।

कु० नं० १६६

३ १
४ २ १२
५ ११
६ ८ १०
७मं. ९

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस अन्य स्थानहरूको सम्बन्धबाट दैनिक व्यापार बलियो पार्नेवाला, रोजगारकै शक्तिले गृहस्थीको खर्चमा गौरव भेट्टाउने र गृहस्थीको त्यही गौरव अन्तरगत मनमा केही दुर्बलता अनुभव गर्ने खालको, अनि स्त्री स्थानमा दृढताको साथ-साथै केही न्यूनताको अनुभव गर्नेवाला र भोगेन्द्रियको बलियो एवं दृढ साधनहरूमा पनि केही न्यूनता भएको तथा पिता स्थानमा आंशिक वैमनस्यता र हानिको योग परेको होला। शरीर भित्र दुर्बलता अनुभव गर्ने र धनस्थानमा हानि पाउने र विशेष उन्नतिका लागि राजसमाजमा निकै काम गर्ने खालको होला।

कु० नं० १६७

३ १
४ २ १२
५ ११
६ ८मं. १०
७ ९

जुन व्यक्तिको धनुराशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस विदेश आदि स्थानको योगले दैनिक व्यापार गर्नेवाला, व्यापारको लाइनमा परिश्रम गरेर पनि दुर्बलता र पुरातत्त्वसित सम्बन्धित गूढ युक्तिहरूद्वारा काम गर्नेवाला, व्यापारको बाटोमा अनेक झ्याउला र कष्टहरू झेलने वाला, स्त्री स्थानमा ठूलो हानि पाउनेवाला, गृहस्थीको सम्बन्धमा निकै कष्ट सहनेवाला, व्ययस्थानमा न्यूनता र दुर्बलता भेट्नेवाला, दाजू-भाइ दिदी-बहिनीको स्थानबाट हानि पाउनेवाला, लाभ स्थानको वृद्धिका लागि कठोर श्रम र प्रयत्न गर्नेवाला, पेटमा कुर्ने रोगको कष्ट पाउनेवाला, पैतृक सम्पत्तिको हानि गर्नेवाला, सानो आयु र इन्द्रिय विकार भएको होला।

कु० नं० १६८

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९मं.

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको बलले व्यापारबाट र दैनिक रोजगारबाट बढी खर्चको शक्ति प्राप्त गर्नेवाला, अन्य स्थानहरूको सम्बन्धबाट दैनिक कर्मयोगले भाग्यमानीहरूमा गनिने खालको र अन्य स्थानहरूमा सम्बन्धित धर्मको पालन गर्नेवाला, यथार्थ धर्मको सम्बन्धमा केही हानि पाउनेवाला र दाजू-भाइ दिदी-बहिनीको स्थानमा केही न्यूनता र उपेक्षाको योग परेको होला। आमाको स्थानमा आंशिक हानि भेट्टाउने वाला र भवन-भूमि आदिको सुख स्थानमा पनि हानि भेट्टाउने वाला, भाग्यको भित्री तहमा न्यूनता अनुभव गर्नेवाला, स्त्री सम्बन्धको प्रभाव पाउनेवाला र लौकिक काममा कला प्रवीण होला। पुरुषार्थको स्थानमा केही न्यूनता पाउनेवाला होला।

कु० नं० १६९

जुन व्यक्तिको कुम्भ राशिका मंगल लग्नबाट दसौं स्थानमा छन् भने त्यो मानिस अन्य स्थानहरूको सम्पर्कबाट दैनिक व्यापार राम्रोसित चलाउने वाला, शरीर भित्र केही दुर्बलता र कुनै हानि अनुभव गर्नेवाला, सन्तान पक्षबाट सामान्य हानि भेट्टाउनेवाला, विद्या स्थानमा केही कमी र हानि पाउनेवाला, राज-समाजक स्थान सम्बन्धमा केही दौड़-धूप गर्नाले मान-सम्मान्न् प्राप्त गर्नेवाला, स्त्री पक्षमा आंशिक न्यूनताका साथै कही 'म ठूलो' भन्ने योग परेको होला। मातृस्थानमा केही न्यूनता भएको र इन्द्रिय सम्बन्धी भोगादिको कारणले केही महानता-का साथै न्यूनता र अशान्तिको योग परेको होला।

कु० नं० १७०

जुन व्यक्तिको मीन राशिका मंगल लग्नबाट एघारौं स्थानमा छ भने, त्यो मानिस दैनिक व्यापारबाट र अन्य स्थानको सम्पर्कबाट धनार्जन गर्नेवाला र धन संग्रहको स्थानमा केही हानि पाउने खालको होला। सन्तान पक्षबाट पनि हानि नै पाउनेवाला, विद्यामा केही न्यूनता तथा बठ्याइँले केही वृद्धि पाउनेवाला, आफ्ना शत्रुमा प्रभाव पार्न जान्नेवाला, मावली पक्षमा केही हानि पाउनेवाला, स्त्री स्थानबाट लाभ भेटनेवाला, तर स्त्री स्थानमा र भोगादिक पक्षमा केही न्यूनता, केही अन्य स्थानको सम्बन्धबाट व्यय शक्ति द्वारा आंशिक लाभ पाउनेवाला, कुटुम्ब स्थानमा केही हानि पाउनेवाला, व्ययलाई रोक्न जान्नेवाला भए पनि मौकामा बढी खर्च गर्ने खालको होला।

कु० नं० १७१

जुन व्यक्तिको मेष राशिका मंगल लग्नको बाह्रौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट केही हानि पाउनेवाला, दाजू-भाइ र दिदी-बहिनीको स्थानमा न्यूनता र उदासीन रहनेवाला, अन्य स्थानको सम्बन्धबाट केही भोगादि शक्ति पाउनेवाला, व्यापारको विषयमा केही अन्य स्थानको सम्बन्धबाट उन्नति गर्न जान्नेवाला, बढी धन व्यय गर्न अधिसर्नेवाला, भोगेन्द्रियको सम्बन्धमा केही बढी न्यूनता अनुभव गर्नेवाला, स्त्रीसित सम्बन्धमा केही प्रेम सम्पर्कको कमी सहित बलियो सम्बन्धको योग भेट्टाउने खालको र स्थानीय व्यापारमा केही दुर्बलता हुनाको कारणले आफ्नू हिम्मत र बल पुरुषार्थको शक्तिमा ह्रास भएको अनुभव गर्नेवाला, व्यापारमा ठूलो परिश्रमले धन कमाउने खालको होला।

कु० नं० १७२

# वृष लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको वृष राशिको बुध लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस विद्या-बुद्धिको शक्ति प्राप्त गर्नेवाला, विवेकरूपी महान् तागतले धन कमाउने वाला, सन्तान पक्षको योग्य शक्तिको आनन्द गौरव पाउनेवाला, कुटुम्बको गौरवमा केही बडप्पनको योग पाउनेवाला शरीरमा सौन्दर्य र कोमलताका साथै केही बन्धनको योग पाउनेवाला, स्त्री र गृहस्थीमा योग्यताले इज्जत र बुद्धिको योग पाउनेवाला, व्यापारको दैनिक लाइनमा आफ्नू योग्यता र विद्या विवेकको प्रभावद्वारा सफलता र उन्नतिको बाटो पैल्याउनेवाला, इन्द्रिय भोगादिकको बढी इच्छा राख्नेवाला, 'धनी हुँ' भन्ने अभिमानका साथै बढी बाठो होला।

कु० नं०१७३

३ १
४ २बु. १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस धेरै विद्या संग्रह गर्नेवाला र बढी धन जोर्नेवाला, अनि सन्तान पक्षमा केही बन्धन पाउने र बढी चातुर्यको शक्तिले धनको वृद्धि गर्नेवाला, आफ्नू बुद्धि भित्र धनलाई बढी महत्व दिने खालको तथा कुटुम्बको शक्ति प्राप्त गर्नेवाला र जीवनको दिनचर्यामा केही धनीको जस्तो काइदा-कदर पाउनेवाला होला। पुरातत्त्वको स्थानबाट पनि धनको लाभ पाउनेवाला, दिमाग भित्र ठूला-ठूला र बहुमूल्य योजनाहरू तयार पार्नेवाला, तर केवल धनको बढी वृद्धिका लागि र सन्तान पक्षका कारणहरूले मन भित्र केही घुमाउरो अनुभव गर्ने खालको होला।

कु० नं० १७४

३बु. १
४ २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कर्क राशिका बुध लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस विद्याको ठूलो शक्ति पाउनेवाला र विद्या तथा पुरुषार्थको शक्तिले धन कमाउनेवाला एवं विवेकको शक्ति बलले ठूलो उत्साह र हिम्मत प्राप्त गर्नेवाला, आफ्नू योग्यताको प्रभावले सौभाग्य वृद्धि गर्नेवाला तथा भाग्यमानीमा गनिने खालको होला। आफ्नै शक्तिले धर्मको पनि पालन गर्नेवाला तथा ईश्वरमा विश्वास र आस्था राख्नेवाला र राम्रो शरीर भएको, यश प्राप्त गर्नेवाला, दाजू-भाई दिदी-बहिनीहरूको शक्ति पाउनेवाला, बोलचालमा निकै बहुमूल्य र बलियो कुरा बोल्न जान्नेवाला, शीलयुक्त र दृढ विचार भएको होला।

कु० नं० १७५

३ १
४बु. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिका बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक विद्या ग्रहण गर्नेवाला, अनि सन्तान सुख प्राप्त गर्नेवाला, धन स्थानको पूरा सुख पाउनेवाला, भूमि-भवन सम्बन्धी सुख प्राप्त गर्नेवाला, माता-पिताको स्थानबाट पनि शक्ति प्राप्त गर्ने वाला, सुख र आरामका साधन हुने अनेक थरिका राम्रा-राम्रा वस्तुहरू तथा उत्तम-उत्तम विचारहरूको शक्ति प्राप्त गर्नेवाला, वाणी र विद्याद्वारा मनोरंजनका सुखद कार्यहरू गर्नेवाला, विद्या र विवेक एवं धनको बलले राज-समाजमा यश-मान प्राप्त गर्ने र व्यापारमा बढी धन कमाउनेवाल, कर्मिष्ठ एवं बाठो व्यक्ति होला।

कु० नं० १७६

३ १
४ २ १२
५बु. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्या राशिका बुध लग्नबाट पाँचौं स्थानमा छन् भने त्यो मानिस धरै थरिका विद्या ग्रहण गर्नेवाला, दिमागको शक्तिले महान् कार्य गर्नाले अपार धन आर्जन गर्नेवाला, दूलो चातुर्य र विवेक शक्तिको धनी हुनाका साथै सन्तान-सुख प्राप्त गर्नेवाला, र आय अथवा लाभको स्थानमा आंशिक न्यूनता अनुभव गर्नेवाला, कहिले काहीं लाभको स्थानमा उपेक्षा गरिदिनेवाला, दिमागमा केही बन्धनको योग पाउनेवाला, कुराकानीमा दूलो योग्यता र बढी बुद्धिमानीले गम्भीर बात बोलेर प्रतिपक्षीमाथि प्रभाव पार्नेवाला, कुटुम्बमा सम्मान पाउनेवाला, धनको निम्ति बढी सोच-विचार गर्नेवाला होला।

कु० नं० १७७

३ १ ४ २ १२ ५ ११ ६बु. ८ १० ७ ९

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस विद्यामा न्यूनता पाउनेवाला, सन्तान-सुखमा कमी पाउनेवाला, र धनमा पनि कमी पाउने तथा कुटुम्ब स्थानमा झन् कमी पाउनेवाला र बुद्धिमा केही डर र दुर्बलता अनुभव गर्नेवाला, बुद्धिको सम्बन्धमा केही बन्धन र बढी परिश्रमले गर्दा धन कमाउन कष्ट अनुभव गर्नेवाला, शत्रु स्थानमा बुद्धिको शान्तियुक्त उपायले काम बनाउनेवाला, विचारहरू भित्र निकै अल्झेको चातुर्यलाई हल गरेर दिमागमा शान्तिको योग पाउनेवाला, बढी धन खर्च गर्ने र धनागमको सम्बन्धमा अलि परतन्त्रता र केही अपठेरोको योग परेको होला।

कु० नं० १७८

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७बु. ९

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस विद्या र बुद्धिको बलमा व्यापार गर्नेवाला र विवेक शक्ति र लौकिक अनुभवद्वारा धन कमाउनेवाला, विद्याको प्रभावले पनि धनार्जन गर्नेवाला, धनको सहायतारूपी शक्तिले व्यापारको लाइनमा वृद्धि पाउनेवाला, सन्तान पक्षको शक्तिमा भरपर्नेवाला, तथा स्त्री स्थानमा चातुर्य र इज्जतको योग भेट्टाउनेवाला, भोगादिको शक्ति प्राप्त गर्नेवाला, वृद्धिको कार्यक्रमको लाइनबाट ठूलो मान र इज्जत प्राप्त गर्नेवाला, कुटुम्बको सम्बन्धमा सम्मान पाउनेवाला, धन वृद्धिका लागि दैनिक कार्यक्रम निकै राम्रो र कोमलता साथ सम्पन्न गर्नेवाला होला।

कु० नं० १७९

३ १
४ २ १२
५ ११
६ ८बु. १०
७ ९

जुन व्यक्तिको धनु राशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा हानिको योग परेको, विद्यास्थानमा न्यूनता पाउनेवाला र अन्य स्थानमा हानि पाउनेवाला, कौटुम्बिक हानि पाउनेवाला, केही पुरातत्त्व धनबाट लाभ पाउनेवाला, दिमागमा केही अत्यास भएको, निकै गहीरो कुराहरू गर्ने, र सोच-विचारमा बढी गाडिने खालको होला, बोलचालमा निकै गूढ युक्तिहरूद्वारा आफ्नू काम सपार्नेवाला, धन स्थानको वृद्धि गर्नका लागि बुद्धिको महान् श्रम खर्च गर्नेवाला, विदेशको सम्बन्धमा धन प्राप्त गर्न सहयोग पाउनेवाला, विवेक शक्तिद्वारा कुनै पुरातत्त्वको ज्ञान पाउनेवाला, जीवनको दिनचर्यामा सुकीर्तिको योग पाउने र जटिल बुद्धि होला।

कु० नं० १८०

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९बु.

जुन व्यक्तिको मकर राशिको धनु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस बढी उत्तम विद्या ग्रहण गर्नेवाला र भाग्य एवं बुद्धियोगबाट धन कमाउनेवाला, तथा धन र सन्तानको योगले भाग्यवान कहलिनेवाला तथा महान श्रेष्ठतम विवेक शक्ति प्राप्त गर्नेवाला, धर्मको पालन र ज्ञान प्राप्त गर्नेवाला, अनि ईश्वरमा श्रद्धा र विश्वास राख्ने खालको होला। लौकिक र पारलौकिक प्रणालीको सम्मिश्रण गरेर त्यसको नियम पालन गर्नेवाला, तथा कौटुम्बिक शक्तिको गौरव पाउनेवाला तथा दाजू-भाई दिदी-बहिनीको योगमा सौन्दर्य पाउनेवाला पुरुषार्थ स्थानबाट लाभ पाउनेवाला, बल पुरुषार्थमा केही विशेष शक्ति पाउनेवाला, दिमागभित्र शीतलता र सज्जनता राख्ने खालको होला।

कु० नं० १८१

३ १ ४ २ १२ ५ ११ ६ ८ १० बु. ७ ९

जुन व्यक्तिको कुम्भ राशिका बुध दसौं स्थानमा छ भने त्यो मानिस उद्योग सम्बन्धी उच्च विद्या पाउनेवाला र पिताका स्थानबाट शक्तिको लाभ पाउनेवाला, सन्तान पक्षबाट उन्नतिको योग पाउने र कारबार भित्र विवेकको शक्ति बुद्धिको सहायताले धेरै धन कमाउनेवाला, अनि राज-समाजको सम्बन्धबाट फाइदा उठाउने वाला र उन्नतिको लागि स्थिर र बलियो कार्य गर्नेवाला, मातृ-स्थानबाट लाभ पाउनेवाला, कर्म र बुद्धिको योग्यताले मान-सम्मान प्राप्त गर्नेवाला तथा भूमि-भवन आदिको लाभ पाउनेवाला, महान बाठो र कर्मिष्ठ होला।

कु० नं० १८२

३ १ ४ २ १२ ५ ११बु. ६ ८ १० ७ ९

जुन व्यक्तिको मीन राशिका बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धनस्थानमा न्यूनता र दुर्बलता पाउने तथा विद्याको पक्षमा केही न्यूनता भए पनि विद्याके केही बढी शक्तिको प्रयोग गर्न सक्ने वा जान्नेवाला, सन्तान्न पक्षबाट केही कमजोरीका साथै फाइदा पाउनेवाला तथा धनको बढी प्रभावले गर्दा बुद्धिमा आंशिक अत्यास अनुभव गर्नेवाला, कुटुम्बबाट केही दुर्बलता पाउनेवाला र कुरा-कानी गर्दा आफ्नू बुद्धिको दुर्बलता लुकाएर बाहिरी प्रभाव देखाउन जान्ने र आफ्ना कुराले प्रतिपक्षीलाई मुग्ध पार्नेवाला, गुप्त योजनाद्वारा आफ्नू काम सपार्न जान्ने र बाठो होला।

कु० नं० १८३

३ १
४ २ १२ बु.
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मेष राशिका बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट हानि पाउने र धनस्थानमा पनि हानि भेट्टाउनेवाला, दिमाग भित्र बढी कुरा खेलाउने र स्मरण-शक्ति अलि दुर्बल भएको होला। बढी धन व्यय गर्ने र अन्य स्थानहरूको सम्पर्कद्वारा बुद्धियोगबाट इच्छित धन कमाउनेवाला, एवं मावली पक्षबाट केही उचित सहयोग भेट्नेवाला, शत्रु स्थानमा शान्तिले काम मिलाउन जान्नेवाला, व्ययको स्थानमा केही विवेक शक्तिले काम सपार्न जान्नेवाला, कुटुम्बबाट हानि र दुर्बलता नै प्राप्त गर्ने खालको होला।

कु० नं० १८४

३ १ बु.
४ २ १२
५ ११
६ ८ १०
७ ९

# बृष लग्नान्तर - गुरुफलम्

जुन व्यक्तिको वृषराशिका गुरु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस लामो आयु हुने, निकै बाठो र शारीरिक परिश्रमबाट लाभ कमाउने

कु० नं० १८५

३　१
४　२गु.　१२
५　११
६　८　१०
७　९

वाला, लाभको सम्बन्धमा हदःको गूढयुक्तिहरू द्वारा सम्मान सहित धन कमाउनेवाला, शरीर भित्र केही सुन्दरता र स्वास्थ्यमा केही न्यूनता पाउनेवाला, जीवनको दिनचर्यामा अलि 'म ठूलो' भन्ने र आंशिक महत्त्व पाउनेवाला एवं विद्या स्थानबाट केही लाभ पाउने, योग्यता र गुप्त शक्तिको योग पनि राख्नेवाला, भाग्य स्थानमा केही हानि र केही उदासीनताको योगवाला, धर्मस्थानमा केही हानि र अलि अरुचिको योग परेको होला। गृहस्थीको स्थानमा जीवनको आंशिक लाभ पाउनेवाला, दैनिक व्यापार र पुरातत्त्वको सम्बन्धबाट लाभ पाउनेवाला, सन्तानबाट केही सुख-दुःख दुवै पाउने खालको होला।

जुन व्यक्तिको मिथुन राशिका गुरु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस पुरातत्त्व धनको लाभ पाउनेवाला र आयुको पूरा लाभ

कु० नं० १८६

३गु.　१
४　२　१२
५　११
६　८　१०
७　९

पाउनेवाला, वर्तमान धनको स्थानमा कहिले काहीं अलि हानिहरूको योग परेको र धनको वृद्धिका लागि केही गूढ युक्तिहरूले र परिश्रमले काम लिन जान्नेवाला तथा शत्रु स्थानमा ठूला युक्तिहरूले अथवा प्रभावले आफ्नू बिग्रिसकेको काम पनि सपार्न जान्नेवाला, जीवनको दिनचर्यामा केही धाक लगाउने बानी भएको, पिताको स्थानमा वैमनस्यताको योग परेको तथा राज-समाजको सम्बन्धमा पनि केही अरुचि र केही दिकदारीको योग परेको होला। मान-सम्मान प्राप्त गर्नेवाला र झ्याउलाहरू पन्छाउनका लागि झ्याउला हरूकै शस्त्रले लाभ प्राप्त गर्नेवाला हुनेछ।

जुन व्यक्तिको कर्क राशिका गुरु लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउने र ठूलो परिश्रमी तथा बढी प्रभावशाली एवं आयु स्थानमा वृद्धि पाउनेवाला, पुरातत्त्व शक्तिको लाभ पाउने र दिनचर्यामा धेरै गौरव अनुभव गर्नेवाला तथा दाजू-भाई दिदी-बहिनीको स्थानमा केवल आफ्नू प्रभुत्व देखाउनेवाला र भाग्यस्थानलाई पुरुषार्थ भन्दा बढी न्यून वा कमजोर ठान्नेवाला, धर्म स्थानलाई पनि अलि हेय दृष्टिले हेरेर थोरै महत्व दिनेवाला, ईश्वरको आस्था र निष्ठामा केही न्यूनता मान्नेवाला, बढी लाभ पाउनका लागि महान् रूपमा गूढ युक्तिहरूको प्रयोग गर्न जान्नेवाला र महान परिश्रमी अनि हृदय तथा बाहुबलमा ठूलो शक्तिको संचार भएको दैनिक व्यापार एवं गृहस्थीको सम्बन्धमा जीवन-शक्तिको लाभ पाउन महान प्रयत्न गर्ने खालको होला।

कु० नं० १८७

३ १
४गु. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिका गुरू लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस लामो आयु भएको र जीवनमा ठूलो प्रसिद्धि पाउनेवाला र पुरातत्त्व शक्तिको धेरै सुख लाभ भेट्टाउनेवाला तथा आमाको स्थानमा केही वियोग पाउनेवाला, गूढ एवं अपठेरा युक्तिहरूद्वारा धेरै काम सपार्ने खालको र बढी धन व्यय गर्ने र विदेश आदि अन्य स्थानहरूको सम्पर्कबाट निकै ठूलो सुख सम्बन्ध भेट्नेवाला, अन्य स्थानमा आंशिक वैमनस्यताको र हानिको योग परेको, साथै आवश्यक पदार्थहरूको खूब लाभ पाउनेवाला, आयको सम्बन्धमा सुख-युक्त बढी परिश्रमको योगले धन प्राप्त गर्नेवाला, राज-समाजमा निकै वैमनस्यता पाउनेवाला र गुप्त शक्तिको धनी होला।

कु० नं० १८८

३ १
४ २ १२
५गु. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्या राशिका गुरु पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा केही हानि र लाभको योग परेको र विद्या स्थानमा पनि केही न्यूनताका साथै लाभको योग परेको तथा पुरातत्त्वसित सम्बन्धित बुद्धि योगद्वारा लाभ पाउनेवाला अनि धर्मस्थानमा अलि अश्रद्धा भएको होला। भाग्य स्थानलाई थोरै महत्त्व दिनेवाला र ईश्वरमा विश्वास एवं श्रद्धा थोरै भएको तथा आफ्नू व्यक्तित्वमा केही अंहकार मान्नेवाला र लाभ प्राप्तिको निम्ति बुद्धिले र मनले बढी परिश्रम गर्नेवाला, विद्या बुद्धिभित्र बढी गूढ युक्तिहरूद्वारा काम सपार्न जान्नेवाला, कुरा-कानी गर्दा निकै घुमाएर छल-शक्तिको भर लिई काम गर्ने होला।

कु० नं० १८९

३ १
४ २ १२
५ ११
६गु. ८ १०
७ ९

जुन व्यक्तिको तुला राशिका गुरू छैठौं स्थानमा छ भने त्यो मानिस केही प्रभाव र केही परतन्त्रता युक्त कर्मद्वारा दुःख कष्ट खपेर धनागम गर्नेवाला, जीवनको दिनचर्यामा केही घुमाउरो झैं हृदयमा अनुभव गर्नेवाला, आयुको सम्बन्धमा अलि न्यूनता र दुर्बलताको अनुमान गर्नेवाला, पिताको स्थानमा वैमनस्यताको योग परेको होला। राज-समाज भित्र अरुचिको भाव राख्नेवाला, आयमा कमी अनुभव गर्नेवाला, बढी व्यय गर्न नडराउनेवाला, अन्य स्थानहरूको सम्पर्कमा जीवनको केही बाटो पाउने र धन संग्रहको स्थानमा आंशिक हानिले पुरातत्त्वको लाभ भेट्टाउने खालको होला।

कु० नं० १९०

३ १
४ २ १२
५ ११
६ ८ १०
७गु. ९

जुन व्यक्तिको वृश्चिक राशिका गुरु सातौं स्थानमा छ भने त्यो मानिस जीवनमा शान, अभिमान राख्नेवाला, स्त्री स्थानबाट आंशिक लाभ र अनेक झ्याउलाहरूको योग परेको होला। विदेशी सम्बन्धको योगले स्त्री पक्षबाट केही महत्वपूर्ण लाभ पाउनेवाला, दैनिक व्यापारको लाइनमा केही परिश्रम र मनको गूढ युक्तिहरूको बलले लाभ कमाउने वाला, विदेश आदिको सम्बन्धद्वारा महत्वपूर्ण लाभ प्राप्त गर्नेवाला, आफ्नू लाभ स्थानको पनि इच्छित लाभ पाउनेवाला, स्वार्थसिद्धिमा लागि परेको, व्यापार र गृहस्थीको वास्तविक बलियो उन्नति र शान्तिको स्थानबाट केही हानिको योग परेको होला। आयुको वृद्धि पाउनेवाला, हृदयको बलले व्यापारको लाइनमा पुरातत्त्वको आंशिक लाभ पाउनेवाला, निकै ठूलो पुरुषार्थ गर्नेवाला, दाजू-भाई दिदी-बहिनी धेरै भएको अनि लाभ प्राप्तिको लागि लौकिक कामहरूमा बांगो युक्तिले सफलता प्राप्त गर्नेवाला होला।

कु० नं० १९१

३ १
४ २ १२
५ ११
६ ८गु. १०
७ ९

जुन व्यक्तिको धनुराशिका गुरु आठौं स्थानमा छ भने त्यो मानिस आमदानी वा लाभको सम्बन्धमा विदेश यात्राको योग परेको होला। आयुको वृद्धि भेटने एवं दैवबलद्वारा सम्बन्धित पुरातत्त्वको महान् लाभ पाउनेवाला, खूब खर्च गर्नेवाला, अन्य स्थानहरूको विशेष लाभ भेट्टाउनेवाला, धनागमको बाटोमा बढी परिश्रम र गूढ युक्तिहरूद्वारा काम सपार्ने र सुखको वृद्धिका लागि ठूलो परिश्रम गर्नेवाला, मातृस्थानबाट केही हानि र आंशिक लाभ पाउने खालको होला। धन संग्रहको लागि सदैव प्रयत्नशील रहनेवाला, जीवनको दिनचर्यामा ठूलो गौरवको योग पाउनेवाला र आफ्नू जडाउरी वस्तुहरूको सम्बन्धमा केही हानि पाउनेवाला, कुटुम्ब स्थानमा केही हानि र लाभ पाउने खालको होला।

कु० नं० १९२

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९गु.

जुन व्यक्तिको मकर राशिका गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा ठूलो हानिको योग परेको होला। धर्मस्थानमा केही दुर्बलता पाउनेवाला, पुरातत्त्वबाट धन हानि भेट्ने र जीवनको दिनचर्यामा केही अशान्ति अनुभव गर्ला र धन-प्राप्तिको लागि केही धर्मको हानि पाउनेवाला, आमदानीको स्थानमा न्यूनता पाउनेवाला, ईश्वरमा विश्वास र निष्ठामा निकै दुर्बलता पाउनेवाला र आफ्नू पुरूषार्थलाई सबभन्दा ठूलो मान्ने तथा शरीरमा बर्ता अभिमान भएको, विद्या स्थानमा निकै ठूलो र गूढ बठ्याइँले काम चलाउनेवाला, कुराकानी गर्दा बढी सत्यता र दूरदृष्टिको कुरा बुझाउने क्षमता भएको, दाजू-भाई दिदी-बहिनीको सहयोग पाउनेवाला होला।

कु० नं० ११३

३ १ ४ २ १२ ५ ११ ६ ८ १० गु. ७ ९

जुन व्यक्तिको कुम्भ राशिको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस विदेशको आंशिक सम्बन्ध भेट्टाउने भएको र पिता स्थानबाट केही वैमनस्यता र केही लाभ पाउनेवाला, आयुस्थानबाट केही लाभ पाउनेवाला, हृदयसित सम्बन्धित परिश्रमी कर्म र कष्ट-साध्य युक्तिहरूद्वारा आफ्नू कारबार चलाएर धन कमाउनेवाला, राज-समाजको स्थानबाट केही दुर्बलता पाउनेवाला, पुरातत्त्वको आंशिक लाभ पाउनेवाला, संसारमा कसैको पनि वास्ता नगरेर आफ्नै तरीकाले सम्मानयुक्त जीवन यापन गरेर दिन काट्नेवाला, धनको वृद्धिका लागि तथा आफ्नू प्रभाव बढाउनका लागि हृदयको पूरा बल-तागतले साम-दाम-दण्ड-भेद चारै थरिका नीतिको प्रयोग गर्नेवाला, मातृ-स्थानको सुखको न्यूनतालाई केही धन कमाएर अनि त्यो न्यूनता हटाउनमा चाखमात्रे खालको होला।

कु० नं० ११४

३ १ ४ २ १२ ५ ११ गु. ६ ८ १० ७ ९

जुन व्यक्तिको मीन राशिका गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आयुको वृद्धि प्राप्त गर्नेवाला र पुरातत्त्व धनको स्वतः लाभ पाउनेवाला लाभ एवं आयका लागि हृदयको सम्पूर्ण शक्ति तथा विदेशको सम्बन्धको योग पाएर परिश्रम र युक्तिहरू द्वारा पूर्ण सफलता पाउनेवाला तथा लाभको शक्तिले पुरुषार्थ बलको बढी वृद्धि गर्न जान्ने होला। दैनिक व्यापारमा सफलता पाउनको लागि महान् उत्साह ठूलो परिश्रमको शक्तिले काम बनाउनेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा केही कटुत्वयुक्त सम्बन्धको योग परेको होला। स्त्री भोगादिकको स्थानमा केही अनधिकार लाभ पाउने प्रयत्नमा लागेको होला। गुप्त शक्तिहरूको बलद्वारा अनेक लाभ पाउने खालको होला।

कु० नं० ११५

३ १ ४ २ १२ गु. ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको मेष राशिका गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी व्यय गर्नेवाला र अन्यान्य स्थानहरूको लाभको योग परेको होला। आयुको सम्बन्धमा केही दुर्बलता साथ सफलता प्राप्त गर्नेवाला, लाभ प्राप्तिका लागि ठूला-ठूला महान् कष्टदायक कर्महरूले र अनेक गूढ युक्तिहरूले इच्छित सफलता पाउनेवाला, जीवनको दिनचर्यामा खर्चका शक्तिको गौरव तथा मातृ-स्थानको सम्बन्ध द्वारा सुखका साधनहरूको शक्ति एकत्र गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको सम्बन्धमा केही न्यूनता पाउनेवाला र मावली पक्षमा केही वैमनस्यता पाउनेवाला, दैनिक चाहिने पदार्थहरूमा जे इच्छा गरे पनि पाउनेवाला होला।

कु० नं० ११६

३ १गु. ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

# वृषलग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू देह र आत्माभित्र निकै ठूलो शक्ति पाउनेवाला, ठूला-ठूला दाउ-पेंच चलाएर र स्वयंको परिश्रमले आफ्नू स्वाभिमान र देहाभिमानको रक्षा एवं वृद्धि गर्नेवाला, अलि लुकेको क्रोधको शक्ति धारण गर्नेवाला, स्त्रीको स्थानमा अलि अनधिकाररूपले लाभ प्राप्त गर्नेवाला, शत्रु स्थानबाट ठूलो प्रभाव भेट्नेवाला, आफ्नै देहादिको योगबाट दैनिक व्यापारमा सफलता पाउनेवाला, रोगी शरीर भएको होला। राम्रो-नराम्रो विचार-शक्तिद्वारा र चातुर्यले काम बनाउनेवाला, केही ख्याति प्राप्त गर्ने र दृढ संकल्पी एवं जिद्दी स्वभावको होला।

कु० नं० ११७

३ १
४ २शु. १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धन कमाउनका लागि प्राणपणले चेष्टा र प्रयत्न गर्नेवाला, अनि घुमाउरो युक्तिहरू द्वारा र बढी परिश्रम गरेर धनको वृद्धि गर्नेवाला, शरीरमा केही बन्धन र थिचिएको अनुभव गर्नेवाला एवं धनको लागि केही अनुचित चातुर्य द्वारा लाभ कमाउनेवाला, धनकै शक्तिले विरोधी पक्षमा आफ्नू प्रभाव जमाउनेवाला, फेरि धन स्थानबाट नै सम्मान र इज्जत पाउनेवाला, शारीरिक परिश्रमको बलले केही पुरातत्त्वको स्थानबाट आंशिक शक्ति पाउनेवाला, कुटुम्ब र धनस्थानमा अलिकति क्लेश वा झ्याउलो पाउने र केही रोगयुक्त होला।

कु० नं० ११८

३शु. १
४ २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कर्क राशिको शुक्र लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस बढी परिश्रम र पुरुषार्थ गरेर उन्नतिमा अग्रसर हुनेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा केही उन्नति र केही पदमा वृद्धिका साथै आंशिक वैमनस्यताको योग परेको एवं भाग्यस्थानमा वृद्धि गर्नेवाला, ठूलो साहस र हिम्मत भएको तथा बठ्याइँ र घुमाउरा युक्तिहरू द्वारा तथा आत्मबलको योगद्वारा विजय-शक्तिको विकास गर्नेवाला र भाग्यमानी ठानिनेवाला तथा धर्मस्थानको पालन र विचार राख्नेवाला, आफ्नू पुरुषार्थमा ठूलो विश्वास भएको एवं शत्रु स्थानमा प्रभाव राख्न जान्ने, मावली पक्षबाट केही सहायता पाउनेवाला होला।

कु० नं० १९९

३ १ ४शु. २ १२ ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको सिंह राशिका शुक्र लग्नबाट चौथो स्थानमा छ भने-त्यो मानिस मातृ-स्थानमा वैमनस्यताका साथै सम्पर्क योग पाउनेवाला, देहादिक सुखहरूमा केही हानि र अनेक रोगादि झ्याउलोको योग पाउनेवाला तथा पिताको स्थानमा अलिकति असुविधाको साथै प्रेम र आत्मीयताको उन्नति युक्त सम्पर्क पाउनेवाला, एवं राज-समाजको स्थानमा उन्नति र सम्मान पाउने र त्यसको निम्ति सकेसम्म प्रयत्न गर्नेवाला, भवन-भूमि आदिको व्यवस्थामा केही न्यूनता अनुभव गर्नेवाला एवं व्यापारको प्रतिष्ठाको उन्नतिका लागि ठूलो प्रयत्न गर्ने र शत्रु पक्षबाट केंही अशान्ति अनुभव गर्ने र मानयुक्त होला।

कु० नं० २००

३ १ ४ २ १२ ५शु. ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको कन्या राशिका शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा कष्ट सहने खालको तथा विद्यास्थानमा दुर्बलता पाउनेवाला, दिमाग भित्र केही असजिलोको स्थायी योग पाउनेवाला, केही असत्यको तागतले र लुकाई-छपाईका युक्तिहरू द्वारा कुरा गरेर त्यसको लाभ प्राप्त गर्नेवाला, हृदय र विचारहरूको भित्र गुप्त शक्ति राख्नेवाला, लाभको ठूलो शक्ति भेट्टाउनको निम्ति दिमाग सम्बन्धी महान परिश्रमद्वारा काम सपार्नेवाला, शत्रु पक्षबाट केही अनुभव गर्नेवाला, शरीरमा दुर्बलता अनुभव गर्ने र बुद्धिको संकीर्णताले गर्दा आफ्नू विचार र मन्तव्य राम्ररी अर्कालाई बुझाउन नसक्नेवाला होला।

कु० नं० २०१

३ १
४ २ १२
५ ११
६शु. ८ १०
७ ९

जुन व्यक्तिको तुला राशिका शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही परतन्त्रतायुक्त प्रभावशाली कर्म गर्नेवाला, आत्मबलको ठूलो धैर्य-शक्ति राख्नेवाला एवं घुमाउरा चातुर्यहरूको कला जान्ने भएको होला। फेरि शरीरमा अनेक रोग लागेर कष्ट पाउनेवाला, मावली पक्षको निकै ठूलो सहयोग प्राप्त गर्नेवाला, बढी धन खर्च गर्नेवाला तथा अन्य स्थानहरूबाट सम्पर्क शक्ति प्राप्त गर्नेवाला, शत्रु स्थानमा ठूलो प्रभाव राख्नेवाला, शरीरद्वारा महान परिश्रम गर्न सक्ने खालको र झगडा विवादमा रहेर पनि अपठेरोमा विजय पाउनेवाला, गुप्त बाठो होला।

कु० नं० २०२

३ १
४ २ १२
५ ११
६ ८ १०
७शु. ९

जुन व्यक्तिको वृश्चिक राशिका शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस राम्रो चंचलता युक्त शरीर प्राप्त गर्नेवाला, स्त्री स्थानमा थोरै अधिकार पाउने र इन्द्रिय भोगादिको पक्षमा केही न्यूनता र अलिकति वृद्धिको योग पाउनेवाला, आफ्नी स्त्रीको निज सम्बन्धमा केही न्यूनता अनुभव गर्नेवाला, आफ्नू व्यक्तित्वलाई धेरै ठूलो मान्नेवाला र व्यापार लाइनमा ठूला-ठूला युक्तिहरूद्वारा र परिश्रमले काम सपार्ने वाला, भोग-विलासको शक्ति प्राप्त गर्नका लागि निकै घुमाउरा युक्तिहरूले र परिश्रमले अनि आत्मबलको शक्तिले काम बनाउने होला। लौकिक कार्य गर्दा महान् चातुर्य दर्शाउने खालको होला।

कु० नं० २०३

| | | |
|---|---|---|
| ३ | | १ |
| ४ | २ | १२ |
| ५ | | ११ |
| ६ | ८शु. | १० |
| ७ | | ९ |

जुन व्यक्तिको धन राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस शारीरिक कष्ट सहन सक्नेवाला, मावली पक्षबाट हानि पाउनेवाला र हृदयमा अशान्ति पाउनेवाला, गुप्त चालाहरूको भण्डारकै शक्ति राख्नेवाला एवं कष्टसाध्य परिश्रम गर्नेवाला र आफ्नू प्रभावमा न्यूनता पाउनेवाला, आत्मबलको शक्तिले र केही घुमाउरा युक्तिहरूले सम्बन्धित पुरातत्त्वको आंशिक लाभ पाउनेवाला, धनस्थानको वृद्धि गर्नका लागि आफ्नू सम्पूर्ण शक्तिको प्रयोग प्राणपणले गर्नेवाला र आयु-स्थानमा केही चिन्तायुक्त रहेर शक्ति पाउनेवाला, शत्रुपक्षमा अशान्तिद्वारा मिलाप पाउने खालको होला।

कु० नं० २०४

| | | |
|---|---|---|
| ३ | | १ |
| ४ | २ | १२ |
| ५ | | ११ |
| ६ | ८ | १० |
| ७ | | ९शु. |

जुन व्यक्तिको मकर राशिका शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमानी ठानिन्छ र देहादिक परिश्रमको योगले भाग्यको उन्नति

कु० नं० २०५

३ १
४ २ १२
५ ११
६ ८ १० शु.
७ ९

गर्नेवाला र धर्मस्थानमा श्रद्धा र विश्वास भएर पनि धर्मोन्नतिको पालन गर्न नसक्ने खालको र धर्म स्थानबाट केही अनुचित लाभ प्राप्त गर्नेवाला, दाजु-भाई दिदी-बहिनीको आंशिक योग पाउनेवाला, आत्माभित्र केही दूरदेशको तागत राख्ने होला। ठूलो प्रभाव राखेर शत्रु स्थानमा दैवयोगले सफलता पाउने महान सज्जन होला।

जुन व्यक्तिको कुम्भ राशिका शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरादि शक्तिद्वारा महान प्रभावशाली कार्य गर्नेवाला,

कु० नं० २०६

३ १
४ २ १२
५ ११शु.
६ ८ १०
७ ९

आफ्नू महान चातुर्यहरूको बलले राज-समाजमा उन्नति गर्नेवाला तथा पिताको स्थानमा आंशिक वैमनस्यताका साथै उन्नतिको ठूलो साधन पाउनेवाला, शत्रुस्थानमा धेरै ठूलो प्रभाव राख्नेवाला र मातृ-स्थानमा पनि केही वैमनस्यता र केही अरुचिको योग पाउनेवाला, आफ्नू आदर्श घुमाउरो चालहरू द्वारा व्यापारादिको उन्नति र मान सम्मान प्राप्त गर्नेवाला र आफ्नू आत्मा एवं शरीर भित्र धेरै ठूलो गौरव मान्नेवाला, सुख प्राप्तिका साधनहरूमा केही न्यूनता अनुभव गर्ने खालको होला।

जुन व्यक्तिको मीन राशिका शुक्र एघारौं स्थानमा छ भने त्यो मानिस दैहिक परिश्रमको योगबाट महान् लाभ प्राप्त गर्नेवाला र लाभ एवं आम्दानीको वृद्धि गर्नका लागि महान् चातुर्यले र घुमाउरो चालाहरूको योगले सफलता पाउनेवाला, विद्या स्थानमा न्यूनता र उदासीनताको योग पाउनेवाला तथा सन्तान पक्षमा पनि केही न्यूनताको योग र केही अशान्तिको योग अनुभव गर्ने खालको होला र शरीरमा सौन्दर्यको योग पाउनेवाला तथा आत्माको भित्र बल र देहमा केही रोग वा केही चिन्ताको योग परेको होला। राम्रो र रसादिक पदार्थ बढी मनपराउनेवाला, अनि धनोन्नतिको लागि धेरै दगुरा-दगुर गर्ने निकै बाठो खालको होला।

कु० नं० २०७

जुन व्यक्तिको मेष राशिका शुक्र लग्नको बाह्रौं स्थानमा छ भने त्यो मानिस बाहिरी अन्य स्थानहरूको सम्पर्कमा बस्नेवाला र बढी धन खर्च गर्नेवाला, शरीर सम्बन्धी कष्ट र अनेक थरिका रोगको योग परेको होला। मावली पक्षमा अलि हानि पाउनेवाला, धेरै ठूलो गोपनीय चातुर्यले काम गर्नेवाला, आफ्नू लुकेको तागतले शत्रुलाई हानि पुऱ्याउने र न्यूरन कर लगाउनेवाला, आत्माभित्र अलिकति अशान्तिको योग पाउने वाला, शरीरको सौन्दर्यमा केही न्यूनता अनुभव गर्ने र प्रभावको स्थानमा पनि कमीको योग पाउनेवाला, केही एक्लो परेको छु भन्ने अनुभव गर्ने खालको होला।

कु० नं० २०८

# वृष लग्नान्तर - शनिफलम्

जुन व्यक्तिको वृष राशिका शनि लग्नको पहिलो स्थानमा छ भने त्यो

कु० नं० २०९

३ १ ४ २श. १२ ५ ११ ६ ८ १० ७ ९

मानिस ठूलो प्रभावले निवास गर्नेवाला, प्रभावशाली कर्म गर्नेवाला, भाग्यमानी मानिने खालको तथा पिता र राज-समाजको इज्जत प्राप्त गर्नेवाला, राजनीतिलाई उच्च काइदाले व्यवहार गर्नेवाला, आफ्नू उन्नतिका लागि ठूलो प्रयत्न गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा अरुचिको योग भेट्टाउने र स्त्री स्थानमा वैमनस्यता पाउने, दैनिक व्यापारमा केही अपठेराहरूले काम चलाउने र भोगादि पक्षमा अलि न्यूनता एवं असन्तोष पाउनेवाला, ठूलो परिश्रमको काम गर्ने र जिद्दी प्रकृतिको होला।

जुन व्यक्तिको मिथुन राशिका शनि लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस भाग्यको बल र कर्मको शक्तिले धनको वृद्धि पाउने खालको

कु० नं० २१०

३श. १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

र पिता-स्थानको सम्बन्धले पनि धन प्राप्त गर्नेवाला एवं राज-समाजको सम्बन्धमा ठूलो इज्जत कमाउने र मातृ-स्थानमा केही असन्तोष पाउनेवाला अनि भूमि भवन आदिको व्यवस्थामा अलि न्यूनताको योग पाउनेवाला र आमदानी एवं लाभोन्नतिको स्थानमा बढी वृद्धि गर्नका लागि बर्ता परिश्रम गर्ने खालको र पिताको स्थानमा तथा राज-समाजको स्थानमा केही बन्धन झैं अनुभव गर्नेवाला र धर्मको सम्बन्धमा बन्धन पाउनेवाला, केही अशान्ति युक्त होला।

जुन व्यक्तिको कर्कराशिका शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू पराक्रमको शक्तिले महान् उन्नति गर्नेवाला, राज-समाजमा सम्मान र भाग्यको शक्तिले सफलता र यश प्राप्त गर्नेवाला, दाजू-भाई दिदी-बहिनीबाट केही असन्तोषजनक शक्ति र सहयोग प्राप्त गर्नेवाला, विद्याको स्थानमा बुद्धि र शक्ति प्राप्त गर्नेवाला, कुरा-कानीमा केही दैवयोगले तत्काल जवाब दिन सक्ने शक्ति भएको, व्ययस्थानभित्र केही दुर्बलता र उदासीनताको योग परेको तथा अन्य स्थानहरूमा असन्तोष र न्यूनताको योग पाउनेवाला एवं भाग्यमानीमा गनिने खालको होला। धर्म-कर्मको पालन गर्नेवाला ठूलो प्रभावशाली साहसी र परिश्रमी तथा पिता स्थानको शक्ति पाउने खालको होला।

कु० नं० २११

३ १
४श. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिका शनि लग्नको चतुर्थ स्थानमा छ भने त्यो मानिस माता-पिताको स्थानको सम्बन्धमा केही असन्तोषका साथै वृद्धि पाउनेवाला र मावलीबाट वृद्धिको योग भेट्टाउनेवाला अनि शत्रुस्थानमा उच्च शक्ति पाउनेवाला र ठूलो प्रभावको योग पाउनेवाला र शरीरमा गौरव एवं भाग्यमानीको योग परेको होला। राज-समाजको सम्बन्धमा केही अशान्तियुक्त कर्महरू द्वारा मान र सुख प्राप्त गर्नेवाला, सुख प्राप्तिको वातावरणमा केही न्यूनता र केही सम्मान पाउनेवाला, आफ्नू प्रभाव वृद्धिका लागि बराबर प्रयत्न गरिरहने खालको होला। निकै ठूलो झ्याउलो बोक्नु पर्ने काम गरेर पनि आफ्नू भाग्योदयको योग भेट्नेवाला, भूमि-भवन र धर्मको योग पाउने खालको होला।

कु० नं० २१२

३ १
४ २ १२
५श. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्या राशिका शनि लग्नबाट पाँचौ स्थानमा छ भने त्यो मानिस पिताको शक्तिबाट लाभ प्राप्त गर्ने र राज-समाजको सम्बन्धमा बुद्धि र विद्याद्वारा सम्मान र धनागम गर्नेवाला, धर्म कर्मको ज्ञान भएको र विद्याको प्रचुर अध्ययन गरिसकेको होला। सन्तान पक्षबाट केही उन्नतिको कारण पाउनेवाला, स्त्री स्थानबाट केही असन्तोषका साथै भाग्य र मानको सम्बन्ध पाउनेवाला, दैनिक व्यापारको विषयमा अलि बढी परिश्रमले उन्नतिको योग परेको धनको वृद्धिको गर्नमा ठूलो प्रयत्न र बर्ता लोभले काम गर्नेवाला, स्थिरता साथ गम्भीर कुरा गर्न जान्ने, सत्त्वज्ञानी र भाग्यमानी होला।

कु० नं० २१३

३ १
४ २ १२
५ ११
६श. ८ १०
७ ९

जुन व्यक्तिको तुला राशिका शनि लग्नको षष्ठ स्थानमा छ भने त्यो मानिस पिताको स्थानबाट ठूलो शक्ति प्राप्त गर्नेवाला, महान परिश्रम र प्रभावशाली कर्मको योगले व्यापार गर्नेवाला, मान-प्रतिष्ठा प्राप्त गर्नेवाला र शत्रुस्थानमा निकै प्रभाव राख्नेवाला, प्रभावको वृद्धि गर्न र कायम राख्नको लागि कठिनभन्दा पनि कठिन कर्म गर्न तत्पर रहने खालको, व्ययको स्थानमा केही कमी र हेलचक्राइँले काम गर्नेवाला, फेरि जीवनको दिनचर्यामा वृद्धिको कारणहरूले गर्दा केही अशान्तिको योग भेट्टाउनेवाला, जीवनलाई सहायता दिने प्रथम र गम्भीर वस्तुहरूको तर्फबाट केही असन्तोष मात्रै खालको, दाजू-भाई दिदी-बहिनीको स्थानमा केही वैमनस्यता पाउनेवाला होला।

कु० नं० २१४

३ १
४ २ १२
५ ११
६ ८ १०
७श. ९

जुन व्यक्तिको वृश्चिक राशिका शनि लग्नको सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको लाइनबाट परिश्रमद्वारा भाग्यवानको शक्ति र बुद्धि प्राप्त गर्ने खालको र भाग्यमनीमा गनिने खालको होला। गृहस्थीमा भाग्यमानीको योग भएर पनि मनमा केही असन्तोष र उकुस-मुकुस भएझैं योग परेको, धर्म-कर्मको सामान्य रूपमा पालन गर्नेवाला, एवं मातृ-स्थानमा केही असन्तोष पाउनेवाला, सुख प्राप्तिको स्थानमा केही न्यूनता अनुभव गर्नेवाला, पितास्थानबाट केही अरुचि युक्त शक्ति पाउनेवाला, राज-समाजको शक्तिको लाभ भाग्यको शक्तिद्वारा लौकिक र दैनिक कर्मबाट प्राप्त गर्ने खालको र केही अभिमानी होला।

कु० नं० २१५

३ १
४ २ १२
५ ११
६ ८श. १०
७ ९

जुन व्यक्तिको धनु राशिका शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लामो आयु भएको र पिता स्थानबाट कष्टयुक्त लाभ पाउनेवाला, भाग्यको उन्नतिमा अनेक थरिका बाधा र न्यूनता पाउनेवाला, यशमा हानि पाउने र विदेशको सम्बन्धबाट परिश्रमद्वारा निकै उन्नतिको योग परेको र जीवन-यापनमा सहायक हुने केही प्रथम र गम्भीर वस्तुको लाभ पाउनेवाला, गुप्त शक्तिको बल भएको तथा राज-समाजको सम्बन्धमा सम्मानको न्यूनता अनुभव गर्नेवाला, विद्या स्थानबाट लाभको शक्ति प्राप्त गर्ने बुद्धिभएको होला। धन र सन्तान एवं मान प्राप्त गर्नमा दैवयोगले कर्मको सहारा पाउनेवाला तथा धर्मको केही हानि गर्ने खालको होला।

कु० नं० २१६

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९श.

जुन व्यक्तिको मकर राशिका शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको महान् शक्ति प्राप्त गर्नेवाला, पिता स्थानबाट उन्नतिको साधन स्वतः प्राप्त गर्न सक्ने र राज-समाजको शक्तिबाट लाभ केवल भाग्यको बलले नै प्राप्त गर्नेवाला, अफ्ना राम्रा कर्मको बलले भाग्यको वृद्धिमा सफलता प्राप्त गर्नेवाला र भाग्य एवं कर्मको बलद्वारा लाभको वृद्धि प्राप्त गर्नेवाला, तथा पिता स्थानको शक्तिबाट र भाग्य एवं कर्म बलको शक्तिले शत्रु स्थानमा र प्रभाव स्थानमा महानताको योग पाउनेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा नीरसता पाउनेवाला, पुरुषार्थ गर्न सक्नेवाला, धर्मको पालन गर्ने र सम्मान पाउने खालको होला।

कु० नं० २१७

३ १
४ २ १२
५ ११
६ ८ १० श.
७ ९

जुन व्यक्तिको कुम्भ राशिका शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानको शक्तिबाट भाग्यको विकास सम्बन्धी उच्च प्रभाव पाउनेवाला र राज-समाज भित्र निकै ठूलो सम्मान प्राप्त गर्नेवाला, बाहिरी अन्य स्थानहरू को सम्पर्कमा न्यूनता र झ्याउलो ठान्नेवाला, खर्चको सम्बन्धमा केही उदासीनता र त्रुटिहरूको योग परेको होला। मातृ स्थानमा केही हेलचक्राइँको योग पाउनेवाला र स्त्री स्थानमा अलि-अलि वैमनस्यताको साथसाथै भाग्योदयको सम्बन्ध भेट्टाउनेवाला, केही धर्मको रजोगुणी पालन गर्नेवाला, धेरै थरिका व्यापारमा निपुण होला। सुखको सम्बन्धमा केही न्यूनताको योग परेको होला।

कु० नं० २१८

३ १
४ २ १२
५ ११श.
६ ८ १०
७ ९

जुन व्यक्तिको मीन राशिका शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आमदानी र लाभ प्राप्तिमा महान वृद्धि गर्न जाने र पिता-स्थानबाट लाभको योग परेको होला, धर्म-कर्मको शक्तिबाट पनि लाभ प्राप्त गर्न जानेवाला एवं शरीरमा सम्मान र इज्जत प्राप्तिको योग पाउनेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ केही अरुचिको साथ प्राप्त गर्नेवाला, आफ्ना गहीरा र गूढ युक्तिहरूद्वारा पनि उन्नतिका साधन प्राप्त गर्नेवाला एवं लाभको स्थानमा केही असीमित वा हदभन्दा बढी लाभ प्राप्त गर्ने प्रयत्न गर्दै रहने खालको होला। शक्ति र बुद्धिको स्थानमा तथा सन्तानको स्थानमा केही सफलता पाउनेवाला र बढी परिश्रम गर्ने खालको उत्साही होला।

कु० नं० २१९

३ १
४ २ १२ श.
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मेष राशिका शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट हानि पाउनेवाला, अनि केही क्षुद्र र सानो कर्म गर्ने योग परेको होला। बाहिरी अन्य स्थानहरूको सम्बन्धमा दुर्बलताका साथै भाग्यको उन्नति गर्नेवाला र खर्चको स्थानमा केही कमजोरीको योग पाउनेवाला, शत्रुस्थानमा केही प्रभावको विशेष वृद्धि गर्न जाने र प्रयत्नशील रहिरहनेवाला अनि अनेक थरिका अपठेरा कामहरूको वृद्धि गर्ने बानी भएको र भाग्यमानीमा गनिने एवं भित्री भाग्यमा न्यूनता पाउने खालको तथा धर्मको स्थानमा दुर्बलता पाउने र धनको वृद्धि गर्नमा सहायता प्राप्त गर्नेवाला तथा राज-समाजको सम्बन्धमा केही न्यूनता वा दुर्बलताको योग पाउने खालको होला।

कु० नं० २२०

३ १श.
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृष लग्नान्तर - राहुफलम्

जुन व्यक्तिको वृष राशिको राहु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस शरीर स्थानमा केही न्यूनता अनुभव गर्नेवाला, अनेक चिन्ता र

कु० नं० २२१

३ १
४ २रा. १२
५ ११
६ ८ १०
७ ९

धेरै झ्याउलाहरू भोग्नेवाला, अनेक चातुर्यले आफ्नू काम सपार्न जान्नेवाला, केही छल प्रपञ्च र उच्च चातुर्यद्वारा जोसित पनि आफ्नू मतलब सिद्ध पार्नेवाला, आफ्नू देहको प्रसिद्धि पाउनको निम्ति ठूलो परिश्रम र कष्टहरू सहन सक्नेवाला, शारीरिक शक्ति स्थिर राख्नका लागि अनेक सोझा र बांगा यत्नले काम बनाउनेवाला, आफ्नू सज्जनता देखाएर लाभ कमाउने र कहिले काहीं ठूलै सकंट पनि सहने र हिम्मती होला।

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको वृद्धिका लागि महान् परिश्रम र ठूलो चातुर्यले

कु० नं० २२२

३रा. १
४ २ १२
५ ११
६ ८ १०
७ ९

कार्यसिद्धि गर्नेवाला, धनको लागि अनेक थरिका प्रपञ्चको रचना गर्न जान्नेवाला, धनके निम्ति महान् बन्धनकारक कठिन कर्म पनि गर्नेवाला, धन वृद्धिको बाहिरी प्रदर्शनलाई बलियो पार्नका लागि महान् आडम्बरको योगले काम सपार्न जान्नेवाला, धनस्थानमा कहिले काहीं ठूलो विपत्तिको योग परेको होला। कुटुम्ब स्थानमा केवल नकली वृद्धिका योग पाउनेवाला, धनको स्थानमा बाहिरी प्रदर्शनभन्दा भित्री दुर्बलता अनुभव गर्नेवाला, धन स्थानलाई जरैदेखि बलियो पार्नका लागि ठूलो प्रयत्न गर्ने ख्यालको होला।

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस धेरै ठूलो पुरुषार्थ गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा अलिकति हानि वा सम्बन्ध-विच्छेद पाउनेवाला र आफ्नू प्रभावको उन्नतिका लागि अनेक कठिन कष्टसाध्य कार्य गर्नमा सदैव तत्पर रहनेवाला, आफ्नू परिश्रम र पुरुषार्थको शक्तिले गरिएका कर्महरूमा कहिले काहीं सांघातिक नराम्रो प्रभाव परेको सहनेवाला, आफ्नू बाहुबलको भित्र कहिले काहीं न्यूनताको योग पाउनेवाला र धेरै ठूलो युक्तिपूर्ण प्रभावशाली काम गर्नेवाला एवं गुप्त चातुर्यको योगले साहसको काम गर्नेवाला, आफ्नू स्वार्थसिद्धिको स्थानमा कटिबद्ध भएर काम गर्ने खालको होला।

कु० नं० २२३

३ १
४रा. २ १२
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको सिंह राशिका राहु लग्नबाट चतुर्थ स्थानमा छ भने त्यो मानिस मातृ-स्थानमा केही हानि पाउनेवाला र भवन-भूमिको केही न्यूनता वा हानि पाउनेवाला, सुख प्राप्तिका साधनहरूमा ठूला-ठूला कमीको योग पाउनेवाला र आफ्नू जन्मस्थानको सम्बन्धमा केही वियोग पाउनेवाला तथा महान कष्टसाध्य कर्महरूको योगले सुख प्राप्तिका साधन एकत्र गर्नेवाला एवं जीवनमा ठूला-ठूला दुःखहरू खपेर सुख प्राप्तिको जरो बलियो पार्नेवाला, सहृदय बन्धुहरूको न्यूनता पाउनेवाला, सुख प्राप्तिको सम्बन्धमा गुप्त चालले वा भेदनीति द्वारा केही सफलता पाउनेवाला, सुख-शान्तिको स्थानमा कहिले काहीं सांघातिक गहीरो वेदनाहरूको योग परेको र केही अशान्त खालको होला।

कु० नं० २२४

३ १
४ २ १२
५रा. ११
६ ८ १०
७ ९

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या स्थानबाट हानि पाउने भए पनि विद्याको बलियो योग पाउन सक्दछ, सन्तान पक्षबाट केही हानि र केही न्यूनता भेट्टाउने बुद्धि र विद्याको स्थान बर्ता बठ्याइँले काम बनाउने खालको होला। वाणीको लुकाउने वा छल्ने शक्तिद्वारा आफ्नू विद्वत्ताको ठूलो परिचय दिने र विद्याके स्थानमा केही अनधिकार रूपले पनि सफलताको योग पाउनेवाला र विद्यास्थानमा केही दुर्बलता भए पनि ठूलो धैर्यपूर्वक विचार शक्तिद्वारा विद्या स्थानको जरोको दहोभाव प्राप्त गर्ने खालको अतन्त बाठो होला।

कु० नं० २२५

३ १
४ २ १२
५ ११
६रा. ८ १०
७ ९

जुन व्यक्तिको तुलाराशिको राहु लग्नबाट षष्ठ स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा महान् प्रभाव राख्नेवाला, मावली पक्षबाट केही हानि पाउनेवाला, रोगादि अनेक विपत्तिहरूमा विजय भेट्टाउने र आफ्नू स्वार्थपूर्ति गर्नमा निकै तत्परताले काम लिन जान्नेवाला, आफ्नू उन्नतिका लागि महान् गुप्त रीति वा कष्टसाध्य युक्तिहरूले काम सपार्ने र लाभ प्राप्त गर्नेवाला, कस्तै ठूलो संकटमा पनि धैर्य र साहस नत्याग्नेवाला, आफ्नू प्रभावको ठूलो शक्ति भएको, शील र दयाको उल्लंघन गर्ने, चातुर्यको तागतले सावधान रहेर काम सपार्ने खालको होला।

कु० नं० २२६

३ १
४ २ १२
५ ११
६ ८ १०
७रा. ९

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्रीस्थानमा कष्ट सहन सक्ने, भोगादिक पक्ष र इन्द्रिय पक्षमा कष्टको योग परेको, ससुराली पक्षमा केही हानिको योग परेको अनि व्यापारको पक्षमा कष्टसाध्य कर्मको योगले काम चलाउने र धेरै परिश्रम गर्ने भएको अनि आंशिक गुप्त शक्तिको योग बलियो पार्दै व्यापारको बाटोमा प्रयोग गर्ने खालको होला। गृहस्थी भित्र दैनिक कार्यहरूमा अनेक झ्याउलाहरू बटुल्नेवाला, अनि केही कटु युक्तिहरूमा काम सपार्ने खालको र केही भोग प्राप्तिको विशेष इच्छा भएको, केवल आफ्नू स्वार्थपूर्तिमा मात्र लागिरहने खालको अनौठो होला।

कु० नं० २२७

३ १
४ २ १२
५ ११
६ ८रा. १०
७ ९

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आयुस्थानमा ठूला-ठूला संकटपूर्ण आघात सहन सक्ने, पेटभित्र केही उदरविकारले ग्रसित र जीवनको दिनचर्यामा निकै ठूलो मनमा अशान्ति अनुभव गर्ने खालको होला। जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको हानि पाउनेवाला, केही निकै गुप्त तथा केही अनुचित रीतिले महान कष्टहरू र झ्याउलाहरू द्वारा जीवनको आंशिक सहायता शक्ति प्राप्त गर्नेवाला, बढी गहीरो र अपठेरो पर्ने चालहरू विचारिरहनेवाला कहिले काहीं जीवन नै समाप्त गरिदिने खालको कुरा पनि विचार्ने खालको दुःखी होला।

कु० नं० २२८

३ १
४ २ १२
५ ११
६ ८ १०
७ ९रा.

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य स्थानमा केही हानिको योग पाउनेवाला, धर्मको स्थानमा केही न्यूनता वा चूकहरूको योग पाउनेवाला, अनि भाग्यको उन्नतिका लागि निकै चिन्तित रहने खालको होला। यश प्राप्तिको बाटोमा अपठेरो वा न्यूनता पाउनेवाला, ईश्वरको प्रति विश्वासमा केही कमी पाउनेवाला, भाग्योन्नतिको लागि गहीरो युक्तिहरूलाई राम्रो स्थिरताका साथ काममा ल्याउने खालको एवं भाग्यको वृद्धिको लागि कठोर परिश्रम गरेर तथा धर्म र अधर्मको वास्ता नगरेर विशेष चाख मानेर उन्नतिमा लागि रहनेवाला तथा आडम्बरयुक्त सज्जनताको काइदाले लाभ प्राप्त गर्ने होला।

कु० नं० २२९

३ १
४ २ १२
५ ११
६ ८ १० रा.
७ ९

जुन व्यक्तिको कुम्भ राशिका राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही न्यूनता वा असन्तोषको कारण भेट्टाउनेवाला र आफ्नू पदोन्नतिको लागि महान् प्रयत्न वा महान् परिश्रम गर्नेवाला, राज-समाजको कामहरूमा निकै गहीरो युक्तिहरू द्वारा काम सपार्न जान्ने खालको, व्यापार वा कारवारको सम्बन्धमा गुप्त र बलियो योजनाहरू द्वारा ध्यानपूर्वक सबै काम गर्नेवाला, कहिले काहीं मान-प्रतिष्ठाको स्थानमा गहीरो अत्यासको योग पनि प्राप्त गर्नेवाला, अन्त्यमा उन्नतिको कुनै बलियो तहमाथि अधिकार प्राप्त गर्ने खालको होला।

कु० नं० २३०

३ १
४ २ १२
५ ११रा.
६ ८ १०
७ ९

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस लाभ प्राप्तिको स्थानमा ठूलो सफलता पाउनेवाला, कतिपय सीमा नाघेर लाभ पाउनको निम्ति बढी प्रयत्न गर्नेवाला र बढी लाभ प्राप्त गर्न सफल पनि हुनेवाला, आफ्नू धाक जमाएर अनेक कष्टसाध्य उपायहरूले लाभ हुने बाटो पैल्याउले खालको होला। लाभको स्थानमा केही अनधिकार रूपले पनि काम सपार्ने प्रयत्न गर्न अघिसर्ने, लाभ प्राप्तिको स्थानमा केही परिश्रम र झ्याउलाहरू आइलाग्ने खालको योग परेको, लाभको स्थानमा स्वार्थमा गाडिएर काम गर्ने एवं लाभस्थानको ज़रो बलियो पार्नेवाला तथा निकै बाठो होला।

कु० नं० २३१

३ १
४ २ १२ रा.
५ ११
६ ८ १०
७ ९

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस व्ययस्थानमा केही हानि भेट्टाउने र केही झ्याउलोमा पर्ने खालको होला। व्ययस्थानमा निकै ठूलो परिश्रम गर्न सक्नेवाला तथा खर्चको लागि अनेक युक्तिले काम बनाउनेवाला तथा कहिले काहीं खर्चको संचालन स्थानमा महान् संकटहरूको योग पाउनेवाला, अनि बाहिरी अन्य स्थानहरूको सम्पर्कमा बर्ता कष्ट सहनेवाला, एवं बाहिरी स्थानहरूबाट केही अरूचि वा प्रलोभनको योग परेको होला। अनुचित रीतिको व्यवहार पनि गर्नेवाला, अर्काबाट केही कटुउक्तिहरूको भित्री शक्तिबाट काम सपार्ने खालको होला।

कु० नं० २३२

३ १रा.
४ २ १२
५ ११
६ ८ १०
७ ९

# वृष लग्नान्तर - केतुफलम्

जुन व्यक्तिको वृष राशिको केतु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस शरीरमा परेको कष्ट सहनेवाला तथा शरीरमा केही मस्तकको वा कुनै अन्य प्रकारको न्यूनता पाउनेवाला, केही अशान्तिका साथसाथै भित्री हिम्मत-को ठूलो योग पाउनेवाला र निकै ठूलो पुरुषार्थ गर्नेवाला एवं महान दृढताका साथ आफ्नू बाटोमा डटेर अन्धविश्वासको शक्तिले काम बनाउनेवाला र आफ्ना गुप्त सिद्धान्तहरूको सामुन्ने संसारको वास्ता नगर्नेवाला र बहादुरीको काइदाले रहेर गुप्त युक्तिहरूद्वारा स्वार्थसिद्धि गर्नेवाला, अनेक थरिका कष्टहरू सहदै रहेको केहीपछि अन्त्यमा कुनै विशेष बलियो आड पाएर निस्फिक्रि हुने खालको होला।

कु० नं० २३३

३ १ ४ २ के. १२ ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धनस्थान ठूला-ठूला हानि पाउनेवाला र कुटुम्ब भित्र आफ्नू वृद्धावस्थाको र लालन-पालन गर्नेहरूको न्यूनता र असन्तोष पाउनेवाला, अनि धनको अभावको कारणले गर्दा ठूला-ठूला अशान्ति, वेदना सहन गर्नेवाला र धनको प्राप्तिका लागि अनुचित कर्म पनि गर्न अघिसर्नेवाला र धनको निम्ति कष्टसाध्य महान परिश्रम गर्नेवाला, धन स्थानको वृद्धिका लागि महान गुप्त र गहीरो चालहरू चल्न जान्नेवाला, धनको सम्बन्धमा अत्यन्त आन्तरिक धैर्यले काम गर्नेवाला, धनस्थानको हानिको सम्बन्धमा मार्मिक आघात सहन सक्ने खालको होला।

कु० नं० २३४

३ के. १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको कर्क राशिको केतु तेस्रो स्थानमा छ भने त्यो मानिस महान् पुरुषार्थ गर्नेवाला, उन्नतिका लागि सकेसम्म परिश्रम गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा सम्बन्ध-विच्छेद पाउनेवाला, अनि आन्तरिक धारणा शक्तिको बलमा ठूला र महान कठिन काम गर्न अघिसर्नेवाला र थकाईले लस्त-पस्त हुनेवाला, महान परिश्रम गर्नेवाला एवं आफ्नू हिम्मत र शक्तिको बलमा महान् दुष्कर र कठिन तथा सांघातिक प्रहार सहनेवाला, किन्तु त्यतिमा पनि साहस नत्याग्नेवाला, उत्तरोत्तर वृद्धि र सफलताका लागि अघि बढ्दै रहने एवं बाठो, बहादुर र परिश्रमी होला।

कु० नं० २३५

३ १ ४के. २ १२ ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको सिंह राशिका केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आमाको स्थानबाट केही हानि पाउने र जन्म-भूमिबाट वियोग पाउनेवाला, भूमि-भवनको पनि केही न्यूनता र क्लेश पाउनेवाला, अनि सुख प्राप्तिको सम्बन्धमा अनेक थरिका हानिहरू या कमी पाउनेवाला र घरेलू वातावरणमा केही अशान्तिको योग पाउनेवाला र सुख-सम्बन्धमा एवं मातृ-सम्बन्धमा कहिले काहीं निकै गहीरो मार्मिक वेदनाहरूको योग प्राप्त गर्नेवाला, सुख प्राप्तिका लागि अनेक साना-ठूला कष्टसाध्य परिश्रम गर्नेवाला, अन्त्यमा धेरै कष्टले सुख-प्राप्तिका साधन पाउनेवाला होला।

कु० नं० २३६

३ १ ४ २ १२ ५के. ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको कन्या राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या अध्ययन गर्न ठूला-ठूला बाधाहरू अनुभव गर्नेवाला, विद्याको परिपूर्णतामा न्यूनता पाउने खालको होला। सम्मुख भएर कुराकानी गर्दा प्रतिपक्षीको सामुन्ने आफूलाई हीन मान्नेवाला, वाणीद्वारा आफ्नू भनाई अथवा मन्तव्य पूर्णरूपेण जाहेर गर्न नसक्नेवाला, सन्तान पक्षमा हानिको योग परेको तथा सन्तानको संरक्षण सम्वर्धनमा केही न्यूनताको अनुभव गर्नेवाला, आफ्नू बुद्धि वा मस्तिष्क भित्र निकै बलियो साहस र शक्ति राख्नेवाला, दिमागी जिद्दी, अत्यास र दृढ संकल्पमा अटल रहेर काम गर्नेवाला, सत्यासत्यको वास्ता नगर्ने र गुप्त विवेकी होला।

कु० नं० २३७

३ १
४ २ १२
५ ११
६के. ८ १०
७ ९

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट षष्ठ स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा ठूलो योग्यताका साथ बहादुरीको परिचय दिने खालको शत्रु तथा विपक्षिहरूमा आफ्नू ठूलो प्रभाव पार्न जान्नेवाला, रोगादि बीमारी र विपत्तीहरूको वास्ता नगर्नेवाला, मावली पक्षबाट आंशिक हानि पाउनेवाला, भित्री धैर्य र गुप्त साहस एवं गुप्त युक्तिहरूद्वारा ठूला-ठूला महान् कार्य गरेर उन्नतिका साथै धन कमाउनेवाला र आफ्नू स्वार्थसिद्धिको स्थानमा निकै दृढता एवं हठवादिता द्वारा आफ्नू काम सपार्न जान्ने खालको तथा शील र सन्तोषको उल्लंघन गर्नेवाला, अनि आफ्नू बाटोमा पर्ने बाधाहरूलाई निवारण गर्न भएजति सबै शक्तिको प्रयोग गर्न जान्ने होला।

कु० नं० २३८

३ १
४ २ १२
५ ११
६ ८ १०
७के. ९

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस पत्नीमा केही हानि पाउनेवाला, गृहस्थीको दैनिक व्यवहारमा ठूलो व्यवधान र कष्ट अनुभव गर्नेवाला, इन्द्रिय सम्बन्धी भोगादि पक्षमा केही न्यूनताको योग परेको तर भोगादि पक्षमा गुप्त रीतिले विशेष शक्तिको उपयोग गर्ने खालको होला। व्यापारको दैनिक व्यवस्थामा केही बढी नै परिश्रम गर्नेवाला, दैनिक व्यापारमा अलि हानि पाउनेवाला, रोजगारको स्थानमा भित्री हिम्मत र आन्तरिक धैर्य द्वारा आफ्नू काम सफल पार्नेवाला र व्यापारको काममा कहिले काहीं निकै भीषण आघात सहिसकेपछि दृढताको योग परेको र साहसी एवं अतिकामी व्यक्ति होला।

कु० नं० २३९

३ १ ४ २ १२ ५ ११ ६ ८के. १० ७ ९

जुन व्यक्तिको धनराशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस जीवनको दिनचर्यामा गुप्त शक्तिको अथवा मस्तीको आनन्द प्राप्त गर्नेवाला, जीवनमा सहायक हुने केही प्रथम र गम्भीर वस्तुको लाभ सित्तैंको काइदाले प्राप्त गर्नेवाला अनि आयुको वृद्धि पाउनेवाला तथा जीवनमा गहीरो लाभ प्राप्त गर्नको लागि महान् आडम्बर युक्त झ्याउलाहरूको काम सहर्ष गर्नेवाला, विदेश आदिको सम्बन्धमा निकै ठूलो दगुरा-दगुर गर्नेवाला, जीवनमा कहिले काहीं ठूलो र गहीरो चिन्ताहरूको योग पाउनेवाला जीवनको महान् प्रभाव भित्र केही न्यूनता अनुभव गर्ने खालको र भित्री दृढताको योग पाउने होला।

कु० नं० २४०

३ १ ४ २ १२ ५ ११ ६ ८ १० ७ ९के.

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य-स्थानमा ठूला-ठूला कष्ट सहन गर्नेवाला र भाग्योदयको सम्बन्धमा अनेक बाधा धेरै थरिका रोकावट पाउने खालको होला। धर्म-कर्मको स्थानमा केही हानि र न्यूनता वा दुर्बलता पाउनेवाला एवं यश-मानमा कमी पाउनेवाला, ईश्वरको विश्वासमा न्यूनता पाउनेवाला तथा तामसी उग्र धर्मको पालन गर्नेवाला, कुनै प्रकारको सिद्धिका लागि हठधर्मीले काम लिनेवाला तथा शील सन्तोषको उल्लंघन गर्ने र भाग्यको वृद्धि गर्नका लागि कठोर परिश्रम गर्न सक्ने र आन्तरिक गुप्त भावना चेष्टाहरूले अन्त्यमा भाग्योदयको योग पाउनेवाला व्यक्ति होला।

कु० नं० २४१

जुन व्यक्तिको कुम्भ राशिका केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही अशान्तिको कारण भेट्टाउनेवाला र पिता स्थानमा केही न्यूनता अनुभव गर्नेवाला तथा उन्नतिका लागि समाजका कामहरूमा केही बाधा परेको अनुभव गर्ने खालको होला। व्यापारको भित्र कठोर परिश्रम गर्न सक्ने तथा मान-उन्नतिको निम्ति गुप्त शक्तिले र गुप्त धैर्यले अनेक काम सपार्नेवाला तथा कहिले काहीं मान-प्रतिष्ठाको स्थानमा महान् संकट भोग्नेवाला, उग्र कर्म गर्नेवाला तथा आफ्नू कार्यक्रममा हठ्वादिताद्वारा काम सिद्ध पार्नेवाला, अन्त्यमा उन्नतिको बलियो आधार प्राप्त गर्नेवाला होला।

कु० नं० २४२

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउनेवाला र लाभ स्थानमा वृद्धि गर्नको लागि महान प्रयत्न र ठूलो परिश्रम गर्नेवाला तथा लाभ प्राप्तिको स्थानमा केही अहंभाव बढेर कतिपय अनुचित र अनधिकार युक्तिहरू द्वारा पनि धनार्जन गर्नेवाला तथा लेन-देन र व्यवहार भित्र आफ्नू स्वार्थको पूर्ति गर्नमा नै सदैव तत्पर रहने खालको होला। अनायास लाभ पाउनेवाला तथा लाभ प्राप्तिको स्थानमा एवं कहिले काहीं लाभ स्थानमा अपठेरो परेको अनुभव गर्ने र राम्रा वस्तुहरूको लाभमा न्यूनता पाउने खालको बाठो होला।

कु० नं० २४३

३ १ ४ २ १२ के. ५ ११ ६ ८ १० ७ ९

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खर्चका स्थानमा ठूला-ठूला झ्याउलाहरू भोग्नेवाला, खर्चको सम्बन्धमा कहिले काहीं भीषण संकट सहने भएको होला। खर्च स्थानमा धेरै ठूलो गुप्त हिम्मत र भित्री युक्तिहरू द्वारा काम सपार्नेवाला, बाहिरी अन्यस्थानको सम्पर्कमा ठूला क्लेश अनुभव गर्ने भएको र बाहिरी सम्बन्धमा केही हानिहरूको योग परेको तथा बाहिरी सम्बन्धमा धेरै ठूलो गुप्त योजनाहरूले काम सपार्नेवाला तथा बाहिरी सम्बन्धहरूमा हठधर्मीद्वारा र वहादुरी साथ काम गर्न जान्ने खालको होला।

कु० नं० २४४

३ १के. ४ २ १२ ५ ११ ६ ८ १० ७ ९

# मिथुन लग्न हुनेहरूको भविष्यका तारीखहरू

सन् १९९७ को वर्षमा गुरू आठौं स्थानमा नीचभावमा चल्नेछन्, त्यसैले गृहस्थी एवं व्यापारादिमा उन्नतिका बाटाहरूमा अनेक थरिका तगाराहरू आइलाग्नन् तापनि तारीख ७/१/९७ को समय राम्रो रहने छ। उन्नतिको बाटो खुल्नेछ। ता० २७/१०/९७ बाट केही कष्ट आइलाग्ला। ता० ३१/१२/९७ सम्म समय प्रायशः सप्रने छैन। यस वर्ष अर्थात १९९७ को सालमा अनेक थरिका अपठेराहरू आइलागे पनि भाग्यको शक्तिले प्रभावमा कमी आउने छैन। आइलागेका झ्याउलाहरू बिस्तार-बिस्तार शान्त हुनेछन्।

कु० नं० २४५

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

सन् १९९८ को वर्षमा ता० २/१/९८ देखि समय केही राम्रो हुँदै जानेछ। ता० २१/१/९८ बाट केही कष्टहरू आउँदै जाँदै रहने छन्। ता० ९/२/९८ देखि राम्रो समय आरम्भ हुनेछ। थालेको काम सफल होला। त्यसपछि ता० १४/५/९८ सम्म बराबर उन्नति र लाभ बनिरहने छ। त्यसपछि खर्चमा वृद्धि हुन थाल्नेछ।ता० १५/६/९८ देखि फेरि समय राम्रो भएर फर्कने छ। सबै तर्फबाट सफलता प्राप्त हुने छ तापनि यस वर्षमा व्यापारादिको उन्नतिको बाटोमा अलि-अलि अपठेराहरू लेआउन छाड्ने छैनन्।

कु० नं० २४६

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

# मिथुन लग्नका उत्तम तारीखहरू

सन् १९९९ को वर्षमा ता० ३१/१/९९ सम्म समय केही दिनका लागि उत्तम रहने छ। ता० १४/१/९९ देखि केही कष्ट आइलाग्ला। ता० २/२/९९ देखि भाग्य सप्रदै जानेछ। ता० १३/५/९९ देखि दुःख-कष्ट बढ्दै जाला, खर्च धेरै आय थोरै होला। ता० १६/६/९९ बाट समय राम्रो बन्दै जानेछ। ता० ३०/६/९९ बाट धनको पक्षमा केही न्यूनता आउला। मान-प्रभाव बढ्ते जाला। ता० १९/८/९९ दोखि साहस-शक्ति र प्रभाव-शक्ति बढ्ला, त्यसपछि पनि कष्टले छाड्ने छैन। ता० २०/२/९९ देखि ता० ३१/१२/९९ सम्ममा गृहस्थी एवं व्यापारमा सफलता प्राप्त होला।

कु० नं० २४७

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०

सन् २००० को वर्षमा ता० ६/१/२००० बाट आंशिक कष्ट रहला ता० १२/३/२००० देखि भाग्य र धनलाभ राम्रो रहने छ। ता० १/५/२००० बाट केही झ्याउलाहरू आइलाग्नन् खर्च बढी होला। ता० ७/७/२००० बाट मान र प्रभाव एवं सुख-शान्ति आउला। ता० २६/८/२००० बाट धनको सफलता मिल्ला। तर यस वर्षमा गुरू बाह्रौं रहने छन्, त्यसैले उन्नतिमा बाधा र खर्च बढी हुन सक्तछ। ता० २२/११/२००० बाट केही दुःख-कष्ट आइलाग्लान्। ता०१०/१२/२००० देखि ता० ३०/१२/२००० सम्ममा गृहस्थी र व्यापारमा सुख-शान्ति र धनागम होला।

कु० नं० २४८

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०

# मिथुन लग्न हुनेहरूका लागि उत्तम तारीखहरू

सन् २००१ को वर्षमा ता० १/१/२००१ बाट मान-सम्मान र प्रभाव बढ्ने छ, व्यय केही बढी रहने छ। ता० २२/३/२००१ देखि आय-व्यय दुवै समान चल्नेछन् र केही घेर-थोर पनि चलिनै रहने छ। ता० ६/७/२००१ बाट समय उत्तम र प्रभावशाली तथा सफलता युक्त रहने छ। ता० १८/१०/२००१ देखि अगाडि सन्तान पक्षबाट असन्तोष र कष्ट रहने छ। ता० १६/१२/२००१ बाट ता० ३१/१२/२००१ सम्ममा समय एकदम सामान्य र लाभदायक चलिरहने छ तापनि मानसिक कष्टले छाड्ने छैन।

कु० नं० २४९

४ ३ २ ५ १ ६ १२ ७ ९ ११ ८ १०

सन् २००२ को वर्षमा ता० ८/१/२००२ देखि आफ्नू व्यापार र गृहस्थीको काममा सफलता, शक्ति साहस र सुख बनिरहने छ। ता० १४/४/२००२ देखि केही लाभको अधिकता देकिएला। ता० २४/५/२००२ देखि समय हानिकारक र बढी व्यय गराउने होला। ता० १५/६/२००२ बाट मान-प्रभाव बढ्दै जाला तथा रहने छ। ता० ५/९/२००२ देखि समय सप्रन्दै जाला। ता० २४/१०/२००२ देखि केही कष्ट रहने छ। ता० १५/१२/२००२ दोखि ३१/१२/२००२ मा समय सप्रला।

कु० नं० २५०

४ ३ २ ५ १ ६ १२ ७ ९ ११ ८ १०

# मिथुन लग्न हुनेहरूको उत्तम तारीख

सन् २००३ को वर्षमा ता० १/१/२००३ बाट गृहस्थी र व्यापारमा सुख एवं सफलता प्राप्त होला। ता० १४/१/२००३ बाट आंशिक कष्ट र झ्याउलाहरू आइलाग्नन्। ता० १३/२/२००३ देखि भाग्य सप्रन थाल्ने छ। ता० १४/४/२००३ देखि धनको पक्षमा हानि-लाभ दुवै समान चल्नेछन्। ता० १५/५/२००३ बाट समय केही हानिकारक र बढी व्यय गराउने खालको रहला। ता० १५/६/२००३ देखि घर-गृहस्थी र व्यापारमा इच्छित सफलताहरू प्राप्त हुने छन्।

कु० नं० २५१

| | | | |
|---|---|---|---|
| | ४ | | २ |
| ५ | | ३ | १ |
| | ६ | | १२ |
| ७ | | ९ | ११ |
| | ८ | | १० |

सन् २००४ को वर्षमा ता० १/१/२००४ बाट गार्हस्थ्य जीवनमा कहल भए पनि व्यापारमा सफलता मिल्नेछ। ता० १४/१/२००४ बाट दुर्भाग्य र शारीरिक कष्ट बढ्नेछ। ता० ८/२/२००४ बाट भाग्य सप्रने छ र व्यापारमा उन्नति हुनेछ। ता० २३/४/२००४ बाट मान-सम्मान र धनागम भइरहला। ता० २५/६/२००४ बाट समय विपरीत रहने छ र धनहानि होला। ता० ८/८/२००४ बाट धनको पक्ष दुर्बल रहने छ। स्वजन विरोधी हुनन्। ता० १६/१२/२००४ बाट व्यापार र गृहस्थीमा सुख-शान्ति रहने छ।

कु० नं० २५२

| | | | |
|---|---|---|---|
| | ४ | | २ |
| ५ | | ३ | १ |
| | ६ | | १२ |
| ७ | | ९ | ११ |
| | ८ | | १० |

# मिथुन लग्न हुनेहरूको लागि उत्तम तारीख

सन् २००५ को वर्षमा ता० १/१/'०५ बाट व्यापार तथा गृहस्थीमा सुख-शान्ति रहला। ता० १४/१/'०५ देखि केही कष्ट र झ्याउलो आइलाग्ला। ता० ११/३/'०५ देखि भाग्य सप्रन्दै जानेछ र धनागम होला। ता० २९/३/'०५ बाट फेरि समय विपरीत चल्नेछ, धन-हानि होला। ता० ७/७/'०५ देखि समय सुखदायक रहला, मान-सम्मान बढ्दै जाला। ता० १८/१०/'०५ देखि व्यय बढी र मस्तिष्कमा थरि-थरिका विपरीत विचार आएर कष्ट दिनन्। ता० १६/१२/'०५ देखि ता० ३१/१२/'०५ सम्म व्यापारमा लाभ, गृहस्थीमा सुख-शान्ति, सम्मान बढ्ला र सफलता-शक्ति प्राप्त होला।

कु० नं० २५३

सन् २००६ को वर्षमा ता० १/१/२००६ के बाट केही कष्ट बढ्ने छ। ता० ४/३/'०६ बाट केही कष्टदायक समय रहला। ता० ३०/६/'०६ बाट केही सुखका साधन जोरिनन्। धनागम होला। ता० ३१/८/'०६ बाट धनको पक्ष अलिकति कमजोर र हानिकारक रहने छ। मन पनि अशान्त रहला। ता० २४/१०/'०६ बाट पनि घरमा अशान्ति रहला। चित्त खिन्न र रोगले पीडा देला। ता० १/१२/'०६ बाट ता० २५/१२/'०६ सम्म घर-गृहस्थी र सुख शान्ति एवं व्यापारमा उन्नति हुनेछ।

कु० नं० २५४

# मिथुन लग्न हुनेहरूको प्रतिकूल समय ज्ञान

(सदैव समयको निम्ति)

कु० नं० २५५

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०

तल लेखिएका ग्रहहरू जब-जब ती राशिहरूमा आउने छन्- तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा समय विपरीत अर्थात प्रतिकूल रहने छ।

सू०- वृष, तुला, र मकर।
चं०- वृष, वृश्चिक र मकर।
मं०- वृष, कर्क र वृश्चिक।
बु०- वृष, वृश्चिक, मकर र मीन।
गु०- वृष, वृश्चिक र मकर।
शु०- वृष, मकर र मेष।
रा०- कर्क, कन्या, धन, मकर र मीन।
के०- मिथुन, कर्क, कन्या र मकर।

*नोट-* उपरोक्त ग्रहहरूबाट वार्षिक फलादेश जान्नका लागि- शनि, गुरू, राहु र केतु-यी चार ग्रहहरूबाट हेरे जाति हुन्छ। मासिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेरे उत्तम हुन्छ। जब-जब कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो ग्रह केही न्यून र दुर्बल फल दिन्छ।

# मिथुन लग्न हुनेहरूको अनुकूल समय ज्ञान

कु० नं० २५६

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०

(सदैव समयको निम्ति)

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चागंमा देखापर्छन् वा आउँछन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा लाभप्रद र सुखदायक समय रहने छ र स्वास्थ्य ठीक रहला।

सू०- मिथुन, कर्क, सिंह, कन्या, वृश्चिक, धन, कुम्भ, मीन र मेष।
चं०- मिथुन, कर्क, सिंह, कन्या, तुला, धन, कुम्भ, मीन र मेष।
मं०- मिथुन, सिंह, कन्या, तुला, धन, मकर, कुम्भ, मीन र मेष।
बु०- मिथुन, कर्क, सिंह, कन्या, तुला, कुम्भ र मेष।
गु०- मिथुन, कर्क, सिंह कन्या, तुला, धन, कुम्भ, मीन र मेष।
शु०- मिथुन, कर्क, सिंह, कन्या, तुला, वृश्चिक, धन, कुम्भ र मीन।
रा०- मिथुन, सिंह, तुला, वृश्चिक, कुम्भ, मेष र वृष।
के०- सिंह, वृश्चिक, धन, कुम्भ, मेष र वृष।

*नोट-* वार्षिक फलादेप निकाल्न वा जान्नका लागि–शनि, गुरू, राहु र केतु– यी चार ग्रहबाट हेर्नु अत्यावश्यक हुन्छ। मासिक फलादेशको ज्ञान गर्नका लागि सूर्य, बुध, शुक्र, मंगल-यी चार ग्रहबाट हेरे उत्तम हुन्छ। दैनिक फलादेश जान्नका लागि-चन्द्रमाबाट हेर्न थाल्नुपर्दछ र भिन्न-भिन्न विषयको पूरा-पूरा ज्ञान गर्नका लागि 'अखण्ड भाग्योदय दर्पण' नामक पुस्तकको अवलोकन गरे यथार्थ ज्ञान हुनेछ।

# मिथुन लग्नान्तर-सूर्यफलम्

जुन व्यक्तिको मिथुन राशिका सूर्य लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभावशाली होला र दाजु-भाई दिदी-बहिनीबाट शक्ति पाउनेवाला, बल-पुरुषार्थको महान् आदर्श शक्ति भएको एवं स्त्री स्थानमा महान् शक्ति र प्रभावको प्रयोग गरेर आफ्नू बिग्रिसकेको काम सपार्न जान्नेवाला, दैनिक व्यापारबाट प्रभावशाली परिश्रमद्वारा ठूलो उन्नति गर्न सक्नेवाला तथा शरीरमा आकर्षक तेज प्राप्त गर्नेवाला, धेरै ठूलो हिम्मत र साहसको योग पाउनेवाला, आफ्नू पुरुषार्थ शक्तिको बलले इन्द्रिय भोगादिको शक्तिमा वृद्धि पाउनेवाला र अदम्य उत्साही होला।

कु० नं० २५७

४ २
५ ३सू. १
६ १२
७ ९ ११
८ १०

कु० नं० २५८

४सू. २
५ ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कर्क राशिका सूर्य लग्नबाट द्विदीय स्थानमा छ भने त्यो मानिस धनको वृद्धिका लागि निकै ठूलो परिश्रम गर्ने होला र धनको सम्बन्धमा नै बल-पुरुषार्थको बन्धनको योग पाउनेवाला तथा दाजू-भाई दिदी-बहिनीको सम्बन्धमा बन्धन अथवा केही भित्री दुर्भावनाको योग परेको अनुभव गर्नेवाला र आंशिक प्रभाव पाउनेवाला एवं आफ्नू शक्ति अनुसार आफ्नू जीवनको दिनचर्यामा केही न्यूनता र हलुकोपना अनुभव गर्नेवाला, जीवनमा सहायक हुने केही पहिलो तथा गम्भीर वस्तुको कमी अनुभव गर्नेवाला, कुटुम्बमा केही प्रभाव पाउनेवाला, आर्थिक उन्नति आफ्नै बलको सफलता मात्रै होला।

जुन व्यक्तिको सिंह राशिका सूर्य लग्नबाट तृतीया स्थानमा छ भने त्यो मानिस बाहुबलको महान शक्ति राख्नेवाला र ठूलो पुरुषार्थ गर्ने, बर्ता प्रभावशाली, दाजू-भाई दिदी-बहिनीको स्थानमा गौरव प्राप्त गर्नेवाला एवं आफूभित्र प्रचण्ड शक्तिको योग पाउनेवाला, धर्म स्थानलाई न्यून ठान्नेवाला, आफ्नू पराक्रम र शक्तिको सामुन्ने भाग्य शक्तिलाई तुच्छ ठान्नेवाला, ईश्वरमा अविश्वास मान्नेवाला, धेरै ठूलो र कठिन काम गर्न पनि निरूत्साह नहुने र प्रसस्त उत्साह भएको तथा सुयशको कमी पाउनेवाला होला।

कु० नं० २५९

४ २
५सू. ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कन्या राशिका सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस दाजू-भाई दिदी-बहिनीको सुख पाउनेवाला र भूमि-भवनको शक्ति प्राप्त गर्नेवाला, सुखपूर्वक परिश्रम गरेर उन्नति पाउनेवाला तथा मातृ-स्थानबाट प्रभाव पाउनेवाला, तथा पिता-स्थानको इज्जत गर्नेवाला, एवं पितास्थानबाट शक्ति पाउनेवाला, राज-समाजमा मान-सम्मान पाउनेवाला, व्यापार आदिको स्थानबाट ठूलो शक्ति र प्रभाव पाउनेवाला, महान गम्भीर प्रभाव-शक्तिले काम गर्नेवाला,सुख शान्ति र गौरवको वृद्धि गर्नेवाला, गम्भीर र साहस एवं ठूलो हिम्मत भएको होला।

कु० नं० २६०

४ २
५ ३ १
६सू. १२
७ ९ ११
८ १०

जुन व्यक्तिको तुला राशिका सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्याको स्थानमा न्यूनताको योग परेको र विद्या ग्रहण गर्ने वेलामा असमर्थताको योग परेको, सन्तानको सम्बन्धमा केही व्याकुलताको योग पाउनेवाला, सन्तान पक्षबाट हानि पाउनेवाला, दिमाग भित्र केही दुर्बलता र अशान्तिको अनुभव गर्ने खालको होला। लाभस्थानको वृद्धि गर्नका लागि बढी दिमाग माथि र वाणीद्वारा अनुचित बल प्रयोग गर्नेवाला, गलत काम गरेर बुद्धि थाकेको अनुभव गर्नेवाला एवं बुद्धिको गुप्त शक्तिद्वारा बढी नाफा प्राप्त गर्नेवाला र दाजू-भाई दिदी-बहिनी र पुरुषार्थको सम्बन्धमा केही न्यूनता पाउनेवाला होला।

कु० नं० २६१

४ २
५ ३ १
६ १२
७सू. ९ ११
८ १०

जुन व्यक्तिको वृश्चिक राशिका सूर्य लग्नबाट षष्ठ स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थद्वारा महान प्रभावशाली परिश्रम गर्नेवाला र परिश्रमकै योगले महान शक्ति पाउनेवाला र दाजू-भाई दिदी-बहिनीको स्थानबाट बर्ता प्रभाव र केही वैमनस्यता प्राप्त गर्नेवाला, शत्रु स्थानमा ठूलो प्रभाव र गौरव पाउने वाला, मावली पक्षमा ठूलो प्रभाव राख्ने वाला एवं कष्ट र विपत्तिलाई साधारण वस्तु ठान्नेवाला, खर्चको स्थानमा केही अपठेरो अनुभव गर्नेवाला, अन्य स्थानहरूको सम्पर्कमा केही अरूचि मान्नेवाला र केही परतन्त्रतायुक्त कार्य गर्ने खालको होला।

कु० नं० २६२

४ २
५ ३ १
६ १२
७ ९ ११
८सू. १०

जुन व्यक्तिको धनु राशिका सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा ठूलो प्रभाव पाउनेवाला, विवाहपछि आफ्नू शक्तिको विकास पाउनेवाला र दैनिक व्यापारमा प्रभावशाली कर्मद्वारा ठूलो उन्नति र प्रभाव पाउनेवाला, इन्द्रिय भोगादिकको महान् शक्ति प्राप्त गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको शक्ति पाउनेवाला, लौकिक कार्यहरूमा ठूलो उत्साह एवं प्रभावले काम गर्नेवाला, गृहस्थी सम्बन्धी अनेक कार्यहरूलाई आफ्नू बाहुबलले सफल तुल्याएर प्रसन्न हुनेवाला, समाजमा आफ्नू साहस र परिश्रमले मान-सम्मान एवं प्रभावको शक्ति पाउनेवाला होला।

कु० नं० २६३

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू पुरूषार्थको बलमा केही न्यूनता अनुभव गर्ने र दाजू-भाई दिदी-बहिनीको स्थानमा केही कमी र केही हानि पाउनेवाला, महान परिश्रमी र कष्ट साध्य कर्ममा अधिसर्ने तथा जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको शक्तिबाट लाभ निकै अत्यास र कष्टले प्राप्त गर्नेवाला, धन स्थानको वृद्धि गर्नका लागि महान् प्रयत्न तथा गुप्त शक्तिले काम सपार्नेवाला, उत्साहमा केही दुर्बलता पाउनेवाला, दैनिक जीवनको दिनचर्यामा केही झ्याउलो र कष्ट एवं केही शक्ति प्राप्त गर्ने खालको साहसी होला।

कु० नं० २६४

जुन व्यक्तिको कुम्भ राशिका सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यस्थानको केही शक्तिको आड-भर लिएर पुरुषार्थ र उन्नति गर्नेवाला, परिश्रमको सफलता प्राप्तिको भित्र केही न्यूनता अनुभव गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको शक्ति प्राप्त गर्नेवाला एवं भाग्यको स्थानमा केही सौन्दर्यको कमी पाउनेवाला, तथा भाग्य र पुरुषार्थको दुवै शक्तिलाई मानेर तथा दैवीशक्तिहरूमा विश्वास गर्नेवाला, साहस र हिम्मत भएको, सम्मान र यश कमाउनेवाला, परिश्रमको सफलताको कारणले प्रभाव प्राप्त गर्नेवाला र केही हठधर्मीद्वारा काम बनाउने खालको होला।

कु० नं० २६५

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ सू. ८ १०

जुन व्यक्तिको मीन-राशिका सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थ शक्तिको बलले निकै ठूलो उन्नति गर्ला, पिता स्थानबाट शक्ति पाउनेवाला, दाजू-भाई दिदी-बहिनीबाट सहयोग सम्बन्ध पाउनेवाला, राज-समाजको स्थानबाट उन्नति र मान-सम्मान पाउनेवाला, आफ्नू परिश्रमको सफलतामा गौरव र साहसको शक्ति प्राप्त गर्नेवाला एवं आफ्नू शक्ति र व्यापारको बलले सुख स्थानमा वृद्धि प्राप्त गर्नेवाला एवं केही भूमि-भवन आदिको शक्ति पाउनेवाला, आफ्नू इज्जत र सम्मानको स्थानमा केही प्रभुत्व मान्नेवाला, निकै ठूला-ठूला काम गर्ने र साहसी होला।

कु० नं० २६६

४ २ ५ ३ १ ६ १२सू. ७ ९ ११ ८ १०

जुन व्यक्तिको मेष राशिका सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थ र बलको शक्तिले महान लाभ प्राप्त गर्नेवाला तथा

कु० नं० २६७

४ २
५ ३ १सू.
६ १२
७ ९ ११
८ १०

धन कमाउनेवाला, दाजू-भाई दिदी-बहिनीबाट निकैलाभ पाउनेवाला, बल-पुरुषार्थको ठूलो बुद्धि आर्जन गर्नेवाला, महान साहसको शक्तिबाट लाभ कमाउनेवाला, विद्यास्थानमा केही न्यूनता पाउनेवाला, सन्तान पक्षबाट असहयोग पाउनेवाला, आफ्नू शक्तिको अभिमानमा केही कुरा-कानी गर्दा अलिकति अनुचित र कठोर शब्द प्रयोग गर्नेवाला, आफ्नू सफलताको महान लाभोत्साह प्राप्त गर्ने र कसैको पनि वास्ता नगर्ने खालको होला।

जुन व्यक्तिको वृष राषिका सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थमा हानि वा न्यूनता पाउनेवाला, दाजू-भाई

कु० नं० २६८

४ २सू.
५ ३ १
६ १२
७ ९ ११
८ १०

दिदी-बहिनीको केही हानि र वियोग पाउनेवाला, बढी धन व्यय गर्ने एवं खर्चले गर्दा मनमा केही अशान्ति अनुभव गर्नेवाला, अन्य स्थान- हरूको सम्बन्धमा केही अरुचि सहित शक्ति प्राप्त गर्नेवाला होला। शत्रु स्थानमा ठूलो प्रभाव राख्ने प्रयत्न गरिरहनेवाला एवं परिश्रम गर्ने मौकामा अल्छी भानेर बसिरहनेवाला, आफ्नू मिहिनेत र पुरुषार्थमा थोरै भरोसा राख्नेवाला, अन्य स्थानको सम्बन्धमा प्रभाव जमाउनेवाला, रोगादिक अनेक झ्याउलाहरूको वास्ता नराख्नेवाला र गुप्त हिम्मत वा साहस भएको होला।

# मिथुन लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको मिथुन राशिका चन्द्रमा लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस शारीरिक बलले धन कमाउने र देहमा सौन्दर्य भए पनि त्यसमा केही बन्धन अनुभव गर्नेवाला एवं कुटुम्ब स्थानको राम्रो शक्ति प्राप्त गर्नेवाला, स्त्री स्थानमा धनको शक्तिद्वारा सौन्दर्य प्राप्त गर्नेवाला, धनको शक्तिले नै दैनिक व्यापारको बाटोमा सफलता पाउनेवाला, शरीरमा कुर्ने बहुमूल्य वस्तु वा रत्न धारण गर्नेवाला, स्त्री भोगादि पक्षमा अलि बर्ता चाख मान्नेवाला, देह द्वारा सम्मान वा इज्जत भेट्नेवाला, ससुरालीमा विशेष इज्जत पाउनेवाला, तन-मनले धनको नै चिन्तन गरिरहने खालको र आफ्नू धनको प्रचार गर्ने र स्थिर मनको होला।

कु० नं० २६९

४ २ ५ ३चं. १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको कर्क राशिका चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धनको शक्ति पाउनेवाला, तथा धनस्थानका स्थिरताको योग परेको होला। कुटुम्ब स्थानमा बुद्धिको योग पाउनेवाला एवं धनको चिरस्थायी तागतको वृद्धि गर्नमा नै बराबर मन लगाउनेवाला र जीवनको दिनचर्यामा धनको शक्तिमा र सुखको विषयमा नीरसताको योग पनि अनुभव गर्नेवाला एवं दैनिक दिनचर्यामा आंशिक बन्धन अनुभव गर्नेवाला र जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ केही गाह्रो माने झैं गरेर स्वीकार गर्नेवाला, धनीमा गनिने र इज्जतदार होला।

कु० नं० २७०

४चं. २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको सिंहराशिको चन्द्रमा तृतीय स्थानमा छ भने त्यो मानिस निकै मूल्यवान परिश्रम गर्नेवाला, आफ्नै बाहुबलले धेरै धन कमाउनेवाला, दाजू-भाई र दिदी-बहिनीको प्रभावको स्थानमा केही अपठेरो वा बन्धनको योग पनि पाउनेवाला र कुटुम्बको तर्फबाट शक्ति र शोभा प्राप्त गर्नेवाला तथा धन कमाउने कारणहरूले केही बन्धनयुक्त रहेर धेरै परिश्रम गर्नेवाला एवं भाग्यको स्थानमा आंशिक वृद्धि पाउनेवाला तथा धनसित सम्बन्धित कारणहरूले भाग्यमा केही न्यूनता पाउनेवाला र धनको तागतले धर्मको पालन अलि अरूचि राखेर गर्नेवाला, ठूलो उन्नति गर्ने मन भएको तथा यश कमाउने र निकै साहसी होला।

कु० नं० २७१

४ २
५चं. ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कन्या राशिका चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भूमिबाट धेरै शक्ति पाउनेवाला, एवं आमाको स्थानमा केही सौन्दर्ययुक्त बन्धन अनुभव गर्नेवाला र धनले नै मान-प्रतिष्ठा प्राप्त गर्नेवाला र धनले नै व्यापारादिमा सफलता प्राप्त गर्नेवाला, राज-समाजमा सम्मान पाउने र उन्नति गर्ने तथा मन भित्र महान् धैर्यरू पी शक्ति र शान्ति प्राप्त गर्नेवाला, सुख प्राप्तिका साधनहरू र वस्तुहरूको वृद्धि पाउनेवाला, कुटुम्ब स्थानबाट महान सुख प्राप्त गर्नेवाला, उन्नतिको बाटोमा महान् शक्ति युक्त मनोयोगले काम गरेर सफलता पाउने खालको साहसी होला।

कु० नं० २७२

४ २
५ ३ १
६चं. १२
७ ९ ११
८ १०

जुन व्यक्तिको तुलाराशिका चन्द्रमा पाँचौं स्थानमा छ भने त्यो मानिस मनोबलको गम्भीर शक्तिले विद्या ग्रहण गर्ने र सन्तान पक्षबाट वृद्धि

कु० नं० २७३

४　२
५　३　१
६　१२
७चं.　९　११
८　१०

पाउनेवाला, निकै गम्भीर र बहुमूल्य कुरा विचार गर्ने र बोल्ने वाला। धेरै धन कमाउन ठूला-ठूला युक्ति झिक्न जान्नेवाला, सन्तान पक्षबाट पनि धनको लाभ भेट्टाउने खालको होला। धनकै तागतले पनि धन कमाउनेवाला, पाएको धन वृद्धि गर्नको लागि प्रयत्न गर्न जान्ने र दिमाग भित्र केही बन्धन झैं अनुभव गर्ने र धनी हुँ भन्ने प्रचार गर्ने बाठो व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिका चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धनको तर्फबाट महान अशान्तिको योग पाउनेवाला र

कु० नं० २७४

४　२
५　३　१
६　१२
७　९　११
८चं.　१०

कुटुम्बबाट हानि पाउनेवाला तथा धनद्वारा नै व्यापार आदिमा सफलता पाउनेवाला, राज-समाजमा सम्मान र उन्नति गर्ने तथा मनभित्र ठूलो धैर्यको शक्ति प्राप्त गर्ने खालको होला। सुख प्राप्तिका साधन-हरूको र वस्तुहरूको वृद्धि पाउनेवाला, कुटुम्बस्थानमा सुख प्राप्त गर्नेवाला, उन्नतिको बाटोमा कठोर परिश्रम गर्नेवाला, मनमा सदैव खिन्न रहने र गुप्त भन्दा पनि गुप्त चालाले लाभ उठाउन जान्ने व्यक्ति होला।

जुन व्यक्तिको धन राशिका चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारबाट खूब धन कमाउने खालको होला। आफ्नू

कु० नं० २७५

४ २ ५ ३ १ ६ १२ ७ ९चं ११ ८ १०

व्यापार भित्र नै मनोयोगको प्रभावी शक्तिले अपार धनराशि र सफलता प्राप्त गर्नेवाला, समाजमा सम्मान प्राप्त गर्नेवाला, स्त्री स्थानमा ठूलो महानता तथा केही बन्धन अथवा सुन्दरताको योग पाउनेवाला, आफू पनि शरीर-स्वास्थ्यले राम्रो होला। इन्द्रिय भोगादिको सम्बन्धमा-मनभित्र महान् इच्छा राख्ने भए पनि केही बन्धनका साथै उत्तम सुख-शान्ति पाउनेवाला, गृहस्थी भित्र धन र कुटुम्बको आनन्द पाउनेवाला, लौकिक कामहरूमा महानता पाउने र प्रसन्नचित्त होला।

जुन व्यक्तिको मकर राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धनको हानि र दुर्बलता पाउनेवाला, मनोयोगको महान कष्ट

कु० नं० २७६

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०चं.

साध्य गूढ परिश्रमद्वारा धनको शक्ति प्राप्त गर्नेवाला, कुटुम्बको पनि हानि पाउनेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीरताको लाभ पाउनेवाला, जीवनको दिनचर्यामा निकै धनीको झैं रहन-सहन पाउनेवाला, निकै गहीरो र गुप्त चाल-हरूले धनको इज्जत बनाउनेवाला, आयुस्थानमा केही बन्धन पाए पनि धनको वृद्धि पाइरहनेवाला, मनभित्र अत्यन्त गहीरो र लामो-लामो विचारहरूले आफ्नू काम सफल तुल्याउने खालको होला।

जुन व्यक्तिको कुम्भ राशिका चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको बलले र कुनै शुभ मार्गको तागतले धनको शक्ति प्राप्त गर्नेवाला, तथा धनको तर्फबाट सन्तोषमा केही न्यूनता पाउनेवाला, मान-यश कमाउनेवाला, धर्ममा आस्था भएको र धनको वृद्धिका लागि धर्म सम्बन्धी केही दैवी उपाय पनि गर्नेवाला र मन भित्र धर्म र धन दुबैको अपार इच्छा गर्नेवाला, अनि दाजू-भाई दिदी-बहिनीको इज्जत गर्नेवाला, तथा पुरूषार्थको शक्तिबाट लाभ प्राप्त गर्नेवाला, ठूलो भाग्यमानीहरूमा जनिने वाला, ईश्वरमा विश्वास राख्ने र मान पाउने एवं कुटुम्ब धेरै भएको इज्जतदार होला।

कु० नं० २७७

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानबाट धनको शक्ति प्राप्त गर्नेवाला, ठूलो व्यापारबाट मनोयोगले काम गरेर धेरै धन कमाउनेवाला, मनभित्र धेरै ठूलो उन्नति प्राप्त गर्ने इच्छा राख्ने भएको होला। कुटुम्ब र धनको शक्तिको वैभव प्राप्त गर्नेवाला, धनको बलले नै सुखका साधन-हरूको ठूलो चमत्कार प्राप्त गर्नेवाला, केही भूमि-भवन आदिको पनि शक्ति पाउनेवाला र मनमा हुकुम चलाउने ठूलो विचार राख्ने खालको होला। धेरै ठूला-ठूला अमूल्य कामहरू गर्नेवाला र उन्नतिको बाटोमा केही बन्धन आइलागे जस्तो अनुभव गर्ने खालको होला।

कु० नं० २७८

जुन व्यक्तिको मेष राशिका चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यस मानिसको मनोबल उच्च हुनाले त्यसैको शक्तिद्वारा प्रसस्त धन उपार्जन

कु० नं० २७९

४ २
५ ३ १चं.
६ १२
७ ९ ११
८ १०

गर्ने होला। ठूला-ठूला बहुमूल्य लाभ र राम्रा-राम्रा दिव्य पदार्थ प्राप्त गर्नेवाला, मन भित्र सधैं केवल धनलाई विशेष महत्व दिने खालको र विद्यामा उन्नति गर्नेवाला, बुद्धिमा चमत्कार पाउने वाला, मन भित्र निकै ठूलो उत्साह र उंमग राख्नेवाला, कुटुम्बको लाभ र सन्तान लाभ पनि पाउनेवाला, बोल-चालमा कहिले काहीं निकै गम्भीर कुरा बोल्नेवाला र बढी नाफा खाने खालको, अनि धनको तागतले पनि धनको बृद्धि गर्न जान्ने किसिमको होला। लाभको स्थानमा शान्त भावले आफ्नू काम बनाउने खालको होला।

जुन व्यक्तिको वृषराशिका चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने खालको होला। अन्य स्थानहरूको बाहिरी

कु० नं० २८०

४ २चं.
५ ३ १
६ १२
७ ९ ११
८ १०

सम्पर्कबाट मनोयोग द्वारा खूब धन कमाउनेवाला र कुटुम्ब स्थानमा हानि पाउनेवाला, धेरै बर्ता खर्च गर्नाले आफ्नू मनमा महानता 'म ठूलो' भन्ने अभिमान गर्नेवाला, मावली पक्षमा केही न्यूनता र केही उदासीनता राख्नेवाला,साना व्यक्तिसित झन सानो बनेर चाल चल्नेवाला, अन्य बाहिरी स्थानहरूबाट मनमा प्रसन्न रहने खालको होला। अन्यान्य बाहिरी स्थानहरूमा मेल-मिलाप राख्नेवाला तथा खर्च स्थानमा केही बाधा उपस्थित पार्ने चेष्टा भएको व्यक्ति होला।

# मिथुन लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको मिथुन राशिको मंगल लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू शारीरिक परिश्रमद्वारा लाभ कमाउनेवाला, गहीरो र महान् अपठेरा चालहरूबाट निकै ठूलो लाभ भेट्टाउने वाला, जीवनलाई सहायक हुने खालको पहिलो तथा गम्भीर वस्तुको बढी लाभ पाउनेवाला, आयु स्थानको वृद्धि पाउने र जीवनको दिनचर्यामा मगन मस्त वा अलमस्त रहने योग परेको होला। शरीरमा केही रोग र क्षीणता पाउनेवाला, अनि मातृस्थानमा केही अशान्तिको योग परेको होला। सुख-शान्तिमा केही बाधा पाउनेवाला, शत्रु स्थानमा प्रभाव राख्न जान्नेवाला, स्त्री स्थानमा केही वैमनस्यता पाउने र बाठो एवं रूखो स्वभावको होला।

कु० नं० २८१

४ २
५ ३मं. १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानको संग्रह शक्तिमा ठूलो हानि पाउनेवाला र कुटुम्ब स्थानमा पनि हानिनै भेट्टाउनेवाला, तथा मावली पक्षको पनि दुर्बलता पाउनेवाला, अनि धन प्राप्त गर्नको लागि बढी संकीर्ण एवं बन्धन-युक्त परिश्रम गर्नेवाला, निकै गुप्त चालहरूले गुप्त लाभ पाउनेवाला, सन्तान पक्षमा क्लेश सहने खालको होला। धर्मको स्थानमा केही हानि र वैमनस्यता राख्ने खालको एवं भाग्य स्थानमा केही दुर्बलता र अनेक थरिका बाधाहरू पाउने भएको तथा शत्रुपक्षबाट हानि पाउनेवाला, जीवनमा यश कमाउने र प्रभावशाली व्यक्ति होला।

कु० नं० २८२

४मं. २
५ ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको सिंह राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थको शक्तिले ठूलो कीर्ति कमाउनेवाला, शत्रुस्थानमा निकै ठूलो प्रभाव जमाउनेवाला एवं मावली पक्षबाट धेरै बढी धन बल पाउनेवाला, आफ्नू महान् परिश्रम र प्रभावले खूब ऐश्वर्य कमाउनेवाला, केही मुद्दा र झ्याउलो आदिबाट पनि बढी लाभ पाउनेवाला, निकै अभिमान भएको र दाजु-भाई दिदी-बहिनीको स्थानमा वैमनस्यताको योग परेको, राज-समाजमा सम्मान र धनागम गर्नेवाला, पिता स्थानबाट लाभका साथै केही वैमनस्यता पाउनेवाला, अनेक बढाइँ र बांगा-बांगा कामको ज्ञान भएको, निकै बहादुर साहसी तथा धर्मसित नडराउने खालको होला।

कु० नं० २८३

४ २ ५मं. ३ १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको कन्याराशिका मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आमाको स्थानबाट केही हानि र आंशिक लाभको योग परेको तथा मावली पक्षबाट सुख र लाभ पाउनेवाला तथा भूमि-भवन आदिबाट पनि लाभ कमाउनेवाला, एवं केही परिश्रमले आफ्नू लाभ प्राप्तिबाट बलियो शक्ति पाउनेवाला, सुख-प्राप्तिका साधनहरूमा र भोगादिकको पक्षमा केही विघ्न-बाधा आंशिक लाभ पाउनेवाला, कुनै अपठेरो काइदाले सुख र लाभ पाउनेवाला, शत्रुस्थानको वास्ता नराख्ने वाला एवं शत्रुस्थानबाट नै धन कमाउनेवाला, स्त्री स्थानबाट केही झ्याउलो भए पनि धन भेट्टाउनेवाला, राज-समाज र पिता स्थानमा केही परिश्रमले नै प्रभाव पार्न जान्ने खालको होला।

कु० नं० २८४

४ २ ५ ३ १ ६मं. १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको तुला राशिका मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धि, विद्या र परिश्रमद्वारा धनागम गर्ने खालको होला, मनभित्र बढी तेजी र रिस भएको होला, कुनै गुप्त शक्तिको बलबाट धन कमाउन जान्ने खालको र जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ प्राप्त गर्नेवाला, दैनिक दिनचर्याबाट केही विशेष प्रभाव भेट्टाउनेवाला, केही अल्छी झै मस्त रहनेवाला, बुद्धिको तागतले शत्रुको सहाराबाट लाभ कमाउनेवाला, बढी व्ययको स्थानमा केही झ्याउलो अनुभव गर्नेवाला, राज-समाज र पिता स्थानबाट केही परिश्रम सहित निकै ठूलो प्रभाव पाउनेवाला साहसी होला।

कु० नं० २८५

४ २
५ ३ १
६ १२
७मं. ९ ११
८ १०

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभाव पाउनेवाला र मावली पक्षको ठूलो शक्ति अनुभव गर्नेवाला तथा लाभ प्राप्तिको सम्बन्धमा केही प्रभावशाली भए पनि केही परतन्त्रताको योग परेको होला, धर्मस्थानमा केही कष्ट मान्नेवाला, भाग्यस्थानमा केही झ्याउलो बोक्नेवाला, शरीरमा केही रोग र अलि चिन्ताको योग परेको होला, शत्रु स्थानमा बढी शक्ति पाउनेवाला, लाभ प्राप्तिको लागि बर्ता प्रपंचको प्रभावद्वारा र अभिमानका साथ काम बनाउनेवाला, ईश्वरको सम्बन्धमा केही असन्तोष मान्नेवाला, आय कम र खर्च बढी भएको अनुभव गर्नेवाला र निकै साहसी होला।

कु० नं० २८६

४ २
५ ३ १
६ १२
७ ९ ११
८मं. १०

जुन व्यक्तिको धन राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारमा बढी परिश्रम शक्तिको लाभ प्राप्तगर्नेवाला, साहस र कर्मको शक्तिले मान-उन्नति गर्नेवाला, राज-समाजबाट फाइदा पाउनेवाला, पितृको स्थानबाट लाभ वा प्रभाव एवं केही वैमनस्यताको योग परेको होला, धन-संग्रहको स्थानमा केही न्यूनता वा क्लेशको योग परेको होला। कुटुम्ब स्थानमा केही कमी र स्त्री स्थानबाट केही रोग, झगडा-विवाद एवं लाभ पाउनेवाला, इन्द्रिय भोगादिको सम्बन्धमा र देहमा केही रोग, झ्याउलो भोग्नेवाला, लौकिक उन्नतिका सबै सम्बन्धित कामहरू निकै अपठेरो युक्तिद्वारा र परिश्रमका साथ लाभ प्राप्त गरेर शत्रु स्थानमा प्रभाव पाउने एवं पराक्रमी होला।

कु० नं० २८७

४ २ ५ ३ १ ६ १२ ७ ९मं. ११ ८ १०

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आयु स्थानमा वृद्धि पाउनेवाला, जीवनको दिनचर्यामा निकै प्रभाव भेट्टाउने र शत्रुस्थानमा अनेक कूटनीति र युक्तिहरू द्वारा लाभ पाउनेवाला, विदेश आदिको महान् परिश्रम योगबाट स्थायी र बढी लाभ पाउनेवाला, धन-संग्रहको स्थानमा केही न्यूनता अनुभव गर्नेवाला जीवनमा सहायक हुने खालको केही पहिलो र गम्भीर वस्तुको बर्ता लाभ प्राप्त गर्नेवाला, आयको महान् स्थिर शक्तिलाई कायम राख्नको निम्ति गहीरो चाल र केही अपठेरो युक्तिहरूले आफ्नू काम सपार्न जान्नेवाला, कुटुम्बको कमी अनुभव गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा केही वैमनस्यताको योग परेको होला।

कु० नं० २८८

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०मं.

जुन व्यक्तिको कुम्भ राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको तागतले लाभ र प्रभाव पाउनेवाला, अनेक बांगा-टिगा फाइदाका उग्र धर्मको पालन गर्नेवाला, वास्तविक धर्मको स्थानमा केही न्यूनता भेट्टाउनेवाला, भाग्यको स्थानमा अलि कमीको अनुभव गर्नेवाला एवं व्यय स्थानमा केही अशान्ति अनुभव गर्ने र केही कष्ट पाउने खालको होला। अन्य स्थानहरूको सम्पर्कबाट लाभका साधनहरू पाउनेवाला, केही अपठेरा उपायहरूले र हिम्मत-साहस द्वारा नै भाग्यको उन्नति गर्नेवाला, शत्रु पक्षबाट दैवी सहयोगले लाभ कमाउनेवाला, मातृस्थानमा केही झ्याउलो भए पनि लाभ पाउनेवाला र ईश्वरप्रति विश्वासमा आंशिक कमी भएको होला।

कु० नं० २८९

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ मं. ८ १०

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस महान् प्रभावशाली परिश्रम-साध्य कर्म गर्नेवाला र राज-समाजमा ठडिएर लाभ प्राप्त गर्नेवाला, सम्मान युक्त रीतिले धन कमाउनेवाला, शरीरमा केही कष्ट भइरहने खालको र पिताको स्थानमा केही अपठेरो भए पनि लाभ पाउनेवाला र सन्तान पक्षमा कष्ट तथा असन्तोष पाउनेवाला, व्यापारमा परिश्रम र दरिलो युक्तिहरू द्वारा लाभ पाउनेवाला, मावली पक्षको गौरव प्राप्त गर्ने र मातृ-सुखमा केही न्यूनता तथा दिमागमा निकै तेज र साहस पाउने खालको होला।

कु० नं० २९०

४ २ ५ ३ १ ६ १२मं. ७ ९ ११ ८ १०

जुन व्यक्तिको मेष राशिका मंगल लग्नको एघारौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो लाभ र प्रसस्त धन कमाउनेवाला, शत्रु स्थानबाट पनि धनागम गर्नेवाला, प्रभावरूपी शक्तिको धनी र बांगा युक्तिहरूको शक्तिले पनि बढी लाभ भेट्टाउनेवाला तथा दुःख र विपत्तिहरूको कत्ति पनि वास्ता नगर्नेवाला धन-संग्रहको स्थानमा केही दुर्बलता अनुभव गर्नेवाला तथा धनस्थानको कोपको सम्बन्धमा अलि उदासीन रहने खालको होला। निकै ठूलो धाक देखाएर काम सपार्न जान्नेवाला, तीक्ष्ण बुद्धिभएको तथा सन्तान-पक्षमा केही दुःखी रहने खालको होला।

कु० नं० २९१

४ २
५ ३ १मं.
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको वृषराशिका मंगल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आयको स्थानमा दुर्बलता र झ्याउलो मान्नेवाला, अन्य स्थानहरूको सम्बन्धबाट ठूलो परिश्रम द्वारा लाभको साधन पाउनेवाला र मावली पक्षबाट न्यूनता पाउनेवाला तथा दाजु-भाई दिदी-बहिनीको स्थानमा केही बाधा पाउनेवाला एवं स्त्री स्थानमा केही अशान्तिको योग परेको र बाहिरी वातावरणको शक्तिद्वारा दैनिक व्यापारमा केही मद्दत र आंशिक बाधाहरूको योग पाउनेवाला, बढी धन व्यय गर्नेवाला, अनि केही गुप्त राखेका बांगा-टिंगा चाल चलेर लाभ कमाउनेवाला र केही इन्द्रिय विकारले पीडित रहने व्यक्ति होला।

कु० नं० २९२

४ २मं.
५ ३ १
६ १२
७ ९ ११
८ १०

# मिथुन लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नको पहिलो स्थानमा छ भने त्यो मानिसको शरीर धेरै राम्रो र सलक्क परेको होला। भूमि-भवन आदिको शक्ति भएको र मातृस्थानको आर्दश शक्ति पाउने खालको एवं सुख प्राप्तिका सबै साधनहरू जोर्ने भएको र गहीरो विवेकको महान् शक्तिले दैनिक व्यापारको स्थानमा ठूलो सहायता र सुख प्राप्त गर्नेवाला, गहीरो र अग्लो विवेक शक्तिद्वारा धेरै ठूलो मान-सम्मान तथा आत्मज्ञान प्राप्त गरेर परम शान्ति अनुभव गर्ने खालको एवं स्त्री स्थानबाट निकै शान्ति र सुख प्राप्त गर्नेवाला, लौकिक कार्यहरूमा पनि धेरै सुख मात्रै वा अनुभव गर्नेवाला तथा आफ्नू दैहिक सुखको बढी विचार राख्ने खालको होला।

कु० नं० २९३

४ २ ५ ३बु. १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको कर्क राशिको बुध लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस बढी धन संचय गर्न जान्ने र भूमि-भवन आदिको शक्ति भेट्टाउने खालको तथा मातृ-सुखको स्थानमा आंशिक बन्धन अनुभव गर्ने एवं दैनिक सुखहरू पनि भेट्टाउनका लागि अनेक बाधाहरू अनुभव गर्नेवाला, धन र कुटुम्बको वृद्धि गर्नमा नै आफ्नू सुखको अनुभव गर्नेवाला एवं जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको सुख प्राप्त गर्नेवाला, जीवनको दिनचर्यामा अपार सुखानुभव गर्नेवाला, आयु-स्थानमा वृद्धि पाउनेवाला, ठूलो मान र इज्जत कमाउनेवाला, निकै गहीरो र सामुहिक विवेकको शक्तिले सबै प्रकारको सुख मात्रै खालको होला।

कु० नं० २९४

४बु. २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको सिंह राशिका बुध लग्नको तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नै बल पुरुषार्थले सुखपूर्वक उन्नति गर्नेवाला, दाजु-भाई र दिदी-बहिनीबाट सुख प्राप्त गर्नेवाला, भूमि-भवनको सुख पाउने तथा मातृस्थानको शक्तिबाट प्रभाव पाउने एवं दैहिक बल र महान् विवेक शक्तिको बल द्वारा आफ्नू भाग्यको उन्नति गर्न जान्नेवाला, अनि धर्मको ध्यान र मान-सम्मान गर्ने, यश प्राप्त गर्नेवाला, निकै टाढो दूर देशको कुरा मनमा खेलाउने र ईश्वरमा श्रद्धा एवं विश्वास राख्नेवाला, आत्मबलको तागतले अपूर्व सुखको अनुभव गर्ने र साहस उत्साह र हिम्मतको शक्ति पाउनेवाला होला।

कु० नं० २१५

४ २
५बु. ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कन्या राशिका बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस इच्छित सुखले निवास गर्नेवाला र सुन्दर सुसज्जित शरीर भएको तथा मातृस्थानबाट महानता पाउने एवं पिता स्थानमा न्यूनता र बेवास्ताको योग परेको होला। आफ्नू मनमोजीको सामुन्ने राज-समाजको वास्ता नगर्ने खालको होला। भूमि-भवन आदिको अपार शक्ति पाउनेवाला अनि निकै गहीरो विवेकको शक्ति एवं आत्मबलको तागतले महान् सुख आनन्द भोग्न पाउनेवाला, विशेष सुख प्राप्तिका लागि बलियो उन्नति र मान-प्रतिष्ठा एवं गौरवको स्थानमा न्यूनता पाउनेवाला र शरीरको सम्मान एवं प्रभाव प्राप्त गर्नेवाला, खेल तमाशा रूचाउने खालको र बर्ता वास्ता नगर्ने व्यक्ति होला।

कु० नं० २१६

४ २
५ ३ १
६बु. १२
७ ९ ११
८ १०

जुन व्यक्तिको तुला राशिका बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस गहीरो विद्या ग्रहण गर्नेवाला, बुद्धि भित्र बढी गहीरो भयंकर विचारहरूले काम बनाउने वाला तथा गहीरो गाम्भीर्य युक्त चातुर्य द्वारा विवेकपूर्ण कुरा बोल्न जान्नेवाला, सन्तान सुख पाउने र दिमागी तागतले बढी लाभ एवं सुख भोग्नेवाला तथा बुद्धिको तागतले नै भूमि-भवनादि जोर्नेवाला, मातृस्थानको शक्तिको निकै भर-थेग भेट्टाउनेवाला, आफ्नू आत्मगौरवको बढी ख्याल राख्नेवाला तथा मनभित्र सुख-शान्तिको इच्छा गर्नेवाला र सन्तानलाई आत्मशक्ति द्वारा उच्च स्थानमा पुऱ्याउने खालको ज्ञानी होला।

कु० नं० २९७

४ २ ५ ३ १ ६ १२ ७बु. ९ ११ ८ १०

जुन व्यक्तिको वृश्चिक राशिका बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शरीरको सुन्दरतामा र सुखमा केही न्यूनता पाउनेवाला र केही परतन्त्रताको वा अत्यासको अनुभव गर्नेवाला तथा आमाको सुख सम्बन्धमा केही विघ्न बाधा पाउनेवाला र मावली पक्षमा केही सुखको अनि भवन-भूमि आदि निवास स्थानको व्यवस्थामा इच्छित सहयोग प्राप्त गर्नेवाला, शत्रु स्थानमा गम्भीरता, धैर्य वा विवेकको शक्तिले काम सपार्ने तथा निकै गहीरा युक्तिहरू जान्ने खालको होला, शील र शान्तिको शस्त्रले काम मिलाउनेवाला र बढी धन व्यय गर्नेवाला, अर्कालाई सुख पुऱ्याउने र दानी दुश्मन होला।

कु० नं० २९८

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८बु. १०

जुन व्यक्तिको धन राशिका बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू शारीरिक योगले सुखपूर्वक दैनिक व्यापारमा उन्नति गर्ने र

कु० नं० २९९

४ २ ५ ३ १ ६ १२ ७ ९बु. ११ ८ १०

महान् गम्भीर विवेक शक्तिको कार्यद्वारा सम्मान र सुख-शान्ति भेट्टाउने वाला, स्त्री स्थानमा सुखको गौरव र सौन्दर्य प्राप्त गर्नेवाला, गृहस्थीसित सम्बन्धित लौकिक कामहरूमा ठूलो सफलता र सुख तथा महत्त्व प्राप्त गर्नेवाला, आमाको योगबाट आफ्ना अड्केका कामहरू सपार्न जान्नेवाला, शरीरमा सौन्दर्य पाउनेवाला तथा आफूभित्र अत्मोन्नति गर्ने प्रबल इच्छा भएको होला। केही नाम कमाउने खालको र इन्द्रिय भोगादिकको बढी सुख-इच्छा राख्ने भएको एवं दैनिक काम वा व्यापारको काममा बढी लागि परिरहनेवाला स्वाभिमानी होला।

जुन व्यक्तिको मकर राशिका बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू शारीरिक सुखहरूको सम्बन्धमा केही न्यूनता अनुभव

कु० नं० ३००

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०बु.

गर्नेवाला, मातृ-स्थानको सुखमा केही कमीको योग पाउनेवाला, आयुस्थानमा आंशिक वृद्धि भेट्नेवाला र जीवनको दिनचर्यामा केही आनन्द र सुख प्राप्त गर्नेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ पाउनेवाला एवं आफ्नू आत्माभित्र गहीरो विचार-शक्ति द्वारा केही गुप्त आनन्दको सुख अनुभव गर्नेवाला, भूमि-भवन आदिको केही न्यूनताको योग परेको होला। विदेश आदिमा सुखको अनुभव गर्नेवाला, केही अशान्त वातावरणमा रहनेवाला तर शान्ति प्रिय होला।

जुन व्यक्तिको कुम्भ राशिका बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी र यशस्वी होला। शरीरमा सौन्दर्य र सुख प्राप्त गर्नेवाला, आमाको तर्फबाट आमोद-प्रमोद भेट्टाउने र भूमि-भवनको विशेष लाभ प्राप्त गर्नेवाला, धर्मको प्रेम र विश्वासले पालन गर्नेवाला, ईश्वरमा निष्ठा र विश्वासले सुखानुभव गर्नेवाला, शील, सन्तोष, दया आदि अहिंसावादको पालन गर्ने तथा आफ्नू पुरुषार्थले नै उन्नति गर्ने एवं दाजू-भाई दिदी-बहिनीको स्थानबाट सुख प्राप्त गर्नेवाला, सात्विक विचारको र विवेकको शक्तिद्वारा यश पाउने, ठूलो साहस र हिम्मत प्राप्त गर्नेवाला, तत्त्व-खोजी र ज्ञानी एवं दूरदर्शी होला।

कु० नं० ३०१

४ २
५ ३ १
६ १२
७ ९ ११ बु.
८ १०

जुन व्यक्तिको मीन राशिका बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नो शरीरले अनेक कष्ट खपेर त्यही कष्टपछि अपार सुख प्राप्त गर्नेवाला, पिता स्थानमा न्यूनता पाउने र केही स-साना कर्मको योग द्वारा सम्मान पाउनेवाला, देहको सौन्दर्यमा केही न्यूनता भेट्टाउने, मान प्रतिष्ठाको वृद्धि गर्नका लागि केही विवेकको कर्मबलले काम सपार्न जान्नेवाला, मातृस्थानको अलि दुर्बलता भएर पनि बलपूर्वक काम निकाल्न जान्नेवाला, भूमि-भवन आदिको शक्ति प्राप्त गर्नेवाला, राज-समाजको भित्री वातावरणमा अलि कमजोरी अनुभव गर्ने र अलि अकर्मण्य अल्छी बानी भएको, सुख प्राप्तिको बढी विचार राख्नाले उन्नतिको मार्गमा बाधा पाउने गुप्त बाठो होला।

कु० नं० ३०२

४ २
५ ३ १
६ १२बु.
७ ९ ११
८ १०

जुन व्यक्तिको मेष राशिका बुध लग्नबाट एधारौं स्थानमा छ भने त्यो मानिस आफ्नू दैहिक बलको प्रभावले बढी लाभ पाउने वाला र धेरै सुख-शक्ति प्राप्त गर्ने तथा आमाको सम्बन्धबाट लाभ पाउने एवं अनेक थरिका सुखद पदार्थहरूको लाभ भेट्ने र लाभ प्राप्तिको योगहरूले ठूला सुखहरूको अनुभव गर्ने खालको होला, भूमि-भवन आदिको विशेष लाभ पाउने र शरीरमा आरोग्य तथा सन्तान पक्षबाट सुख अनुभव गर्नेवाला एवं विद्या स्थानमा गहीरो प्रभाव पाएर सुख मात्रै खालको होला। बोल-चालमा वाणीद्वारा अनेक तत्त्वका कुरा गरेर प्रशंसा पाउनेवाला, आफ्नू विवेक शक्तिद्वारा अनेक प्रकारका लाभ पाउने वाला, निकै बाठो खालको व्यक्ति होला।

कु० नं० ३०३

४ २
५ ३ १बु.
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको वृष राशिको बुध लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस आफ्नो दैहिक सुखहरूमा हानि पाउने खालको र देहको सौन्दर्यमा न्यूनता पाउनेवाला, मातृ-स्थानको सुखमा कमी पाउनेवाला, अन्यस्थानको सम्पर्कबाट नै सुख-शान्तिको योग पाउनेवाला, भूमि-भवन आदिमा केही न्यूनता पाउनेवाला, बढी व्यय गर्ने भएको र व्यय स्थानबाट नै सुखका साधन प्राप्त गर्नेवाला, शत्रु स्थानमा नरम बनेर काम सपार्न जान्ने र अन्य स्थानको सम्पर्कद्वारा एवं बढी विवेक शक्ति तथा व्यय-शक्तिको बलले मनलाई शान्ति दिने तथा बाहिरी स्थानको नै चिन्तन गर्ने भ्रमणकारी व्यक्ति होला।

कु० नं० ३०४

४ २बु.
५ ३ १
६ १२
७ ९ ११
८ १०

# मिथुन लग्नान्तर-गुरुफलम्

जुन व्यक्तिको मिथुन राशिका गुरू लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस आफ्नी स्त्रीस्थानबाट बढी महत्व पाउनेवाला र विशेष महत्वपूर्ण नै रोजगार-व्यापार गर्नेवाला, पिता स्थानबाट उत्थान-शक्तिको सहयोग पाउनेवाला, अनि निकै ठूलो मान-प्रतिष्ठा प्राप्त गर्नेवाला एवं राज-समाजबाट धनागम र मान पाउनेवाला तथा सन्तान-शक्ति प्राप्त गर्नेवाला एवं विद्या स्थानबाट फाइदा भेट्टाउनेवाला, तथा आफ्नू शरीरमा सौन्दर्यको गौरव भएको र केही विघ्न-बाधा सहित भाग्यको वृद्धि गर्नेवाला, धर्मको पनि पालन गर्ने र आफ्नू उन्नतिबाट महानता पाउनको निम्ति हृदयैदेखि बराबर प्रयत्नशील रहेर काम गर्न जान्ने सुयोग्य व्यक्ति होला।

कु० नं० ३०५

४ २
५ ३ गु. १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कर्क राशिका गुरू लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस आफ्नू विशेष प्रयत्नको कर्म-बलले धनको महान् वृद्धि गर्ने र पिता स्थानबाट धनको ठूलो सहायता प्राप्त गर्ने तथा धनकै तागतले मान-प्रतिष्ठा पाउनेवाला, रोजगार-व्यापारमा वृद्धि पाउनेवाला तथा स्त्री स्थानमा केही बन्धन अनुभव गर्ने र जीवनको दिनचर्यामा केही झ्याउलो वा अपठेरो पाउनेवाला तथा शत्रु स्थानमा निकै प्रभाव राख्ने र राज-समाजको सम्बन्धले पनि धनको निकै फाइदा गर्नेवाला र जीवनलाई सहायक हुने कुनै पहिलो र गम्भीर वस्तुको वास्ता नराख्नेवाला, लौकिक वा सामाजिक सम्बन्धका प्रत्येक विषयमा मनभित्र धनलाई नै बढी महत्त्व दिने ठूलो धनी कुटुम्ब पाउने व्यक्ति होला।

कु० नं० ३०६

४ गु. २
५ ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको सिंह राशिका गुरू लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बाहुबलको महान् उपयोग गरेर दैनिक व्यापारलाई प्रभावशाली बनाउनेवाला र स्त्री स्थानमा विशेष महत्त्व वा शक्ति र सौन्दर्य पाउनेवाला, अनि हृदय-बलको शक्तिद्वारा वा कर्मबलको प्रभावशक्तिद्वारा ठूलो सम्मान, उत्साह र साहस, हिम्मत प्राप्त गर्ने खालको र राज-समाजसित सम्बन्धित कामहरूमा ठूलो नाफा कमाउनेवाला र इन्द्रिय भोगादिकको बढी शक्तिबाट आनन्द भोग प्राप्त गर्नेवाला र धर्म वा भाग्यको स्थानमा केही न्यूनतायुक्त शक्ति पाउनेवाला र दाजू-भाई दिदी-बहिनी आदिको शक्ति भेट्टाउनेवाला तथा आफूले गरेको कामको गौरव मान्नेवाला निकै पुरूषार्थी र साहसी होला।

कु० नं० ३०७

४ २
५गु. ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कन्या राशिका गुरू लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस व्यापार वा रोजगारको सुख प्राप्त गर्नेवाला र आमाको स्थानबाट सम्मान पाउनेवाला तथा पिताको स्थानबाट सुखका साधन पाउने र व्यापारलाई राम्रो फाइदाले अभिमानका साथ चलाउने वाला एवं राज-समाजबाट सुख पाउनेवाला र आफ्नू व्यापारिक उन्नतिको योगले मनमा बढी सुख अनुभव गर्ने तथा भूमि-भवन आदिको शक्ति भेट्टाउने र बढी व्यय हुनाका कारणहरूले गर्दा असन्तोष अनुभव गर्ने तथा जीवनको दिनचर्यामा केही झ्याउलो मान्ने खालको होला। पत्नी र सुख गृहस्थीको लौकिक सम्बन्धहरूमा बढी सुखानुभव गर्नेवाला र कर्मिष्ठ एवं मानयुक्त होला।

कु० नं० ३०८

४ २
५ ३ १
६गु. १२
७ ९ ११
८ १०

जुन व्यक्तिको तुलाराशिका गुरू लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै विद्या ग्रहण गर्नेवाला, बुद्धिभित्र बढी कार्य-कुशलता र चातुर्य राख्ने खालको होला। सन्तान-सुख प्राप्त गर्नेवाला, पिता-स्थानको शक्तिबाट लाभोन्नति पाउनेवाला, रोजगार र व्यापारको बढी ज्ञान भएको तथा स्त्री एवं भोग विलाशिताको हृदय भित्र मान वा दिमागभित्र बढी इच्छा राख्ने खालको होला। दिमागी शक्तिद्वारा ठूलो सम्मान प्राप्त गर्नेवाला, राज-समाजबाट मान र धन पाउनेवाला, केही वैमनस्यता युक्त धर्मको पालन गर्नेवाला, लौकिक नियमानुसार भाग्यमानी कहिने र मस्तिष्कमा हुकुम चलाउने भावना भएको अहंकारी होला।

कु० नं० ३०९

४ २
५ ३ १
६ १२
७गु. ९ ११
८ १०

जुन व्यक्तिको वृश्चिक राशिका गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही परतन्त्रताको व्यापार गरेर धन-मानको उन्नति गर्न जान्ने र राज-समाजमा पनि सम्मान र धन प्राप्त गर्नेवाला, पिता-स्थानबाट केही वैमनस्यताको वृद्धि पाउनेवाला, शत्रु स्थानमा ठूलो प्रभाव मान पाउनेवाला, स्त्री स्थानबाट केही विरोध वा सम्मानको योग प्राप्त भएको होला। आफ्नू दैनिक श्रमको काममा धन स्थानको वृद्धि पाउनेवाला, इन्द्रिय भोगादिको विषयमा वास्तविक न्यूनता भए पनि प्रकटमा प्रभाव पाउनेवाला, केही बांगो चालले र हृदय-बलद्वारा लौकिक सम्बन्धमा निकै उन्नति गर्ने र गृहस्थीका अनेक झ्याउलामा गाडिएको होला।

कु० नं० ३१०

४ २
५ ३ १
६ १२
७ ९ ११
८गु. १०

जुन व्यक्तिको धन राशिको गुरू लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस सामान्य जनतासित सम्बन्धित दैनिक व्यापारमा लागेको तथा हृदय बलको शक्तिले मोटर-कार आदिको व्यापारमा ठूलो प्रतिष्ठा वा उन्नति गर्नेवाला, पिताको स्थानको तागतले बढी लाभ वा शक्ति पाउनेवाला, स्त्री स्थानबाट प्रतिभा र सम्मान प्राप्त गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको पनि शक्ति पाउनेवाला, आफ्नू दैनिक कार्यको शक्तिद्वारा आफ्नू बल र प्रभाव बढाउन जान्नेवाला, भोग-विलामा रत रहने र उत्साही एवं धेरै धन कमाउने होला।

कु० नं० ३११

४ २
५ ३ १
६ १२
७ ९गु. ११
८ १०

जुन व्यक्तिको मकर राशिका गुरू लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस स्त्री र पिता स्थानबाट हानि पाउनेवाला र रोजगार-व्यापारको निम्ति महान कष्टदायक कर्म गर्नेवाला, अनेक थरिका झ्याउलाहरूको योगले गर्दा दैनिक कार्य निकै कष्टपूर्वक चलाउनेवाला, राज-समाज र लौकिक व्यवहारको सम्बन्धमा निकै दुर्बलता अनुभव गर्नेवाला, जीवनको दिनचर्यामा बढी अशान्ति हृदय भित्र अनुभव गर्नेवाला, गूढातिगूढ कर्म गरेर धन कमाउने वाला, जीवनमा सहायक हुने पहिलो र गम्भीर वस्तुको हानि पाउनेवाला, केही अप्रसन्नताका साथ अधिक व्यय गर्नेवाला, अनि आंशिक मातृ-सुख भेट्टाउने खालको असहाय झैं होला।

कु० नं० ३१२

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०गु.

जुन व्यक्तिको कुम्भ राशिका गुरू लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थान र पिता-स्थानबाट केही उत्तम योग पाउनेवाला भए पनि केही रस गुलियो भावको न्यूनता भेट्टाउने खालको होला। भाग्यको शक्ति-बलले दैनिक स्थाई व्यापारम दह्रोपना अनुभव गर्नेवाला, प्रत्येक काममा असन्तोष मान्नेवाला, हृदय-बल र कर्मको शक्तिद्वारा भाग्यस्थानमा केही तागत पाउनेवाला एवं शरीरमा प्रभाव र सम्मान पाउनेवाला, आफ्नै पुरुषार्थले सफलता भेट्टाउनेवाला, सन्तान पक्षबाट सहयोग र भर-थेग पाउनेवाला एवं निकै विद्या ग्रहण गर्नेवाला, वृद्धिस्थानबाट उन्नतिका साधनहरू पाउनेवाला र सामान्य रू पले धर्मको पालन गर्नेवाला, दाजू-भाई दिदी-बहिनीको उत्तम सहयोग सम्पर्क पाउने खालको होला।

कु० नं० ३१३

४ २
५ ३ १
६ १२
७ ९ ११ गु.
८ १०

जुन व्यक्तिको मीन राशिका गुरू लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू हृदय भित्र निकै ठूलो प्रतिष्ठा एवं गौरव मान्नेवाला, व्यापार आदिको सम्बन्धमा विशेष उन्नति गर्नेवाला, पिता-स्थानबाट सहायता र शक्ति पाउनेवाला, राज-समाजमा मान-प्रतिष्ठा पाउनेवाला, केही अभिमानका साथ काम गर्नेवाला, स्त्री स्थानको प्रभाव भेट्टाउनेवाला, धनको वृद्धिका लागि हृदय र कर्मबलको महान शक्तिको प्रयोग गरेर उन्नतिपथमा बढ्दै जानेवाला, माताको स्थानमा केही सहयोग पाउने र शत्रु स्थानमा प्रभाव राख्नेवाला, मावली पक्षबाट इज्जत पाउनेवाला सबै लौकिक विषयमा प्रभाव र प्रभुत्वद्वारा काम बनाउने खालको होला।

कु० नं० ३१४

४ २
५ ३ १
६ १२गु.
७ ९ ११
८ १०

जुन व्यक्तिको मेष राशिका गुरू लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट महान गौरव र लाभ र तथा सौन्दर्यको योग प्राप्त गर्नेवाला एवं दैनिक व्यापार भित्र ठूलो इज्जतका साथ लाभका साधनहरू पाउनेवाला, पिता-स्थानबाट लाभको राम्रो योग पाउनेवाला, राज-समाजको सम्बन्धमा ठूलो लाभ र सम्मान प्राप्त गर्नेवाला, तथा दाजू-भाई दिदी-बहिनीबाट राम्रो सहयोग पाउनेवाला र भोग-विलासको राम्रा साधनहरू पाउनेवाला तथा व्यापारको शक्तिबलले पुरुषार्थबलको वा साहसको महान वृद्धि गर्न जान्नेवाला, हृदय भित्र ठूलो उत्साह र साहसका योजनाहरू पाउनेवाला, धन-सन्तान र विद्याको सुख प्राप्त गर्ने निकै बाठो होला।

कु० नं० ३१५

४ २ ५ ३ ११गु. ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको वृष राशिका गुरू लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानमा कमजोरी पाउनेवाला, स्त्री स्थानमा हानि भेट्नेवाला र राज-समाजमा सम्मान पाउनेवाला, व्यापारमा ठूला-ठूला झ्याउला र न्यूनता पाउनेवाला, अन्य स्थानहरूको सम्पर्कले व्यापारमा मद्दत प्राप्त गर्नेवाला र मातृ-स्थान या भवन-भूमिका स्थानको आंशिक शक्ति पाउने र जीवनको दिनचर्यामा केही अशान्ति अनुभव गर्ने र इन्द्रिय भोगादिको पक्षमा र गार्हस्थ पक्षको आनन्द वैभवमा केही न्यूनता पाउनेवाला, जीवनमा सहायक हुने पहिलो र गम्भीर वस्तुहरूको केही न्यूनता पाउनेवाला दुर्बल हृदयको होला।

कु० नं० ३१६

४ २गु. ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

# मिथुन लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नको प्रथम स्थानमा छ भने त्यो व्यक्ति शरीरमा दुर्बलताको योग परेको र अन्यस्थानको सम्बन्धित विषयमा

कु० नं० ३१७

४ २ ५ ३शु. १ ६ १२ ७ ९ ११ ८ १०

बुद्धि-भित्र निकै ठूलो योग्यता राख्ने भएको तथा मस्तिष्क-शक्तिको बलले निकै बढी र अभिमानपूर्वक धन व्यय गर्ने भएको एवं बुद्धि र वाणीको उल्टो-सुल्टो गरेर महान् चातुर्यको योगले निकै ठूलो सम्मान प्राप्त गर्नेवाला, सन्तान पक्षमा सुख-शान्तिमा न्यूनता अनुभव गर्ने खालको, विद्या भन्दा बढी विद्याको स्थानबाट अनेक चातुर्यले आफ्नू बिग्रन लागेको काम सपार्न जान्ने, स्त्री र भोगादिको पक्षमा पनि खूब धन व्यय गर्ने र बर्ता यातायातमा रूचि राख्ने खालको होला।

जुन व्यक्तिको कर्क राशिका शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको कोषमा बराबर हानिको योग परेको र अन्यान्य

कु० नं० ३१८

४शु. २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

स्थानहरूको सम्पर्कबाट बुद्धिको योगद्वारा धनको शक्ति बढाउन जान्ने खालको तथा निकै विद्या ग्रहण गर्नेवाला र सन्तान पक्षमा केही बन्धन अनुभव गर्नेवाला र कुटुम्ब स्थानमा आंशिक हानि पाउनेवाला तथा जीवनको दिनचर्यामा केही बर्ता व्यय र बुद्धियोगको प्रभावबाट आनन्द प्राप्त गर्नेवाला, खर्च घटाउने वा रोक्ने पनि योजना बनाउनेवाला भए पनि बर्ता व्ययको योग परेको होला। मन-मस्तिष्क भित्र केवल धनको कारणले र सन्तानको कारणले केही कष्ट अनुभव गर्नेवाला, कोष-वृद्धि गर्नका लागि जाति-नजाति सबै काम गर्ने निकै बाठो खालको होला।

जुन व्यक्तिको सिंहराशिका शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बल-पुरुषार्थको स्थानमा केही न्यूनता अनुभव गर्ने र दाजू-

कु० नं० ३१९

४ २ ५शु. ३ १ ६ १२ ७ ९ ११ ८ १०

भाई दिदी-बहिनीको स्थानमा आंशिक कमीको योग परेको तथा आफ्नू बल-बुद्धिको योगबाट घर खर्च संचालन गर्ने शक्ति प्राप्त गरेको होला। विद्याको शक्तिमा केही न्यूनताको योग प्राप्त गर्ने खालको तथा सन्तान पक्षमा केही नीरसता युक्त शक्ति प्राप्त गर्नेवाला एवं केही बल-बुद्धिको उल्टो-सोझो सम्बन्धबाट र बाहिरी सम्पर्कबाट शक्ति प्राप्त गर्नेवाला, भाग्यस्थानको वृद्धि गर्नेवाला, धर्मको सम्बन्धमा अलि चाख मात्रे र आफू भित्र दुर्बलताको योग उत्पन्न गर्ने, निर्के बाठो होला।

जुन व्यक्तिको कन्या राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आमाको स्थानबाट हानि पाउने र केही हीनताको अनुभव

कु० नं० ३२०

४ २ ५ ३ १ ६शु. १२ ७ ९ ११ ८ १०

गर्नेवाला, मातृभूमिको स्थानमा केही दुर्बलता र वियोगको साधन भेट्टाउनेवाला तथा अन्य स्थानको शक्तिबाट राज-समाजमा उन्नतिका साधन पाउनेवाला र विद्या-स्थानमा केही न्यूनता पाउनेवाला र सन्तान सुखमा पनि कमीको योग परेको तथा बढी व्ययको शक्तिले बाहिरी धाक जमाउन जाने वाला, तर भित्र खर्चमा मुठी कस्नेवाला र घरेलू दैनिक खर्चमा केही कमजोरी पाउनेवाला तथा गृह-सुखहरूको वातावरणमा केही दुर्बल (आंशिक नपुंसक) हुनाले गर्दा मनभित्र केही हीन भावना भएको एवं संसार भित्र विशेष उन्नतिको इच्छाले गर्दा सुख-शान्तिमा बाधा पाउनेवाला र भित्री बाठो होला।

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्याको स्थानमा केही न्यूनताका साथ-साथै विद्याको संग्रह शक्ति प्राप्त गर्न जान्ने खालको, अन्य बाहिरी सम्पर्कहरूको सम्बन्धको बुद्धि भित्र निकै ठूलो ज्ञान प्राप्त गर्ने खालको, दिमाग भित्र निकै बर्ता कला-शक्ति राख्ने भएको होला। सन्तानको सम्बन्ध भित्र केही कमजोरी र आंशिक शक्ति प्राप्त गर्नेवाला, बुद्धि र बलको प्रभावद्वारा आय-व्ययको साधन पाउनेवाला, धेरै बढी चातुर्यका कुराहरू मिलाउन जान्ने, आफ्नू इलम भित्र शक्ति भए पनि कमजोरी अनुभव गर्नेवाला, बुद्धिमा पनि न्यूनता अनुभव गर्नेवाला, निकै बढी उल्टा-सुल्टा गर्ने चातुर्य भएको होला।

कु० नं० ३२१

४ २ ५ ३ १ ६ १२ ७शु. ९ ११ ८ १०

जुन व्यक्तिको वृश्चिक राशिका शुक्र लग्नबाट षष्ठस्थानमा छ भने त्यो मानिस विद्यामा न्यूनताको योग परेको र सन्तान पक्षबाट कष्ट अनुभव गर्ने खालको, व्यय स्थानमा केही अपठेराहरू र आंशिक परतन्त्रताको योग परेको होला। मन-मस्तिष्कमा बढी उल्टो-सुल्टो गर्ने तागतद्वारा निकै डरलाग्दा चालहरू चल्न जान्नेवाला, र शत्रुपक्षबाट अनेक झ्याउलाहरू सहेर पनि आफ्नू चातुर्यले बिग्रिसकेको काम सपार्नेवाला, अन्यान्य स्थानहरूबाट केही बुद्धिखेलाएर काम बनाउनेवाला, बढी धन व्यय गरेर पछितो मान्ने वाला, मावली पक्षबाट केही न्यूनता अनुभव गर्नेवाला, मिथ्या बोलेर कुरा गर्न सिपालुमा गनिने खालको होला।

कु० नं० ३२२

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८शु. १०

जुन व्यक्तिको धनराशिका शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस अन्य स्थानहरूको सम्पर्कले बुद्धिको योगद्वारा दैनिक व्यापारको

कु० नं० ३२३

४ २ ५ ३ १ ६ १२ ७ ९शु. ११ ८ १०

उत्तम शक्ति प्राप्त गर्नेवाला तथा विद्या-संग्रहको स्थानमा केही न्यूनता भए पनि रोजगार र व्यापारिक वा व्यावहारिक एवं लौकिक ज्ञान प्राप्त गर्नेवाला, तथा सन्तान पक्षमा अलि-अलि दुर्बलता सहित शक्ति भेट्टाउने खालको होला। स्त्री पक्षमा ठूलो चातुर्यको योग परेको र केही अत्यास वा कष्ट पाउने खालको एवं दैनिक व्यापारको सम्बन्धमा अनेकौं पल्ट साना-ठूला दुर्बलताहरूको र हानिको योग पाउनेवाला, ठूला-ठूला बठ्याइँको योगले आफ्ना स्वार्थ सिद्ध गर्न जान्नेवाला, स्त्री र गार्हस्थ्यको भित्र खूब खर्च र भोगको शक्ति प्राप्त गर्ने खालको भाग्यमानी होला।

जुन व्यक्तिको मकर राशिका शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस विद्या स्थानमा न्यूनता भेट्टाउने र सन्तान पक्षबाट हानि र चिन्ताको

कु० नं० ३२४

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०शु.

योग परेको होला। बुद्धिभित्र महान एवं गहीरो चातुर्यको योगहरूले ठूला-ठूला काम बनाउन जान्नेवाला, दिमागलाई खिन्न पारेर धनको वृद्धि गर्नका लागि अनेक प्रयत्नहरू गर्न जान्ने, दैनिक व्ययको संचालन गर्ने शक्ति वा बुद्धि प्राप्त गर्नका लागि विदेश आदिको सम्पर्क द्वारा काम मिलाउने, जीवनको दिनचर्याको मीठो र गुलियो भित्र अलि-अलि न्यूनताको योग परेको, विद्या-स्थानमा गूढ ज्ञानको शक्तिले काम-चलाउनेवाला, खर्चको कष्ट पाउनेवाला होला।

जुन व्यक्तिको कुम्भ राशिका शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस विद्या ग्रहण गर्ने राम्रो शक्ति भए पनि विद्या-स्थानमा न्यूनता पाउनेवाला तथा बुद्धिभित्र निकै ठूलो भाग्य-वृद्धिको ज्ञान पाउनेवाला, तर बाहिरी अन्य स्थानहरूको सम्पर्कबाट लाभ प्राप्त गर्ने शक्तिको स्थानमा स्थानीय लाभमा केही कमी पाउनेवाला र भाग्य-वृद्धिको स्थानमा केही बुद्धिका कलाको चमत्कार पाएर उत्तम चातुर्यले तथा खर्चको योगद्वारा काम सपार्ने सफलता प्राप्त गर्नेवाला, भाग्यको स्थानमा कहिले काहीं केही हानिहरूवा निराशाहरूको योग परेको तथा सन्तान पक्षबाट राम्रो लाभ पाउनाको साथै आंशिक न्यूनता पनि अनुभव गर्नेवाला, धर्मको सम्बन्धमा निकै उत्तम चाखलाग्दो भाव भए पनि वास्तविकतामा कमी पाउनेवाला र दाजू-भाई दिदी-बहिनीको स्थानमा केही अरुचि राख्नेवाला, तत्त्वखोजी होला।

कु० नं० ३२५

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ शु. ८ १०

जुन व्यक्तिको मीन राशिका शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस विद्या ग्रहण गर्ने र सन्तान-शक्ति प्राप्त गर्नेवाला, पिता-स्थानको शक्ति पाउनेवाला, व्यापार र रोजगारको शक्ति प्राप्त गर्नेवाला तर प्रत्येक विषय भित्र अलिकति कमजोरी वा न्यूनता पाउने खालको तथा बढी व्यय गर्ने खालको होला। अन्यान्य बाहिरी स्थानहरूको निकै ठूलो सम्पर्क राख्नेवाला, बुद्धिको अनेक उच्चातिउच्च युक्तिद्वारा आडम्बर सहित निकै चाक्लो-बाक्लो काम गर्न जान्ने भए पनि कहिले काहीं त्यही ठूलो काम गर्दा-गर्दै कतै निकै हानिको योग परेको तथा मातृ-स्थानमा आंशिक वैमनस्यता र केही कमीको योग भेट्नेवाला, उन्नतिको महानता पाउनका लागि सुख-शान्तिको वास्ता नराख्ने भएको र दिमागमा तेजी, राज-समाजमा शेखी-इज्जत पाउनेवाला, बाठो र प्रभावयुक्त होला।

कु० नं० ३२६

४ २ ५ ३ १ ६ १२शु. ७ ९ ११ ८ १०

जुन व्यक्तिको मेष राशिका शुक्र लग्नवाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै विद्या ग्रहणको लाभ पाउनेवाला तथा विद्याको पूर्णतामा आंशिक न्यूनता भेट्टाउने वाला र सन्तान लाभको भित्र पनि केही कमी अनुभव गर्नेवाला तथा बुद्धि र विद्याले धनोपार्जन गर्न जान्नेवाला, अनि बढी चातुर्यको योगद्वारा वा अन्यस्थान-हरूको सम्पर्कवाट सम्पत्तिको अनायास लाभ पाउनेवाला र धनागमका अन्यान्य साधन जोर्न समर्थ होला। खर्चको तागतले पनि लाभमा वृद्धि गर्नेवाला तथा स्थानीय लाभको सम्बन्धमा केही हानि पनि पाउनेवाला, मिके चातुर्यको कुरा-कानी गरेर पनि धनागम गर्न जान्नेवाला, अनि सदैव आफ्नू स्वार्थ सिद्धिको उपाय खोजिरहने तथा कला-प्रेमी होला।

कु० नं० ३२७

४ २ ५ ३ ११शु. ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको वृष राशिका शुक्र लग्नवाट बाहौं स्थानमा छ भने त्यो मानिस विद्या स्थानमा बढी कमजोरी अनुभव गर्नेवाला, सन्तान पक्षमा ठूलो हानिको योग पाउनेवाला, धेरै बढी व्यय गर्नेवाला, बाहिरी अन्य स्थानहरूको शक्तिद्वारा र दिमागको शक्तिले इच्छा गरे जति सबै प्राप्त गर्नेवाला, हर बखत मस्तिष्क भित्र उल्टो-सुल्टो तागतले कुराकानी गर्ने खालको होला। यस्तै प्रकारको बुद्धि र बलद्वारा दैनिक खर्चको शक्ति प्राप्त गर्नेवाला र मावली पक्षबाट केही न्यूनताको आभास मात्र पाउनेवाला, मस्तिष्कमा अनेक थरिका कष्ट झ्याउलाहरूको योग भेट्टाउने खालको, अनि खर्चको स्थानमा ठूलो कला र चातुर्यहरूको राम्रो योग परेको तथा शत्रु स्थानमा आंशिक बढ्याईले आफ्नू काम सपार्ने र केही भ्रमित बुद्धि-विचारको होला।

कु० नं० ३२८

४ २शु. ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

# मिथुन लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको मिथुन राशिका शनि प्रथम स्थानमा छ भने त्यो मानिस भाग्यमानीमा गनिने खालको तथा शारीरिक परिश्रम र सौजन्यतापूर्ण व्यवहारको आडमा लुकेका युक्तिहरूद्वारा उन्नतिको बाटो समाउन जान्नेवाला, शरीरमा केही तेज एवं केही कष्टको योग पाउनेवाला, जीवनलाई सहायक हुने जस्ता केही प्रथम र गम्भीर वस्तुको लाभ पाउनेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा केही अपठेरोको योग पाउनेवाला, स्त्री स्थानमा वैमनस्यताको योग परेको होला। धर्म स्थानको स्वार्थयुक्त भएर पालन गर्नेवाला, लौकिक सम्बन्धमा प्रत्येक विषयको उन्नति गर्नका लागि महान् प्रयत्न गर्नेवाला र भित्रको निकै बाठो होला।

कु० नं० ३२९

४ २
५ ३श. १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कर्क राशिका शनि लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस पूर्ण संचित धनको शक्ति प्राप्त गर्नेवाला र त्यो धनको नाश गर्नेवाला तथा आयुको शक्ति प्राप्त गर्नेवाला, धनी वर्गको जस्तै दैनिक दिनचर्या व्यतीत गर्नेवाला, धर्मस्थानको पूर्णरूपेण स्वार्थयुक्त भएर करले पालन गर्नेवाला एवं ठूलो कूटनीतिले धनको वृद्धि गर्न जान्नेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ अकस्मात् पाउने खालको र जीवनमा आमदानीको सम्बन्धबाट केही दुर्बलता र उदासीनताको योग परेको तथा कुटुम्बक स्थानमा केही न्यूनता पाउनेवाला, अनि सुख स्थानमा केही विघ्न-बाधा पाउनेवाला, केही क्रोधी र तामसी धर्मपालन गर्ने खालको होला।

कु० नं० ३३०

४श. २
५ ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको सिंह राशिका शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै बढी परिश्रम गर्नेवाला र आफ्नू उन्नति गर्नका लागि निकै उच्च बुद्धिद्वारा ठूला-ठूला काम गर्न अघिसर्नेवाला, दाजू-भाई दिदी-बहिनीको स्थानमा नीरसताको योग परेको र परिश्रमकै बलले पूर्ण सफलताको योग पाउनेवाला, अनि आयुको वृद्धि पाउनेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको शक्ति प्राप्त गर्नेवाला एवं भाग्य र पुरुषार्थ दुवैलाई ठूलो मात्रे खालको र तमोगुणी धर्मको पालन गर्नेवाला तथा भाग्यको उन्नतिका लागि ठूला-ठूला कष्टसाध्य काम गरेर सफलताको बाटो प्रशस्त पार्न जान्ने र बढी धन व्यय गर्ने खालको होला।

कु० नं० ३३१

४ २
५श. ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कन्या राशिका शनि लग्नबाट चतुर्थ स्थानमा छ भने त्यो मानिस मातृ स्नेहको लालसामा केही न्यूनताको योग परेको तथा भाग्यको शक्तिको सुख प्राप्त गर्नेवाला र जीवनलाई सहायक हुने केही प्रथम र गम्भीर वस्तुबाट सुख प्राप्त गर्ने खालको होला। धर्म स्थानमा केही सामान्य शक्तिको पालन गर्नेवाला र आयु स्थानको सुख प्राप्त गर्नेवाला, तथा जीवनको दिनचर्याको प्रभाव वा सुखका योगहरूले व्यतीत गर्नेवाला एवं शरीरमा केही कष्ट र अत्यास वा केही भाग्यमानीको योग परेको होला। सज्जनता ढगंले वा गूढ ज्ञानको शक्तिद्वारा अनेक सुखका साधनहरूको वा गूढ ज्ञानको शक्तिद्वारा सुखका साधनहरूको र भूमि-भवन आदिको वृद्धि गर्नमा बराबर लागिरहने खालको बाठो होला।

कु० नं० ३३२

४ २
५ ३ १
६श. १२
७ ९ ११
८ १०

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै प्रखर र प्रबल बुद्धि भएको तर दूरदेशको बलियो र विशेष ज्ञान राख्नेवाला तथा मस्तिष्कमा बढी तेज भएको होला। बुद्धिको द्वारा भाग्योदयको कारण उत्पन्न गर्ने भएको तथा तामसी धर्मको पालन गर्नेवाला र सन्तान-शक्ति प्राप्त गर्नेवाला, अनि धेरै विद्या ग्रहण गर्ने भएको हुनाले आमदानीको स्थानमा अलिकति हेलचक्राइँ गर्ने, अशान्तिको कारण पाउने भएको र कोष-धनको वृद्धिका लागि जाति-नजाति, सानो-ठूलो सबै प्रकारका यत्न गर्नेवाला र जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ प्राप्त गर्नेवाला एवं दैनिक व्यापारमा अलि बाधा पाउने खालको भए पनि प्रसन्न चित्त रहने होला।

कु० नं० ३३३

४ २ ५ ३ १ ६ १२ ७श. ९ ११ ८ १०

जुन व्यक्तिको वृश्चिक राशिका शनि लग्नबाट षष्ठस्थानमा छ भने त्यो मानिस जीवनमा ठूलो प्रभावशाली र धनाढ्य जस्तै रहन-सहन भए पनि केही मर्यादामा रहेर आफ्नू दैनिक दिनचर्या व्यतीत गर्ने खालको होला। जीवनको विकास गर्नका लागि महान् अपठेरो र परिश्रमका गूढ युक्तिहरू द्वारा आफ्नू काम सपार्न जान्नेवाला, भाग्यको उन्नति गर्नका लागि तथा बर्ता प्रसिद्धि र प्रभाव बढाउनको लागि धर्माधर्मको कुनै वास्ता नगरेर आफ्नू स्वार्थसिद्धिमा डुबिरहने खालको होला। आयुस्थानको वृद्धि पाउनेवाला, जीवनमा सहायक हुने केही प्रथम तथा गम्भीर वस्तुको स्थायी लाभ पाउनेवाला, दाजु-भाई दिदी-बहिनीको स्थानबाट केही वैमनस्यता पाउनेवाला, र आयुस्थानबाट राम्रो प्रभाव पाउनेवाला, बढी खर्च गर्ने र ईश्वरमा विश्वास नगर्ने खालको होला।

कु० नं० ३३४

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८श. १०

जुन व्यक्तिको धन राशिका शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको सम्बन्धमा परिश्रमको शक्तिद्वारा भाग्योन्नति गर्नेवाला, विवाह गरिसकेपछि जीवनको आनन्द वृद्धि हुने साधन भेट्टाउनेवाला, रोजगारमा वृद्धि र यश प्राप्त हुने साधन फेलापार्नेवाला एवं महान् गूढ युक्तिहरू द्वारा दैनिक व्यापारको वृद्धि गर्दै रहे पनि केही धर्मको विचार राख्ने भएको, सुख तथा भोगादिकको बढी प्राप्तिका लागि अनेकानेक प्रयत्नमा लागि रहने हुनाले धेरै सफलता प्राप्त गर्नेवाला, जीवनमा सहायक हुने पहिलो र गम्भीर वस्तुको लाभ भाग्यको तागतले प्राप्त गर्ने, लामू आयु भएको र भाग्यमानी होला।

कु० नं० ३३५

४ २
५ ३ १
६ १२
७ ९श. ११
८ १०

जुन व्यक्तिको मकर राशिका शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस दीर्घ आयु पाउनेवाला, जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको स्थायी लाभ प्राप्त गर्नेवाला, भाग्योन्नतिको स्थानमा कुनै ठूलो बाधा वा तगारो आइलागेको योग परेको होला। विदेश आदिको योगले भाग्योन्नतिका साधनहरू पाउने खालको र धर्मको स्थानमा निकै बर्ता न्यूनताको योग पाउनेवाला, दैनिक दिनचर्यामा निकै आनन्द पाउने र भाग्यमानीको योग परेको होला। विद्या-बुद्धिको स्थानमा बढी बल लगाउनेवाला, सन्तान पक्षमा केही आदरको योग पाउनेवाला, माता-पिता र राज-समाजको स्थानमा केही कष्ट सहेर पनि मानोन्नतिका लागि विशेष प्रयत्न गर्ने होला।

कु० नं० ३३६

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०श.

जुन व्यक्तिको कुम्भ राशिका शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस दीर्घायुको योग परेको र भाग्यमानीको जस्तै जीवन बिताउनेवाला, भाग्यको स्थानमा र उन्नतिमा केही झ्याउलो बारम्बार सहेर पनि सम्पत्ति जोर्न जान्नेवाला, यश प्राप्तिको बाटोमा केही न्यूनताको योग परेको होला। स्वधर्म पालनको स्थानमा आन्तरिक दुर्बलता प्राप्त गर्ने योग परेको, भाग्यको उन्नतिका लागि सत्यको आडमा असत्यद्वारा काम निकाल्न जान्ने योग परेको, उग्र कर्मको पालन गर्ने तथा शत्रु स्थानमा ठूलो प्रभाव राख्नेवाला एवं दाजू-भाई दिदी-बहिनीको स्थानमा केही नीरसताको योग परेको र भाग्योदयका लागि कतै विदेशको योग सम्बन्ध पाउनेवाला, मावली पक्षमा केही न्यूनता पाउने र मिथ्या बोल्ने होला।

कु० नं० ३३७

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ श. ८ १०

जुन व्यक्तिको मीन राशिका शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पितातुल्य केही अन्य व्यक्तिहरूको अलि-अलि सहयोग पनि कुनै प्रकारले पाउनेवाला, व्यापार आदि भाग्योन्नतिको स्थानमा अनेकानेक प्रकारका कर्महरूको साटासाट गरी-गरीकन कुनै विशेष कामको शक्ति पाएर वृद्धि प्राप्त गर्नेवाला, राज-समाजको सम्मान, इज्जत पाउनेवाला, छिमेकीमा भाग्यमानी गनिने खालको होला। मान र उन्नतिको बाटोमा अनेक ठूला-ठूला काम गर्नेवाला, मान्नोन्नतिको बाटोमा परिश्रम झ्याउलो र अनेक थरिका गूढ युक्तिहरू प्रयोग गरेर तथा धार्मिक भावनाको बल लगाएर मान-वृद्धि प्राप्त गर्नेवाला, दैनिक व्यापारमा र अन्य स्थानहरूको सम्बन्धमा वृद्धि उत्पन्न गर्न जान्ने भएको र स्त्री एवं गृहस्थीमा केही वैमनस्यता पाउनेवाला, जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको व्यापार गरेर धन कमाउने प्रभावशाली होला।

कु० नं० ३३८

४ २ ५ ३ १ ६ १२श. ७ ९ ११ ८ १०

जुन व्यक्तिको मेष राशिका शनि लग्नको एघारौं स्थानमा छ भने त्यो मानिस आमदानीको स्थानमा केही न्यूनता र परिश्रमको योग परेको, लाभ स्थानको वृद्धि गर्नका लागि निकै ठूलो, डरलाग्दो युक्तिहरूले बांगा-टिंगा चाल चलेर लाभ प्राप्त गर्नेवाला, आयुस्थानको वृद्धिका लागि र जीवनमा सहायक हुने खालको अनि पहिलो र गम्भीर वस्तुको स्थिर लाभ पाउनेवाला, विद्या र बुद्धिको स्थानमा विशेष शक्तिको योग पाउनेवाला, शरीरमा केही कष्ट भए पनि भाग्यमानीको योग परेको होला। सन्तान पक्षमा केही राम्रो सहायता पाउनेवाला र धर्म स्थानको राम्ररी पालन गर्न नसक्नेवाला एवं धेरै बढी कुरा गरेर प्रतिपक्षीमा प्रभाव पार्ने हरबखत प्रयत्न गर्दै रहनेवाला, जीवनमा हृदयबाट बर्ता उत्साह-उमंग पाउने केही प्रयत्न गर्ने खालको होला।

कु० नं० ३३९

४ २
५ ३ १श.
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको वृष राशिका शनि लग्नबाट बान्हौं स्थानमा छ भने त्यस मानिसको आफ्नू जीवनमा अनेकानेक अशान्ति र कष्ट पाउने योग परेको होला। केही अन्य बाहिरी स्थानहरूबाट भाग्यको वृद्धि भेट्टाउने र धर्मको भित्री भागमा न्यूनता पाउनेवाला, तथा बाहिरी भागमा न्यायको पालन गर्ने र 'म सज्जन हुँ' भन्ने मिथ्या दाबी गर्ने खालको व्यक्ति होला। फेरि त्यही मानिस भाग्यमानीमा गनिनेवाला र स्वार्थको सिद्धिका लागि धर्मको हानि-नोक्सानीको कत्ति पनि वास्ता नगर्ने खालको योग परेको होला। बढी-धन व्यय गर्ने योग र धन प्राप्तिको निम्ति साना-ठूला अनेक प्रयत्न गर्ने खालको तथा शत्रु पक्षमा आफ्नो बलियो प्रभाव पार्नेवाला, धन र कुटुम्बमा कहिले काहीं हानि र क्लेशका साधन पाउनेवाला, बाहिरी सम्बन्धहरूको दृढशक्ति मान्नेवाला, आयुस्थानमा सामान्यतया राम्रो शक्ति पाउनेवाला तथा यश-कीर्तिमा आंशिक न्यूनता पाउने र अशान्त मनको होला।

कु० नं० ३४०

४ २श.
५ ३ १
६ १२
७ ९ ११
८ १०

# मिथुन लग्नान्तर राहुफलम्

जुन व्यक्तिको मिथुन राशिका राहु लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस अग्लो शरीरको, गहीरो कुटनीतिका शक्तिको आफ्नू हृदयमा भण्डार राख्ने भएको, अप्राप्य र दुस्तर वस्तुहरूको खोजीमा लागेर अनेक कष्टद्वारा स्थिरता प्राप्त गर्नेवाला, शरीरमा केही न्यूनता अनुभव गरे पनि आफूभित्र ठूलो स्वाभिमान राख्न जान्नेवाला, आफ्नू मनले बढी नाम कमाउने भए पनि अनधिकार 'म ठूलो' भन्ने विषयमा सफल हुने खालको होला। आफ्नू दिमागी शक्तिको अगाडि अरू सबैलाई सानो, तुच्छ ठान्ने विचार भएको र चाहिने भन्दा बर्ता तथा सीमा भन्दा पर आफ्ना विचारहरूलाई दगुराउने वाला, निकै ठूला-ठूला योजना तयार पार्नेवाला, तथा आध्यात्मिक ज्ञानको शक्ति छ भन्ने दावी गर्ने खालको होला।

कु० नं० ३४१

४ २
५ ३रा. १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानमा अनेक पल्ट हानिको योग परेको र धन-हानिको कारणले गर्दा मनभित्र अनेकानेक वेदनाहरू सहन गर्ने खालको होला। कुटुम्ब स्थानमा ठूला-ठूला क्लेशका योजनाहरू भेट्नेवाला तथा मनोयोगका अनेक ठूला-ठूला कष्टसाध्य उपायहरू द्वारा धनको वृद्धि गर्ने गुप्त योजनाहरू तयार पार्नेवाला, केही अकस्मात् धन पाउने ठूला-साना र मसीना-मोटा विचारहरू प्रयोग गर्न जान्नेवाला, धनको पूर्ति गर्नका लागि कहिले काहीं अर्काको सहायता पनि लिन जान्नेवाला धनको सम्बन्धमा केही व्याज तिर्ने जस्तो जोखिम पनि बोक्नसक्ने खालको होला। धनको कष्ट निवारण गर्नका लागि सदैव चित्तको व्याकुलता सहिरहने र अन्त्यमा कुनै विशेष शक्ति पाउने खालको होला।

कु० नं० ३४२

४रा. २
५ ३ १
६ १२
७ ९ ११
८ १०

जुन व्यक्तिको सिंह राशिका राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस दाजू-भाई दिदी-बहिनीबाट केही हानि र क्लेश पाउनेवाला, पुरुषार्थ बलको भित्र ठूला-ठूला दुर्बलता पाउँदै रहे पनि हिम्मत नहार्ने वाला तथा पुरुषार्थके शक्तिद्वारा अनेकानेक असम्भव काम पनि गर्न अघिसर्नेवाला, दिमाग र बाहुबलद्वारा महान परिश्रम गरिरहने खालको होला। थकाई र हैरानी भएर निराश हुँदा पनि कुनै अज्ञात शक्ति प्राप्त गर्ने पक्का इच्छामा गाडिइरहनेवाला, कुनै योजना शक्तिको केही अनधिकार लाभ पाउनेवाला, सदैव आफ्नू स्वार्थसिद्धिको सिद्धान्तमा अडिइरहनेवाला र साना-ठूला अनेक गुप्त योजनाहरू तयार पार्ने खालको अदम्य साहस हुने खालको होला।

कु० नं० ३४३

४ २ ५रा. ३ १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आमाको सुख सम्बन्धमा केही न्यूनता पाउनेवाला र भूमि-भवन आदिको सम्बन्धमा पनि केही सुखको हानिनै भेट्ने खालको होला। घरेलू सुखका साधनहरूमा पनि केही कमी पाउने एवं सुख प्राप्तिमा वृद्धि गर्नका लागि मस्तिष्कको महान् गहीरो शक्ति प्रयोग गर्न जान्नेवाला र केही गुप्त योजनाहरूको बलले पनि सुखको वृद्धि गर्ने बांगा उपायहरू कठोर परिश्रमद्वारा काम सपार्ने वाला र कहिले काहीं सुखका स्थानमा कुनै गहीरो आघात पाउनेवाला, तथा अन्त्यमा सुखसित सम्बन्धित कुनै विशेष शक्तिलाई प्राप्त गर्ने खालको निकै गम्भीर कूटयुक्ति जान्नेवाला होला।

कु० नं० ३४४

४ २ ५ ३ १ ६रा. १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको तुला राशिक राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू प्रखर बुद्धिद्वारा उत्तम श्रेणीको चातुर्यको कुरा विचार गर्ने र भन्न सक्ने खालको भए पनि बुद्धिको वास्तविक प्रशंसामा कमी पाउने खालको होला। सन्तान पक्षबाट केही हानिहरू र झ्याउलाहरू सहनेवाला, लुकाउने शक्तिका कुरा द्वारा तथा यता-उताका कुराबाट आफ्नू मतलब पूरा गर्न जान्नेवाला तथा भाँग-गाँजा आदि कुनै पनि मादक द्रव्यको सेवन गर्नेवाला र केही विपत्तिहरू भोगिसकेपछि सन्तान पक्षमा केही शक्तिको आभास पाउनेवाला, अनि मस्तिष्क शक्तिको भित्र केही न्यूनता वा दुर्बलता तथा केही बलको सम्मिश्रण भएको योग पाउनेवाला, युक्ति जान्ने बाठो खालको होला।

कु० नं० ३४५

४ २ ५ ३ १ ६ १२ ७रा. ९ ११ ८ १०

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा आफ्नू ठूलो प्रभाव राख्नेवाला, मावली पक्षमा केही हानिको योग परेको होला। रोगादिक अनेक कष्टको वास्ता नगर्नेवाला तथा पाप-दोष सम्बन्धी धर्म-विरोधी भावनाहरूसित पनि नडराउनेवाला, आफ्नू स्वार्थसिद्धिको पूरा-पूरा ध्यान राख्नेवाला तथा विपत्तीहरूलाई सदैव तल न्यूराउने अनेक उपायहरूको संग्रह गरेर राख्नेवाला, शील, सन्तोष र दया आदि उचित कर्तव्य पालन गर्नमा आफूलाई असमर्थ ठान्नेवाला र गुप्त चालहरू द्वारा वा साहस हिम्मतद्वारा ठूला-ठूला महान कार्य गर्न अघिसर्नेवाला र बहादुर खालको होला।

कु० नं० ३४६

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८रा. १०

जुन व्यक्तिको धन राशिका राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट निकै अशान्ति वा हानिको योग पाउनेवाला, दैनिक व्यापारको पक्षमा मस्तिष्कलाई थकित भएको पाउनेवाला, ठूलो परिश्रमी कष्टसाध्य काम गर्न मनपराउने खालको र इन्द्रिय भोगादिको स्थानमा न्यूनता र रिसको योग पाउनेवाला, केही गुप्त र अनुचित रूपमा पनि भोगादिको तृप्ति गर्न पछि नसर्नेवाला, व्यापारको दैनिक प्रणालीभित्र पनि केही गुप्त रूपले वा अपठेरा सतर्कताले पनि काम गर्न रूचाउने तथा केही काममा अल्छी मान्नेवाला र केही संकीर्ण चालले चल्ने खालको योग पाउने र लौकिक प्रणालीमा दुर्बल होला।

कु० नं० ३४७

४ २ ५ ३ १ ६ १२ ७ ९रा. ११ ८ १०

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा केही कष्ट र अत्यास मान्नेवाला, महान् गूढ युक्तिहरूको शक्ति पाउनेवाला, जीवन रक्षासित सम्बन्धित आयुस्थानमा कहिले काहीं सांघातिक र निराशाजनक विपत्ती आइलाग्न सक्तछ, जीवनलाई सहायक हुने केही गम्भीर वस्तुको आंशिक हानिहरू पाइरहेपछि केही दृढता प्राप्त गर्नेवाला, आयुस्थानमा केही बलियो भाव अनुभव गर्ने, कुर्न ठूलो र गहीरो युक्तिहरूको चिन्तन गर्ने खालको, अनि जीवनको दिनचर्यामा केही न्यूनता पाउनेवाला र केही उदरविकारले पीडित रहने खालको होला।

कु० नं० ३४८

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०रा.

जुन व्यक्तिको कुम्भ-राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा केही न्यूनता वा दुर्बलता अनुभव गर्ने खालको

कु० नं० ३४९

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ रा. ८ १०

र भाग्योन्नतिको बाटोमा कहिले कांही भीषण दुर्घटनादिको योग पाउनेवाला, निकै गुप्त चालासित भाग्योन्नतिको साधन भेट्नेवाला, तथा धर्मको पालन गर्नमा केही आलस्य र कमजोरी पाउनेवाला, ईश्वरको विश्वासमा केही कमी देख्नेवाला, कीर्ति र यशमा पनि न्यूनता अनुभव गर्ने खालको होला। आफ्नू स्वार्थसिद्ध गर्नका लागि मौका उत्तम छ कि छैन भन्ने समयको र धर्माधर्मको विचार राख्न नसक्ने खालको होला। म भलादमी छु भन्ने देखाएर त्यसैबाट लाभ कमाउनेवाला, अन्त्यमा भाग्यको बलियो अंश पाउने खालको होला।

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू पिताको स्थानबाट केही हानि र कष्टको योग परेको होला।

कु० नं० ३५०

४ २ ५ ३ १ ६ १२रा. ७ ९ ११ ८ १०

आफ्नू उन्नतिका लागि ठूला-ठूला कष्टसाध्य उपायहरू द्वारा अनेकानेक कर्म गर्नेवाला, अनेक थरिका बांगा उपायहरूले वा गुप्त योजनाहरू द्वारा सम्मान वृद्धि गराउन जान्नेवाला, अनि राज-सम्मानको स्थानबाट केही न्यूनता, कमजोरी र कष्टहरू सहने खालको होला। कहिले काहीं मान-सम्मानको स्थानमा अनेकानेक झ्याउलो र अत्यासको योग पाउनेवाला, व्यापारमा अभिमानपूर्वक काम गर्नेवाला, साहसले आफ्नू स्थिति जोगाइराख्ने र अन्त्यमा सफलता पाउनेवाला होला।

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै आमदानी गर्ने र बढी लाभ कमाउन जान्ने तथा आयको स्थानमा

कु० नं० ३५१

४ २
५ ३ १रा.
६ १२
७ ९ ११
८ १०

अनेकानेक युक्तिहरू प्रयोग गरेर मनले तोकेको भन्दा पनि बढी लाभ पाउने प्रयत्न गर्न नछाड्ने खालको होला। लाभ प्राप्तिको स्थानमा अलि-अलि अनुचित काम र गुप्त रूपले पनि फाइदा लिन जान्ने र लेन-देनको स्थानमा सदैव महान् स्वार्थसिद्धिको पूरा-पूरा विचार राख्नेवाला र कहिले काहीं आमदानीमा केही कमी हुनाले मनमा असन्तोष मान्नेवाला, अनि केही ब्याज झैं सित्तैंको लाभ पनि प्राप्त गर्नेवाला र कहिले काहीं लाभको साटो हानि र बिपत्तिको योग पाउने खालको साहसी व्यक्ति होला।

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बर्ता व्यय हुने कारणहरूले कहिले काहीं कष्ट सहन गर्ने र कहिले

कु० नं० ३५२

४ २रा.
५ ३ १
६ १२
७ ९ ११
८ १०

काहीं खर्चको शक्तिलाई प्राप्त गर्नको निम्ति अनेक झ्याउलाहरूमा गाडिने खालको होला। खर्च गर्न धन प्राप्तिको बाटोमा ठूला-ठूला विचित्र युक्तिहरूले काम बनाउन जान्नेवाला, अनि केही विपरीत चालले पनि खर्च गर्ने शक्तिको योग पाउनेवाला र खर्च गर्ने स्थानमा कहिले काहीं बढी र कहिले काहीं न्यूनताको योग परेको तथा अन्यान्य स्थानहरूको सम्पर्कमा केही बाधाहरू पाउनेवाला र गुप्त युक्तिहरूले वा केही अनधिकार रीतिले काम गर्नेवाला अनि धेरै परका कुरा विचार गर्ने खालको बाठो होला।

# मिथुन लग्नान्तर केतुफलम्

जुन व्यक्तिको मिथुन राशिका केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस देह स्थानमा दुर्बलता वा चिन्ताहरूको योग पाउनेवाला र

कु० नं० ३५३

| | | | |
|---|---|---|---|
| ४ | ३के. | २ | १ |
| ५ | ६ | १२ | ११ |
| ७ | ९ | ८ | १० |

शरीरको कद र रंगमा हलूको भाव परेको तथा सौन्दर्यमा न्यूनता भएको एवं शरीरमा कहिले काहीं सांघातिक चोट वा सांघातिक खतराको योजना पाउने भएको र शरीरमा 'म निर्धो छु' भन्ने भावनाले ग्रसित भएको तथा अत्यन्त गुप्त धैर्य शक्ति भएको र अत्यन्त गुप्त रीति वा युक्तिले काम गर्नेवाला, बढी संकीर्ण योजनाहरू विचार्ने भएको, मान-प्रतिष्ठा आदिमा केही हानि वा न्यूनताको योग पाउने र गुप्त हठी वा जिद्दी होला।

जुन व्यक्तिको कर्क राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको कोष स्थानमा ठूला-ठूला हानिहरू वा विफलताहरू

कु० नं० ३५४

| | | | |
|---|---|---|---|
| ४के. | ३ | २ | १ |
| ५ | ६ | १२ | ११ |
| ७ | ९ | ८ | १० |

भेट्टाउने खालको होला। कुटुम्ब स्थानमा निकै दुर्बलता र क्लेशको योग पाउनेवाला र धन स्थानको वृद्धि गर्नका लागि तन-मनको महान् शक्तिको भयंकर प्रयोग गर्नेवाला, धन-जनको वृद्धि गर्नका लागि महान् धैर्य र साहसले काम गर्नेवाला, धनको वृद्धिको बाटोमा अन्धविश्वासको साथै आफ्नू संकल्पमा अचल रहेर गुप्त युक्तिहरूले काम सपार्न खोज्ने तथा धनको कठिन र अनधिकार उन्नतिको मार्गमा सफलता पाउने हठी स्वभावको होला।

जुन व्यक्तिको सिंह राशिका केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस दाजू-भाई दिदी-बहिनीको स्थानमा अनेक कष्ट र अपठेरा इयाउलाहरू पाउने खालको होला। पुरुषार्थ बलको शक्तिमा आंशिक हानि र दुर्बलताको पनि कहिले काहीं हानि नै पाउला, महान र गम्भीर मानसिक र दैहिक परिश्रम धनको लागि गर्नेवाला, महान हिम्मत र साहसका साथै उन्नतिको बाटोमा अग्रसर हुनेवाला, निकै धैर्यको गुप्त शक्तिले ठूला-ठूला काम गर्नेवाला, उन्नति र कार्यसिद्धिका लागि अपरिमित शक्तिको प्रयोग गर्न जान्नेवाला, शौर्य र साहसको स्थानमा निकै कट्टरता र तत्परताद्वारा काम लिने र बढी दौड-धूप गर्ने खालको होला।

कु० नं० ३५५

४ २ ५के. ३ १ ६ १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृ-स्थानबाट केही हानि अनुभव गर्नेवाला र भूमि-भवनको सम्बन्धमा केही बाधा र हानिको योग परेको भए पनि निवास स्थानमा आन्तरिक दृढता वा उत्तमताको स्थायी योग प्राप्त गर्नेवाला, सुखका साधनहरूमा धेरै-धेरै विघ्न-बाधा र कष्टहरू सहिसकेपछि कुनै स्थिर शक्ति प्राप्त गर्नेवाला र घरेलू वातावरण भित्र कुनै खास किसिमको आंशिक कमी अनुभव गर्नेवाला र सुख स्थानको वृद्धि गर्नका लागि जुन वेला पनि निकै दृढता र आन्तरिक तत्परताले काम लिन जान्ने खालको होला।

कु० नं० ३५६

४ २ ५ ३ १ ६के. १२ ७ ९ ११ ८ १०

जुन व्यक्तिको तुलाराशिका केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या ग्रहण गर्नमा अनेक थरिका विघ्नबाधा सहनेवाला, मस्तिष्कमा केही कष्ट वा अशान्ति अनुभव गर्नेवाला, बोल-चाल वा कुरा-कानी गर्दा राम्ररी आफ्नो मन्तव्य बुझाउन नसक्ने खालको, बुद्धि विद्याको भित्री तहमा दह्रो पारेर राख्ने खालको होला। विद्या र गुणहरू ग्रहण गर्दा महान् परिश्रम र दृढताले काम लिनेवाला, दिमाग भित्र अन्धविश्वासको धारणा शक्तिको विचार राख्नेवाला, केही कटु भाषण गर्नेवाला, तथा स्वार्थसिद्धिले युक्त, शीलरहित दुर्गुणहरूले भरिएको होला।

कु० नं० ३५७

४ २ ५ ३ १ ६ १२ ७के. ९ ११ ८ १०

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट षष्ठस्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा निकै ठूलो प्रभाव राख्नेवाला र मावली पक्षबाट केही हानि भेट्टाउने खालको होला। अनेक झ्याउला र कष्टहरूमा विजय प्राप्त गर्नेवाला, महान् आन्तरिक दृढता र अपरिमित शक्तिद्वारा आफ्नू काम सफल पार्नेवाला, गुप्त धैर्यको पराकाष्ठा शक्ति प्राप्त गर्नेवाला, आफ्नू परिश्रम र साहसको विशाल शक्तिको प्रयोग गरेर विजयरूपी शक्ति प्राप्त गर्न जान्नेवाला र शीलको उल्लंघन गर्नेवाला, आफ्नू स्वार्थको पूर्ति गर्नमा निकै तत्परताले अघिसर्नेवाला, उन्नतिको बाटोमा सदैव निर्भयताले काम लिन जान्ने र अत्यन्त बाठो खालको होला।

कु० नं० ३५८

४ २ ५ ३ १ ६ १२ ७ ९ ११ ८के. १०

जुन व्यक्तिको धन राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा केही क्रान्तिको योग परेको र स्त्रीको मनभित्र कुर्ने

कु० नं० ३५९

४ २
५ ३ १
६ १२
७ ९के. ११
८ १०

विशेष शक्तिको योग पाउनेवाला, भोग-विलासको केही बढी योग परेको होला। दैनिक व्यापारक स्थानमा महान् परिश्रम र शक्तिले ठूला-ठूला काम गर्न जान्नेवाला, आन्तरिक दृढ भावनाहरूको सहयोग र बलले व्यापारमा असाधारण उन्नतिको मार्गमा अग्रसर हुनेवाला, गृहस्थीको लौकिक उन्नतिका लागि महान् प्रयत्न र गुप्त शक्तिको प्रयोग गर्नेवाला तथा गृहस्थीको व्यवस्थामा आंशिक शक्तिको कमी पाउने भए पनि साहसी होला।

जुन व्यक्तिक मकर राशिका केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस जीवनको दैनिक दिनचर्यामा केही अशान्ति र बाधा सहन

कु० नं० ३६०

४ २
५ ३ १
६ १२
७ ९ ११
८ १०के.

सक्नेवाला, जीवनलाई सहायक हुने जस्ता केही प्रथम र गम्भीर वस्तुको लाभ प्राप्त गर्नमा ठूला-ठूला अपठेरा र कष्टहरू एवं व्यर्थको परिश्रम सहन गर्नेवाला, तथा जीवन निर्वाह गर्ने शक्तिलाई प्राप्त गर्नको निम्ति वा बलियो तुल्याउनको लागि आन्तरिक धैर्यको महान् शक्तिद्वारा काम सपार्न जान्ने खालको होला। केही उदरविकार-ले पीडित रहनेवाला एवं गुप्त रूपले कठिन पुरुषार्थ र परिश्रम गर्नमा निकै ठूलो पुरुषार्थ र तत्परताले काम लिन जान्ने गुप्त शक्तिवान् होला।

जुन व्यक्तिको कुम्भराशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानि भाग्यस्थानबाट केही दुःख-कष्टहरू सहनेवाला तथा भाग्यको उन्नति गर्नका लागि स्थिर रूपले कठोर परिश्रम गर्न सक्नेवाला, धर्मको स्थानमा केही हानिको योग परेको होला। यश प्राप्तिको सम्बन्धमा केही न्यूनता पाउने खालको र ईश्वरको विश्वासमा केही दुर्बलता पाउनेवाला तथा भाग्यको सम्बन्धमा उन्नति गर्नका लागि कटिबद्ध तत्परताको गुप्त शक्तिले काम लिएर अन्त्यमा कुनै बलियो वा दह्रो युक्ति फेलापार्नेवाला र असफलताहरूको समय ठूलो धैर्यले बिताउन जान्ने निकै बाठो खालको होला।

कु० नं० ३६१

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानबाट आंशिक हानि र केही दुःख-कष्टको योग परेको र पदोन्नतिको बाटोमा ठूला-ठूला अपठेरा र झ्याउलाहरू सहन गर्नेवाला तथा राज-समाजका कामहरूमा सम्मान प्राप्त गर्नका लागि धेरै ठूलो परिश्रम गर्नसक्ने र व्यापारको उन्नतिका लागि धेरै बर्ता मिहिनेत वा गुप्त धैर्यको महान् शक्तिको प्रयोग गर्नेवाला, कहिले काहीं सम्मान र इज्जतको स्थानमा घोर संकट लाइलागेको प्रत्यक्ष देख्न सक्नेवाला, तर धेरै थरिका निराशाहरूको पछि पनि कुनै राम्रो बाटोमा दृढतापूर्वक अडिएर काम गर्दैरहने खालको र अन्त्यमा कुनै बलियो वा दह्रो शक्ति फेला पार्ने खालको साहसी होला।

कु० नं० ३६२

जुन व्यक्तिको मेष राशिका केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आमदानीको स्थानमा निकै बलियो शक्ति प्राप्त गर्नेवाला, लाभ

कु० नं० ३६३

४ २ ५ ३ १के. ६ १२ ७ ९ ११ ८ १०

स्थानमा वृद्धिका लागि महान् शक्तिको प्रयोग गर्न जान्ने भएको, केही अनधिकार लाभ पनि प्राप्त गर्नेवाला एवं लाभ प्राप्तिको स्थानमा अन्ध-विश्वासको धारणा शक्तिलाई लिएर महान् परिश्रम र कठोर दौड-धूप गर्नेवाला, महान् धैर्यका साथ लाभको स्थानमा तत्परताले काम गर्नेवाला, एवं लाभको विषयमा ठूलो भन्दा पनि धेरै ठूलो विपत्ति पनि सहन सक्ने खालको होला। आफ्नू वास्तविक हकभन्दा बढी पाउने प्रयत्न सदैव गरिरहने वाला र गुप्त शक्तिले सफल हुने खालको होला।

जुन व्यक्तिको वृष राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने र खर्चको शक्ति प्राप्त गर्नका लागि महान् परिश्रम

कु० नं० ३६४

४ २के. ५ ३ १ ६ १२ ७ ९ ११ ८ १०

गर्ने तथा चातुर्यको बाटोबाट आन्तरिक धैर्य धारण शक्तिद्वारा खर्चका योजनाहरूको संचालन गर्न राम्रो जान्ने र अन्य स्थानबाट सम्बन्धित सम्पर्क बाधाहरू र दुःख-कष्टको योग परेको होला। बाहिरी स्थानको शक्ति पाउनेवाला, अन्यान्य विश्वासका साथै चातुर्यहरूले युक्त बढी कठोर प्रयत्न वा युक्ति गर्न जान्नेवाला र बाहिरी स्थानहरूबाट खर्चको सम्बन्धमा निस्फिक्रि रहनेवाला, त्यो निस्फिक्रीको स्थितिमा कहिले काहीं ठूलो संकट पनि सहन सक्ने र अन्त्यमा राम्रो दह्रो बाटो फेला पार्ने खालको होला।

# कर्क लग्न हुनेहरूको-भविष्यका तारीखहरू

सन् १९९७ को वर्षमा-गुरू सातौं स्थानमा नीच स्थितिमा चल्ने छन् र राहु केतु चौथो र दसौं स्थानमा चल्नेछन्। यसै निम्ति यो वर्ष गृहस्थी र व्यापारको विषयमा अनेक झ्याउला आइलाग्लान्। २७/१/९७ देखि ३१/६/९७ सम्म भाग्योन्नतिमा प्रायः सफलता प्राप्त हुनेछन्। त्यसपछि व्ययमा वृद्धि भइरहने छ र समय विपरीत चल्न सक्तछ। ता० १९/७/९७ देखि फेरि भाग्य सप्रदै जानेछ। ता० ३/९/९७ देखि समयले उन्नतिको बाटो समाउने छ र ता० १५/१२/९७ सम्म प्रायशः सफलता र शक्ति प्राप्त होला।

कु० नं० ३६५

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

सन् १९९८ को वर्षमा- ता० १/१/९८ देखि समय अलि-अलि विपरीत वा कष्टदायक रहने छ। ता० २१/१/९८ देखि गृहस्थी र व्यापारमा सफलता प्राप्त हुनन्। ता० ९/२/९८ देखि केही झ्याउलाहरू र कष्ट आइलाग्नन्। ता० १६/३/९८ देखि समय सौभाग्य र सफलतातिर लम्कन थाल्नेछ। ता० १७/७/९८ बाट समय उत्तम चल्न थाल्नेछ। ता० २८/९/९८ देखि १५/११/९८ सम्ममा घर-गृहस्थी र भाग्यको विशेष सफलता मिल्ला। पछि ता० १३/१२/९८ सम्ममा भाग्य विपरीत रहने छ।

कु० नं० ३६६

५ ३ ६ ४ २ ७ ९ ८ १० १२ ९ ११

# कर्क लग्नका सुनौला तारीखहरू

सन् १९९९ को वर्षमा- ता० १/१/९९ देखि समय सामान्य रहने छ। ता० १/३/९९ बाट केही आंशिक सुधार रहला। ता०१८/४/९९ बाट भने भाग्योन्नति आरम्भ हुनेछ। ता० ६/७/९९ बाट फेरि समय बिग्रन सक्छ र व्यय भार बढ्ला। ता० २१/८/९९ बाट सम्मान, प्रभाव र भाग्यको सफलता प्रारम्भ होला। ता० ६/१०/९९ बाट बुद्धिद्वारा लाभको सफलता प्राप्त होला। ता० १९/१२/९९ देखि केही बढी परिश्रम र कष्टमा वृद्धि होला।

कु० नं० ३६७

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

सन् २००० को वर्षमा ता० २/१/२००० देखि साधारण चल्नेछ। ता० ९/२/२००० बाट भाग्य सप्रदै जानेछ। ता० ३०/३/२००० देखि भाग्योदयको बाटो खुल्नेछ। ता० १३/५/२००० बाट भाग्यमा न्यूनता आउन सक्दछ। ता० ५/७/२००० बाट भाग्यको बलले लाभमा सफलता मिल्ला। ता० १५/८/२००० बाट फेरि समय विपरीत हुन सक्दछ। ता० २/९/२००० देखि समय राम्रो हुन थाल्नेछ भाग्यमा जागृति आउला। ता० १३/१२/२००० सम्म समय उत्तम चल्नेछ। त्यसपछि केही न्यूनता रहला। यस वर्षमा धनको न्यूनता पनि रहला।

कु० नं० ३६८

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११